# भाग-१
# प्रारम्भिक
# समितिको गठन तथा कार्य प्रक्रिया

१. श्री ५ महाराजाधिराज सरकारबाट २०५८ साल जेठ २२ गते बेलुका बक्स भएको शाही घोषणाः

श्री ५ महाराजाधिराज ज्ञानेन्द्र वीरविक्रम शाहदेव सरकारबाट २०५८ जेठ १९ गते शुक्रबार राति नारायणहिटी राजदरवारमा घटेको दुःखद घटना सम्बन्धमा तथ्य पत्ता लगाउन समिति गठन गर्ने सम्बन्धमा २०५८ जेठ २२ गते भएको शाही घोषणाको पूर्ण विवरण यसप्रकार छः-

" प्यारा देशवासीहरू,

विक्रम सम्वत २०५८ साल जेठ १९ गते शुक्रबार राति नारायणहिटी राजदरवारमा पारिवारिक जमघटमा भएको अप्रत्यासित घटनामा श्री ५ महाराजाधिराज दीपेन्द्र वीरविक्रम शाहदेव गम्भीररूपमा अशक्त होइबक्सी श्री वीरेन्द्र सैनिक अस्पताल छाउनीमा उपचारार्थ रहिबक्सेकोमा चिकित्सकहरूबाट अथक प्रयत्न हुँदाहुँदै आज विक्रम सम्वत २०५८ साल जेठ २२ गते सोमबार बिहान ३ बजेर ४५ मिनेट जाँदा मौसुफ हामी सबैलाई छोडेर स्वर्गारोहण होइबक्सेको कुरा देशवासीलाई सुनाउनुपर्दा हामीलाई अत्यन्त दुःख लागेको छ । नश्वर शरीर लिएर जन्मेपछि देह त्याग गर्नुपर्ने यो प्राकृतिक नियम ध्रुवसत्य भए पनि युवा श्री ५ महाराजाधिराज दीपेन्द्र वीरविक्रम शाहदेव समय नपुग्दै स्वर्गारोहण होइबक्सेला भन्ने हामीले नचिताएको कुरा हामीमाथि आइपर्‍यो ।

यसको केही दिनपूर्व मात्र हामीबाट प्रजावत्सल विकासप्रेमी श्रद्धेय दाज्यू श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव तथा देशका सम्पूर्ण नारीहरूको हित चाहिबक्सने समाजकल्याणमा समर्पित ममतामयी सहृदयी भाउजू श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाहको वियोगसहनुपर्‍यो ।

देशमा उत्पन्न भएका यी असह्य शोकको घडीमा हामी सबै नेपालीहरू मर्माहत भएका छौं । हाम्रो मुलुकमाथि एकपछि अर्को गरी आइपरेका दुःखदायी परिस्थितिहरूलाई हामी सबै नेपालीले सहँदै धैर्यपूर्वक आ-आफ्नो कर्तव्य र दायित्वलाई बहन गर्नुपर्ने बेला आएको छ ।

नेपालको इतिहासमा आइपरेको यस अकल्पनीय अवस्थाको अनुचित फाइदा लिई हाम्रो राष्ट्रिय एकता, स्वतन्त्रता र राष्ट्रियतालाई समेत कमजोर पार्ने प्रयास हुनसक्ने भएकोले हामी सबै नेपाली सचेत हुँदै एकजुट हुनुपरेको छ । कस्तै विपत्ति आइपर्दा पनि नहडबडाई सामना गर्न एक हुने हामी नेपालीको परम्परा कायमै राख्नु आजको आवश्यकता भएको छ ।

लोकसम्मति र जनआकांक्षाको कदर गरी राज्यसञ्चालन गर्ने शाहवंशजको परम्परा रहिआएको छ । संवैधानिक राजतन्त्र र बहुदलीय प्रजातन्त्रको निष्ठापूर्ण अभ्यासद्वारा नेपाली जनतालाई समुन्नत भविष्यतिर उन्मुख गराइबक्सने श्रद्धेय दाज्यू स्वर्गवासी श्री ५ महाराजाधिराज वीरेन्द्र वीरविक्रम शाहको सदिच्छा हामी सबैका लागि सधैंका लागि प्ररणादायी रहनेछ । नेपालको राष्ट्रिय हितमा मौसुफबाट दुवै छिमेकी मुलुकहरूसंग सुदृढ तुल्याइबक्सेको घनिष्ट सम्बन्ध तथा विश्व समुदायमा हुर्काइबक्सेको नेपालको सम्मानपूर्ण छविलाई पनि हामी सबैले सधैं अक्षुण राख्नुपर्दछ । हाम्रो यस प्रतिवद्धतालाई मूर्तरूप दिन सबैबाट सहयोग मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं ।

श्री ५ महाराजाधिराजको रूपमा हाम्रो काँधमाथि आइपरेको अभिभारा सम्हाल्दै आज यसै घोषणाद्वारा हाम्रा महारानी कोमल राज्यलक्ष्मी देवी शाहलाई श्री ५ बडामहारानी घोषित गरिबक्सेका छौं ।

हामीबाट आज बिहान देशवासीका नाममा बक्सेको सन्देशमा हुकुम बक्सेबमोजिम राजदरवारमा घटेको दुःखद घटनाको यथार्थ विवरण जनसमक्ष ल्याउने प्रक्रियास्वरूप प्रधान न्यायाधीश केशवप्रसाद उपाध्यायको अध्यक्षतामा एक उच्चस्तरीय समिति गठन गरिबक्सेका छौं । उक्त समितिमा सभामुख तारानाथ रानाभाट तथा प्रतिनिधि सभामा विपक्षीदलका नेता माधवकुमार नेपाललाई सदस्य तोकिबक्सेका छौं । यस समितिलाई तीन दिनभित्र प्रतिवेदन जाहेर गर्न निर्देशन पनि बक्सेका छौं । समितिले प्रतिवेदन जाहेर गरेपछि सत्यतथ्य देशवासीलाई जानकारी गराउने नै छौं ।

स्वर्गवासी श्री ५ महाराजाधिराज दीपेन्द्र वीरविक्रम शाहको दिवंगत आत्माको चिरशान्तिका लागि श्री परमेश्वरसंग प्रार्थना गरौं ।

श्री पशुपतिनाथले हामी सबैको कल्याण गरून् ।

जय नेपाल ! ”

२. श्री ५ महाराजाधिराज सरकारबाट समितिका अध्यक्ष एवम् सदस्यलाई दर्शनभेट बक्सः

श्री ५ महाराजाधिराज सरकारबाट सम्माननीय प्रधानमन्त्री समेतको समुपस्थितिमा समितिका अध्यक्ष प्रधानन्यायाधीश केशव प्रसाद उपाध्याय एवम् समितिका सदस्य, सभामुख तारानाथ रानाभाटलाई २०५८ जेठ २४ गते नारायणहिटी राजदरवारमा दर्शनभेट बक्स भएको थियो । सो अवसरमा समितिका अध्यक्ष एवम् सदस्यबाट समितिको कार्यक्षेत्र र अधिकारहरू समेतका विषयमा मौसुफ सरकार समक्ष व्यहोरा जाहेर गरियो । श्री ५ महाराजाधिराज सरकारबाट समितिको कार्य सम्पन्न गर्न मौसुफ सरकारबाट पूर्ण सहयोग प्राप्त हुने आश्वासन बक्स भएको थियो ।

३. समितिको कार्यक्षेत्र र अधिकार सम्बन्धी विज्ञप्तिः

श्री ५ महाराजाधिराज सरकारको प्रमुख सचिवालय राजदरवारबाट समितिलाई कार्यक्षेत्र र अधिकारहरू तोकिएको र समितिका सदस्य श्री माधव कुमार नेपालको राजिनामा स्वीकृत भएको सम्बन्धमा २०५८ जेठ २४ गते जारी भएको विज्ञप्तिको पूर्ण विवरण यसप्रकार छः-

“श्री ५ महाराजाधिराजबाट २०५८ साल जेठ २२ गते देशवासीका नाममा बक्सेको शाही घोषणाबाट २०५८ साल जेठ १९ गते राति नारायणहिटी राजदरवारमा घटेको दुःखद घटनाको यथार्थ विवरण जनसमक्ष ल्याउन सर्वोच्च अदालतका प्रधान न्यायाधीश केशवप्रसाद उपाध्यायको अध्यक्षतामा गठित उच्चस्तरीय समितिलाई देहाय बमोजिमका कार्यक्षेत्र र अधिकारहरू तोकिबक्सेको छ :-

(१) श्री ५ महाराजाधिराज समक्ष राजदरवारमा मिति २०५८ ।२ ।१९ गतेको घटनाको यथार्थ विवरणसहितको प्रतिवेदन जाहेर गर्ने ।

(२) समितिलाई देहायबमोजिमको अधिकार हुने :

(क) घटनास्थलको अवलोकन गर्ने र घटनास्थलको तस्बिर सहितको विवरण संकलन गर्ने ।
(ख) घटनास्थलमा जमघटका लागि उपस्थित पारिवारिक सदस्यहरू तथा अन्य व्यक्तिहरू, राजदरवारको सुरक्षा एवम् सेवामा खटिएका व्यक्तिहरू, उपचारमा संलग्न रहेका चिकित्सक एवम् परिचारिकाहरू तथा समितिले आवश्यक देखेका अन्य व्यक्तिहरूबाट जानकारी लिन सक्ने ।
(ग) सो घटनासंग सम्बन्धित हतियार, गोली लगायतका अन्य चिज बस्तुको संकलन र जाँच गर्न सक्ने एवम् घटनाका सम्बन्धमा अस्पतालबाट भएको जाँच परीक्षणको विवरण प्राप्त गर्नसक्ने ।
(घ) घटनाको सम्बन्धमा विशेषज्ञहरूको आवश्यक सहयोग लिन सक्ने ।
(ङ) समितिले आफ्नो कार्य सम्पादन गर्न आवश्यक व्यक्तिहरूको सहयोग लिन सक्ने ।

(३) समितिको कार्यावधि कार्य प्रारम्भ गरेको मितिले ३ दिन हुने ।

(४) समितिको कार्यालय अध्यक्षले तोकेको स्थानमा रहने ।

(५) समितिले आफ्नो अन्य कार्यविधि आफैं तोक्नसक्ने ।

साथै मौसूफका हजूरमा उक्त समितिका सदस्य प्रतिनिधि सभामा विपक्षी दलका नेता माधवकुमार नेपालले “उक्त समितिमा रहेर काम गर्ने सम्बन्धमा २०५८ साल जेठ २३ गते बसेको नेकपा (एमाले) स्थायी कमिटीको बैठकले मेरो हकमा उक्त समितिमा रहन नसकिने निर्णय गरेकाले सोही बमोजिम सो समितिबाट राजीनामा जाहेर गरेको छु । उक्त घटनाको विधिवत् रूपमा हुने छानवीन प्रक्रियामा म र हाम्रो पार्टीको पूर्ण सहयोग रहने व्यहोरा विन्ति गर्न चाहन्छु” भनी समितिका अध्यक्ष मार्फत् चढाउनु भएको राजीनामा स्वीकृत गरिबक्सेको छ ।”

४. समितिको कार्यालय स्थापनाः

श्री ५ महाराजाधिराज सरकारका प्रमुख सचिवालय राजदरवारबाट २०५८ जेठ २४ गते प्रकाशित विज्ञप्ति बमोजिम समितिको कार्यालय समितिका अध्यक्षले तोकेको स्थान संसद परिसर, संसद सचिवालय भवनमा राखी मिति २०५८।२।२६ देखि कार्य सञ्चालन गरिएको थियो ।

५. कार्य प्रणाली:

श्री ५ महाराजाधिराज सरकारबाट २०५८ जेठ २२ गते देशवासीका नाममा बक्स भएको शाही घोषणा तथा मौसुफ सरकारका प्रमुख सचिवालय राजदरवारको २०५८ जेठ २४ गतेको विज्ञप्तिद्वारा तोकिएको कार्यक्षेत्र र अधिकारको परिधिभित्र रही नारायणहिटी राजदरवारमा २०५८ जेठ १९ गते घटित घटनाको यथार्थ विवरण सम्बन्धी सूचना एवम् तथ्याङ्क संकलन गरिएको छ। समितिले आफ्नो अन्य कार्यविधि आफै तोक्न सक्ने भनी मौसुफ सरकारको प्रमुख सचिवालयबाट २०५८ जेठ २४ मा प्रकाशित विज्ञप्तिमा जनाइए अनुसार २०५८ जेठ २५ मा बसेको समितिको बैठकले गरेको निर्णय अनुसारको कार्य प्रणाली अख्तियार गरिएको छ। घटनाको यथार्थ विवरण संकलन गर्ने सन्दर्भमा मुख्यतः देहाय बमोजिमको कार्यपद्धति अपनाइएको छः-

(क) घटनाबाट पिडित एवम् घटनास्थलमा उपस्थित राजपरिवारका सदस्यहरू, शाही नातेदारहरू, सुरक्षाकर्मीहरू, भान्से, परिचारिकाहरू, राजप्रासाद सेवाका पदाधिकारीहरू, उद्धार कार्यमा संलग्न व्यक्तिहरू, उपचार कार्यमा संलग्न चिकित्सकहरू एवम् परिचारिकाहरू समेतबाट प्राप्त जानकारी।

(ख) श्री ५ महाराजाधिराज सरकारका प्रमुख सचिवालय तथा श्री वीरेन्द्र सैनिक अस्पताल समेतबाट सूचना, तथ्याङ्क एवम् स्वास्थोपचार सम्बन्धी कागजातको संकलन।

(ग) २०५८ जेठ १९ गतेको घटनास्थलमा फेला परेका बन्दुक, गोली, रगत, हस्तरेखा आदिको संकलन।

(घ) बन्दुक, गोली, रगत, हस्तरेखा आदिको सम्बन्धित विशेषज्ञहरूबाट वैज्ञानिक एवम् रसायनिक परीक्षण।

(ङ) बन्दुक, गोली, रगत, हस्तरेखा सम्बन्धमा विशेषज्ञले दिएको राय तथा औषधोपचार सम्बन्धी संकलित कागजातमा उल्लेख भएका प्राविधिक विषयका सम्बन्धमा सम्बन्धित विषयको विशेषज्ञहरूसंग छलफल।

६. समितिको कार्यावधि थप:

उच्चस्तरीय समितिले २०५८ जेठ २६ गतेदेखि आफ्नो कार्य प्रारम्भ गरेकोमा घटनासंग सम्बन्धित तथ्यहरुको संकलन कार्य प्रायः पूरा भएको र केही भौतिक चीजवस्तुको प्रयोगशालामा परीक्षण गराई प्रतिवेदन तयार गर्ने कार्य सम्पन्न गर्न थप समय लाग्ने भएकोले श्री ५ महाराजाधिराज सरकार समक्ष समितिले आफ्नो प्रतिवेदन जाहेर गर्न २०५८ जेठ ३२ गतेसम्म चार दिन थप समय बक्स हुन श्री ५ समक्ष जाहेर गरेकोमा मौसूफबाट यस समितिको कार्यावधि २०५८ जेठ ३२ गते बिहिबारसम्म थप गरिबक्सेको थियो।

# भाग-२
# घटनासंग सम्बन्धित तथ्य एवम् तथ्याङ्कहरुको प्रस्तुती

## १. घटनास्थलको भौतिक स्थिति एवम् संकलन गरिएका भौतिक वस्तुहरुको विवरण प्रस्तुतिकरण

### (क) घटनास्थलको भौतिक अवस्थाको विवरण

अनुसूचीमा उल्लेखित समितिका अध्यक्ष तथा सदस्य लगायत समितिमा कार्यरत विशेषज्ञ तथा कर्मचारीहरुबाट भएको घटनास्थलको निरीक्षणको फासलालाई अनुसूचीमा स्केचमा देखाए बमोजिम पाइएको छ। घटनास्थल (जसलाई त्रिभुवन सदन भनिन्छ) को मुख्य प्रवेशद्वारबाट भित्र छिर्नासाथ प्रवेशद्वारको दायाँपट्टि ए.डि.सी.को अफिस र बायाँपट्टि श्री ५ युवराजाधिराजको अफिस रहेको छ। सिधा प्रवेश गर्दैजाँदा पोखरी र पोखरीको दायाँ र बायाँ दुवैतर्फबाट २ फिटको बाटो गएको छ। बायाँपट्टिको बाटोबाट सिधा जाँदाखेरी बायाँपटि प्रवेशद्वारा D1 ए.डि.सी.को अफिसबाट ४३ फिटमा पर्दछ। यसको ठीक अगाडीपट्टि बगैंचा रहेको छ। दायाँपट्टिको २ फिटे बाटो पनि सोही बगैंचामा आएर मिल्दछ। बगैंचाको पूर्वपट्टि सानो विश्रामकक्ष रहेको छ। D1 पार गरेर सिधा गएपछि एउटा फलामे ग्रीलको गेट रहेको छ जुन हमेसा बन्द रहन्छ। ए.डि.सी.को अफिसबाट D2द्वार ८५ फिटमा पर्दछ। D2 प्रवेश गर्नासाथ दायाँपट्टि ठूलो बैठक कोठा र त्यसको अगाडि पुरुष शौचालय रहेको छ। यसको ठीक बायाँपट्टि थ्रीसिटर सोफा र टेबुल अनि D3 द्वार पर्दछ। ए.डि.सी.को अफिसबाट D3 द्वार ११५ फिटमा पर्दछ। D3 को पूर्वपट्टि २ फूटे बाटो बगैंचा हुँदै बायाँ मोडिएर सिधा गई अनि फेरी दायाँ मोडिएपछि श्री ५ युवराजाधिराजको निवासको मुख्य द्वार D4 आउँछ जसको दूरी ए.डि.सी.को अफिसबाट २१६ फिटमा पर्दछ। D3 द्वारको बायाँपट्टि डाइनिङ रुम र त्यसको ठीक अगाडिपट्टि खुल्ला बैठक कोठा हुँदै उत्तरतर्फ भान्छा कोठा र खाना ल्याउने बाटो पर्दछ। ए.डि.सी.को अफिसबाट कलभर्ट १९७ फिटमा पर्दछ। यसको दायाँ बायाँ सानो पोखरी रहेको छ। कलभर्टको दायाँ पूर्व-दक्षिणपट्टि खुल्ला सानो विश्रामकक्ष रहेको छ। प्रवेशद्वार D4 पार गरेर दायाँ मोडिएपछि उत्तरतिर फर्केको भऱ्याङ्ग रहेको छ, जसबाट सिधा माथिल्लो तलामा पुगिन्छ। भऱ्याङ्गको ठीक अगाडि पूर्व दायाँपट्टि एक कोठा रहेको छ। भऱ्याङ्गको सिधा माथिल्लो तलामा प्रवेशद्वार D5 पर्दछ जसको दूरी ए.डि.सी.को अफिसबाट २६० फिटमा पर्दछ। भऱ्याङ्गको माथिल्लो तलाको दायाँ पूर्वपट्टि लामो प्यासेज गएको छ जसमा श्री ५ युवराजाधिराज सरकारको खोपी रहेको छ। उक्त घटनास्थलमा प्राप्त भएका चिजवस्तुहरुको विवरण तल उल्लेख गरिएको छ।

**(ख) घटनास्थलबाट संकलन गरिएका भौतिक चिजवस्तुहरु**

मिति २०५८।२।२७ मा संकलित:

१. स्व. श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवीशाहको भनिएको दाँत र बंगाराको टुक्राहरु त्रिभुवन सदनको मेन मऱ्याङ्गबाट प्राप्त भएको ।
२. स्व. श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाहको भनिएको भऱ्याङमा रहेको रगत ।
३. स्व. श्री ५ महाराजाधिराज दीपेन्द्र सरकारको शरीर रहेको भनिएको पोखरीको बीच बाटोबाट उठाइएको रगतको दाग जस्तो देखिने टाटा ।
४. बिलियर्ड बैठकमा बोर्डबाट उत्तर-पूर्व भूइमा रहेको डा० राजीव शाहीको भनिएको चेक कोट थान-१ ।
५. विलियर्ड बैठकमा बिलियर्ड बोर्डको उत्तर-पूर्वपट्टी नजिक भूइमा रहेको डा० राजीव शाहीको भनिएको चेक कोट सँगै रहेको श्री ५ महाराजाधिराज वीरेन्द्र वीरविक्रम शाहदेवको भनिएको टोपी थान १ र चश्मा थान-१ ।
६. बिलियर्ड बैठकमा बिलियर्ड बोर्डको नजिक उत्तरपट्टी म्याटमाथि रहेको रगत लागेको धीरेन्द्र शाहको भनिएको टोपी थान १ र चश्मा थान-१ ।
७. बिलियर्ड बैठकमा विलियर्ड बोर्डको नजिक पूर्वपट्टी भूइमा म्याटमा रहेको कुमार गोरखशम्शेरको भनिएको कालो कोट थान एक र टोपी थान-१ ।
८. हाल बडामहारानी श्री ५ कोमल राज्यलक्ष्मी देवी शाहको भनिएको ठूलो सोफासेट नजिक बैठक भूईमा रहेको चश्मा थान-१ ।
९. कुमार खड्गविक्रम शाहको टोपी नजिक पाप्रा परेको रगत लागेको कार्पेटको टुक्रा ।
१०. बारको भुइ कार्पेटमा रगतको टाटा नजिक रहेको कुमार खड्गविक्रम शाहको भनिएको कालो टोपी थान १ र चश्मा थान-१ ।
११. विलियर्ड बैठक पूर्व भुईमा रगतको टाटा नजिक रहेको सनाखत नभएको चश्मा थान-१ ।
विलियर्ड बैठक पूर्व भूइमा टाटाबाट उठाइएको रगत जस्तो पदार्थ ।
१२. विलियर्ड बैठकको विलियर्ड बोर्ड नजिक उत्तरपूर्वपट्टी म्याटमा रहेको सुनौलो रंगको सिगरेट केश र उक्त केशमा रहेको शिखर खिल्ली-१३ ।
१३. बिलियर्ड बोर्ड मुनि रहेको ५५५ (ट्रिपल ५) सिगरेटको टुक्रा थान-१ ।
१४. बिलियर्ड बैठकको सोफा नजिक राउण्ड टेबुलमा रहेको सिगार पाइप थान १ र सो पाइपमा रहेको सिगरेटको ठुटा थान-१ ।
१५. स्व. श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाह सरकारको भनिएको हाते पंखा थान-१ ।
१६. बिलियर्ड बैठक सोफा नजिक राउण्ड टेबुलमा रहेको Cartier नामको Vendome मार्क भएको सिगरेट वट्टा र गोल्डेन रंगको लाइटर थान-१ ।
१७. M16 A2 rifle (Commando) थान-१ र magazine थान-२ (एक थान मेग्जीनमा २५ वटा जीउँदो गोली भरिएको र एउटा खाली रहेको) ।
१८. HK MP-5K 9 mm sub machine gun एक थान; २८ वटा जीउँदो गोली भरिएको एउटा, २७ वटा जीउँदो गोली भरिएको अर्को र खाली एउटा गरी जम्मा ३ वटा म्याग्जीनहरु ।
१९. पिस्तोल होल्स्टरमा राखिएको १५ वटा गोली भरिएको म्याग्जीन लोड गरिएको 9 mm Glock Pistol थान-१ ।
२०. २७ वटा जीउँदो गोली भरिएको एउटा म्याग्जीन, १५ वटा जीउँदो गोली भरिएका अरु २ वटा म्याग्जीन र 9mm को पिस्तोल १ थान ।
२१. 12 Bore SPAS 12-L FRANCHI- BRESCIA उल्लेख भएको बन्दूक (Gun) र 12 Bore को ९ वटा गोली ।
२२. विलियर्ड कोठाभित्रबाट प्राप्त भएका ३९ वटा खोकाहरु, एउटा बुलेट, र दुईवटा जीउँदो गोलीहरु ।
२३. बाहिर चौरबाट प्राप्त भएका १८ वटा खोकाहरु ।
२४. सुकला हुने भवनको गेट भित्रबाट प्राप्त भएका सातवटा खोकाहरु ।
२५. विलियर्ड कोठाको पूर्व ढोकाबाट प्राप्त ४ वटा खोकाहरु ।

मिति २०५८ ।२ ।२८ मा प्राप्त हुन आएका:

२६. बाहिर चौरबाट उठाइएको ८ थान खोकाहरु ।
२७. मा विलियर्ड कोठाबाट उठाइएको खोका थान-१ ।
२८. मा पोखरीबाट उठाइएको खोका थान-१ ।
२९. चौरमा प्राप्त २५ राउण्ड जीउँदो गोली सहितको र एउटा खाली म्याग्जीन ।
३०. चौरमा फेला परेको 9mm को ३० राउण्ड जीउँदो गोली भरिएको म्याग्जीन ।
३१. धातुका टुक्राहरु ।

**(ग) घटनास्थलको स्थलगत अवलोकन**

*समिति:* हामी अहिले त्रिभुवन सदनको मूल द्वारमा छौं । यो जुन रगत देखिएको छ, यो रगत कसरी रह्यो र कसको हो भन्ने कुरा यहाँहरुलाई केही थाहा छ कि ? रेक्स्यू गर्दा सबैको मिक्स हुन सक्छ । ल राम्रोसंग भन्नुस् है ! ल अलिकति अगाडि बढौं अब । यहाँदेखि लिनुस् है । यो कर्नरसम्मको लिनुस् । स्टील क्यामरा र मूभि पनि । यहाँनेर रगत छ, यो कर्नरमा । ल अगाडि बढौं अब । यहाँनेर यो सानो फूलको ड्याङ्गमा एउटा चप्पल देखिन्छ । क्यामराले पनि यो चप्पल लिनुस् र तपाईहरुले कसैले केही Identify गर्नुभयो कि यो चप्पल कसको हो ?

- कसको भनेर Identify छैन । यो पनि Rescue को क्रममै झरेको छ ।

*समिति:* आउनुहोस् । अब यो घुम्तीको रगतहरु लिनुस् । यहाँ रगत देखिन्छ । यो रगत के गर्दाको हुन सक्छ ?

- त्यो पनि Rescue .

*समिति:* त्यो पनि Rescue गर्दाको । ल क्यामरा अगाडि आउनुहोस् । यहाँनेर यो वस्तु छ, यो के ?

- MP 5 को म्याग्जीन ।

*समिति:* मूभि आउनुहोस् । यो म्याग्जीनको पनि तस्वीर लिनुस् । यहाँ हेर्नुहोस् है ! केही छ कि ? ढोकाकै आडमा एउटा चप्पल त्यहाँ शिशाका टुक्राहरु देखिन्छ । यो ढोका गोलीले हो कि ?

- यो Rescue गर्ने क्रममा फोरिएको ।

*समिति:* यो पछि Rescue गर्ने टिमले भित्र प्रवेश गर्नका लागि यो ढोका फोरेको ।

- भित्रबाट छेस्कीनी लगाएका हुनाले यता जान ऐना फोरेको ।

*समिति:* भित्रबाट छेस्किनी लगाएको थियो ?

- ताल्चै लगाएको थियो ।

*समिति:* रेस्क्यू गर्न जाँदा ऐना फुटालेर रेस्क्यू गर्न प्रवेश गरेको । यो म्याग्जीनको रिकर्ड भइसक्यो । यो ढोकाको आडको एउटा चप्पल छ; त्यो चप्पल र यो अघिल्लोको रंग मिल्छ हैन ? एउटा चावी पनि देखिन्छ । एउटा सानो चावी त्यसलाई लिनुस् । जुत्ता पनि लिएको हो । अब यताबाट । ल अगाडि बढ्नुस् ।

अब हामी कतातिर जाँदैछौं ? अब मेन हलको इन्ट्रान्सतिर हामी प्रवेश गर्दैछौं । अहिले हामी बाहिरी बगैंचामा छौं । अब हामी कोरिडोरमा प्रवेश गऱ्यौं । आउनुहोस् तपाईहरु । पहिले मूल घटनास्थलमा । अब यो मेन के हल भन्छ यसलाई ? विलियर्ड बैठकमा हामी प्रवेश गरेका छौं । खै, आऊँ न । खै मूभि ? पहिला हामी यता लागौं हैन ! भित्री बगैंचाबाट विलियर्ड हलमा प्रवेश गर्ने गेट नजिकै एउटा म्याजेजिन M16 को म्याग्जीन गमलाको आडमा रहेको र त्यसैको नजिकै एउटा सानो 9MM को खोका देखिन्छ । भित्री बगैंचाबाट विलियर्ड हल प्रवेश गर्ने बाटोमा । यो रगत हो ? साना साना दागहरु त अरु पनि छ यहाँ । रगतका दागहरु । यो सायद मान्छेहरु हिंड्दाखेरिको ।

- उताबाट Rescue गर्दाखेरी ।

*समिति:* रेस्क्यु गर्दाखेरीको पनि हुन सक्छ । विलियर्ड हल प्रवेश गर्ने ढोकामा M 16 को खोका विलियर्ड हल प्रवेश गर्दाखेरिको दाहिने संघारमा र अर्को बाहिर वेटिङ्ग हलको वेटिङ्ग चियरमा एउटा खोका देखिन्छ । त्यसको ठीक चियरको तल खोका देखिन्छ । यी दुइटै । खोकाहरु 5 .56मिलिमिटरको खोकाहरु हो यो । यो विलियर्ड बैठक हो र हामीहरु भित्र प्रवेश गऱ्यौं अब । क्यामराहरु आउनुस् । फोटोग्राफर मूभि पनि आउँ । एक छिन मूभि अगाडि आउँ, रगतका छिटाहरु देखिन्छ हैन ? त्यो अहिले लिनपर्छ । यो खोका यहाँ रहेछ । एउटा फ्रेमको तल खोका देखिन्छ । यो टेवुल मुनी एउटा खोका देखिन्छ दुईटा सानो 9 एम. एम.को ठूलो चाही 5 .5 एम.एम.को । अनि यहाँ पनि एउटा खोका । यो लामो सोफाको आडमा सोफाको पूर्वपट्टी वुलेट होल देखिन्छ । यताको लिनु भो यो खोकाहरुको ? यता आउनुस यता । यसको लिनु भयो ? यो हामी जति खोका देखेका छौं नम्बरिङ्ग गर्ने । दुईटा चीज त सवैलाई देखिन्छ हैन ? सानो खोकाहरु पनि छ । जुत्ताहरुको नजिक धेरै खोकाहरु छ । पहिला कता लिंदै हुनुहुन्छ ? यो चप्पलहरुको स्थिति यसको वरिपरि भएका गोलीका खोकाहरु लाउड स्पीकरको आडमा भएका गोलीका खोका, यहाँ यो टेवुलको आडमा पनि खोका छ, भित्र पनि छ । त्यो लिनुस् न तपाईहरु सव सर सर लिनुस् न । यहाँ हामीलाई हेर्नुस न जता औंला देख्यो त्यतैतिर गरिरहनुस् । त्यो अहिले त्यता प्रवेश नगर्नुस् है । यता यसरी गएर दाहिने हुँदै देव्रे आऔं । त्यो भित्र पनि लिनुस् । तपाईहरुले लिने र मैले यहाँ रेकर्ड गर्ने यहाँ एउटै हुनुपऱ्यो । यो जुत्ताहरुको लिनु भयो । गमलामुनी एउटा सानो गिलास छ । त्यो भित्र केही पदार्थ छ ? अलिकति पेय पदार्थ छ । यो कोठाको पश्चिम पेटीको ठिक साईड मुनी एउटा चश्मा देखिन्छ । एउटा मुन्द्री देखिन्छ । अनि एउटा कपालको क्लिप देखिन्छ । अनि रगतको एउटा ठूलो टाटो देखिन्छ । यो तपाईहरुलाई जानकारी छ यो कसको रगत हुन सक्छ ? कसैले भन्न सक्नुहुन्छ तपाईहरु ? यो मुन्द्री Identify गर्न सक्नु हुन्छ कि ?

- सामान चाहि थाहा भएन ।

स. *समिति:* एउटा मुन्द्री , एउटा चश्मा अनि यो रगत उठाउने कसरी ? अब कसको काम ? यहाँ गोलीको खोका पनि देखिन्छ । टेवुलमा एउटा ग्लास यसमा पनि अहिले फिंगर प्रिन्ट लिनुपर्छ । अनि यहाँ तीनवटा चप्पल छ , लेडिज चप्पल । हामी अब यहाँबाट सोझै अगाडि बढौं । यहाँ एउटा जेन्ट्स कोट देखिन्छ । एउटा चश्मा देखिन्छ । ठूलो रगतको टाटो माथि कोट छ र शिरपोश टोपी देखिन्छ । एउटा ढाका टोपी र ठूलो रगतको टाटो क्लट देखिन्छ । यो केही काठको टुक्राहरु देखिन्छ । यो केही झल्को लिएर आऔं यहाँनेरको यो म्याग्जीनहरु, सिग्रेट केश (मेटल हैन यो) यो सिग्रेट केश Identify हुन सक्छ ? कसैको । यो सिग्रेट केश पनि Identify छन् । म्याग्जीन छ । अनि यो म्याग्जीनको नजिक रहेको यो MP5 सव मेशिन परिरहेको छ । यसकोसवै तपाईहरुले उतारी हाल्नुस न । हामीले त्यसको वर्णन गरेको हो नि त त्यसैको । त्यसको आउने गरेर, पिंक कलरको चप्पलहरु र त्यसको बीचमा रहेको हतियारको, के हो यो ?

🗣 यो पिस्तोल हो ।

*समिति:* ९ एम एमको ग्लक । यो चप्पलको आडमा रहेको चाही पिस्तोल हो । अव यसपछि एउटा शिरपोश ढाकाको देखिन्छ । क्यामरा तपाईहरु नहडवढाई दिनुस न भैसकेको लाई उ गर्नुस न । यो शिरपोश भयो अनि त्यो एउटा ठूलो रगतको टाटा र त्यससंग जोडिएको एउटा जेन्ट्स कालोकोट देखिन्छ र ठीक त्यसैको दाहिनेपट्टि ठूलो रगतको जमेको रगतको टाटाहरु अनि त्यहा एउटा जेन्ट्स चश्मा त्यसैको नजिक देखिन्छ । यो सानो चुरी हो कि ? यो रंगीन शिशाको टुक्राहरु छन् । यो कार्पेट अलिकति (कपाल होइन कार्पेट) खुइलिएको दाग हुन सक्छ । तर त्यो कुनै यो घटनामैं खुइलिएको हो कि हातले कोपरेको हो, पीडा हुँदाखेरी त्यस्तो हुन सक्छ । चश्मा चाहिं सेतो जेन्ट्स चश्मा हो त्यो । यहाँ माथि डेकोरेटिभ वाल हो र त्यहाँ गोली लागेका दागहरु देखिन्छन् । एकदम तपाईहरु फोटोग्राफरहरु चलाख हुनुहोस है । यो डेकोरेटिभ वालको एउटा मूर्ति कै पाउ नजिक एउटा दाग र ठीक मूर्तिको पछाडि भित्तामा गोली लागेको दाग छ । त्यसलाई उतार्नुस । त्यो गोली लागेको दाग हो उ त्यो हैन । विलियर्ड पूल स्टयाण्डको नजिक हामी उभिएका छौं र यहाँ नयाँ कुराहरु छन् । यो चाहिं के हो ? अघि हामी प्रवेश गर्दाखेरी यो Rescue गर्न फोडिएको ढोकामा रहेका शिशाका टुक्राहरु बाहिरबाट फोर्दा फुटाल्दा यता बढी आएको देखियो । यो Rescue गर्न फोडिएको ढोकाको नजिक एउटा लाइभ ७.६२ एम.एम. गोली देखिन्छ र साना तिना रगतका टाटाहरु छन् । यो Rescue गर्दा भएको टाटाहरु हुन सक्छ भन्ने भनाई छ । अब हामी विलियर्ड टेवुललाई दाहिने पारेर अगाडि बढी राखेका छौं । दाहिने पार्दा विलियर्ड हलबाट पश्चिम वाथरुमको ट्वाइलेटको ढोकामा गोली लागेको एउटा दाग देखिन्छ ।

अब यसलाई हामीले एकपटक खोलौं । यो बाथरुम पनि एक पटक हेरौं । हामी वाथरुम प्रवेश गरेका छौ । यो ढोकाको गोली आएर त्यहाँ बज्रे जस्तो देखिन्छ । वाथरुमको भित्तामा । बोलाउनुस न क्यामरालाई खै मूभी क्यामरा खोई ? यो भित्तामा ढोकाबाट आएको गोली देखिन्छ । अरु बाथरुममा भित्र विशेष त्यस्तो घटनाहरु घटेका देखिंदैन । र कही चिन्ह पनि देखिंदैन । त्यही विलियर्ड हलबाट आएको गोली ढोका छेडेर वाथरुमको भित्तामा एउटा सानो दाग देखिएको छ र अरु विशेष अवस्था यो वाथरुममा देखिंदैन । सानो एउटा लिडको टुक्रा त्यही झ्यालको आडमा देखिन्छ । फोटो खिच्नुस् त्यसको । यो दागको पनि फोटो खिच्नुहोस् । तर यो वाथरुममा त्यस्तो विशेष कुनै हलचल भएको देखिंदैन । वन्द ढोका बाट नै एउटा गोली पसेर भित्तामा ठोकिएको देखिन्छ । पश्चिम फर्केर हानेको गोली वाथरुम पस्ने ढोकाको दाहिने पट्टी भित्तामा एउटा दाग देखिन्छ । स्नूकरको पछाडिपट्टी हामीहरु निरीक्षण गरिराखेको छौं । केही रगतका टाटाहरु देखिन्छ । यो कही परबाट छिटा आए जस्तो मात्र देखिन्छ हैन यो? हो ? यो कोक वा कुनै ड्रिंकको दागहरु रहेछ यो । यहाँ यो कार्पेट हुँदै कार्पेटमा लागेर भित्तामा लागेको देखिन्छ । पूर्वबाट हानेको गोली कार्पेटलाई समेत छेडेर । यो लिउँ यो कार्पेटलाई छेड्दै गएको छ । गोली त्यही भित्र हुन सक्छ । यो गोली पहिला यो कार्पेटलाई धसार्दै गएको हो ? र भित्तामा गएर ठोकिएको र गोली पनि भित्रै रहेको देखिन्छ । यो दुईटा कार्पेटको वीचमा एउटा खोका सानो देखिन्छ र यहाँ यो विलियर्डको स्टीक पनि ठडिएको देखिन्छ । र विलियर्ड स्टीकको ठीक उता पनि पछाडिपट्टी भित्तामा एउटा गोलीको दाग देखियो । विलियर्डको स्कोटिङ वोर्डको ठीक तल एउटा सानो गोलीको दागले भित्तामा चोट लागेको देखिन्छ र यो वोर्डको ठीक माथि एउटा ठूलो गोलीले प्वाल पारेको छ । गोली त्यही भित्र पनि हुनसक्छ कि त्यो खसेको होला । अब विलियर्ड टेवुललाई दाहिने पारेर हामी पूर्वतिर फर्केका छौं र यहाँ रगतका टाटाहरु देखिन्छन्, गोलीको खोकाहरु देखिन्छन र यो नटमा एउटा जेन्ट्स चश्मा त्यसमा ढाकाको शिरपोश त्यसमाथि धेरै गोलीका खोकाहरु र रगत माथि एउटा गोलीको खोका, गोली यहाँ देखिन्छ रगतकै आहालमा जमेको र घडीका चेनका टुक्राहरु पनि यहाँ देखिन्छन् । विलियर्ड टेवुलकै उत्तरपट्टि माथि छततिर गोली हान्दा यो लिन्टनमा एउटा गोली लागेको दाग छ । यसको फोटो भयो । विलियर्ड टेवुलको अगाडि एउटा यो चुरोटको ठूटो र एउटा पेय पदार्थको ग्लास देखिएको छ । विलियर्ड वोर्डको माथि पनि तीन वटा खोकाहरु देखिएको छ । विलियर्डका यो वलहरु राता पहेलो र निलो र तीनवटा खोकाहरु यहाँ देखिएको छ । अब हामी बारतिर प्रवेश गरौं । वार प्रवेश गर्ने वित्तिकै जेन्ट्स चश्मा गोलीका खोकाहरु र एउटा सोफा नजिकै एउटा लेडिज चप्पल र चप्पलको आडमा एउटा खोका, सोफामा एउटा सलाई दाहिनेपट्टी र देब्रेपट्टी चुरोटहरु देखिन्छ । यो चुरोट राख्ने चलन नै रहेछ । त्यसैले चुरोटहरु रहिरहने अवस्था देखियो । कालो टोपी र त्यसको नजिकै ठूलो रगतको आहाल छ र त्यसको नजिकै एउटा खोका पनि देखिन्छ । ठीक बारको टेवुलको नजिकैको कुरा हो यो । बारको सोफामा एउटा लेडिज कालो घडी छ र सोफाको दाहिनेतिर (वारको) केही पेय पदार्थका ग्लासहरु ।

*समिति:* एउटा चलिरहेको सि.डी. रेकर्ड यहाँ देखिन्छ । यो चलिनै रहन्छ ?

🗣 हजूर ।

*समिति:* यो गोली जस्तो लाग्छ हैन भित्तामा ?

🗣 यो गोली होइन ।

*समिति:* यो सजावटको दराज रे ? यसमा एउटा गोलीकै हो वा.....गोली होइन होला ।

🗣 गोली नै हो ।

*समिति:* गोलीकै हो । शिशा फुटेको छ । एउटा फ्रेम झरेर एउटा कुर्सीमुनी देखिन्छ । दराजमा पूरा लिनुस् है । यो घुमिरहेको पंखालाई पनि लिनुस् ।

*समिति:* यो गिलास जम्मै आउन् ।

*समिति:* यी गिलासहरु यो सोफाका आडमा रहेका सम्पूर्ण पेय पदार्थका गिलासहरु यिनीहरुलाई पनि लिनुस् । घुमेको पंखा पनि लिने है ।

*समिति:* रगतको ठूलो सोफा नजिकै एउटा निशानको कप यो के हो ?

🗣 कतैबाट केही यो गोली कै...

*समिति:* ए, गोली कै...

🗣 भित्तासित्तामा ठोकिएर आएर....

*समिति:* सिटिङ्ग एरियामा अब हामी प्रवेश गर्‍यौं । अब यहाँ सोफाहरु एउटा र यसको नजिकै खोका पनि देखियो । मेचको नजिकै सोफाको बीचमा नपुग्दै अगाडि पेय पदार्थ चश्मा पनि । कोट चाहिं श्री ५ महाराजाधिराज सरकारको .....

*समिति:* यो चाहिं कसको ? धीरेन्द्र शाहको ?

🗣 यो धीरेन्द्र शाहको ।

*समिति::* यो आइडेन्टिफाइड छ । यो विलियर्ड टेबुलको पूर्वपट्टिको एउटा ढोकामा टोपी र कालो चश्मा यो धीरेन्द्र शाहको भन्ने कुरा आइडेन्टिफाइड भएको छ । यो ठूलो रगतको आहाल माथि टोपी र चश्मा छ । विलियर्ड पूर्वपट्टि एउटा कालो चश्मा.... यी चप्पलहरु त यो सिटिङ्ग हलकोउत्तरपट्टि फकिएको ठूलो टेबुलको नजिक देखिएको रातो फिता सहितको कालो चप्पल र टेबुलमा रेड वाइन र एउटा ग्लास र सबभन्दा छेउतिरबाट देब्रेपट्टि पर्नेगरी रहेको एउटा चुरोट र लाइटर र एउटा रातो लेडिज पंखा यो तत्कालिन श्री ५ वडामहारानी सरकारको देखिन्छ ।

*समिति:* यो के त्यो ?

*समिति:* ....... होला । फोटो लिइ सकियो होइन ? ए, होइन, त्यसकै ब्याण्ड पंखाको बण्डा । अच्छा, सरकार यहाँ राज भएको रहेछ यो । वाफ रे वाफ । तत्कालिन सरकारको होइन ?

🗣 गोली चलुञ्जेल ।

*समिति:* मेरो अन्दाजले यहाँ हेर्न लागिवक्से जस्तो, किनभने भर्खरै सवारी भएको थियो । यो कसको ड्रिङ्क्स रहेछ ? कसले ड्रिङ्क्स खाने सिग्रेट यहीं भर्खरै शुरु भएजस्तो लाग्यो मलाई ।

🗣 यो सर्भिस सेन्टर किचेन, यो डाइनिङ्ग हल ।

*समिति:* अहिले खिच्ने र जाने । कसको जुठो हेत्तेरी, राम राम । अनि तपाई उता बस्नुभयो ?

🗣 त्यो ढोकाबाट बाहिरपट्टि ।

*समिति:* ए, ऊ ढोका...

🗣 अफिस भयो । त्यो भन्दा यता आउने हामीलाई काम छैन....... यहाँ चाहिं मैले साढे दश बजे....... एउटा घडी चाहिं ठ्याक्क नौ एक्काइसमा बन्द भएको छ । नाडीमा आउँदाखेरी पनि चल्ने हो कि, हो ?

*समिति:* हैन, नौ पन्ध्रमा त डिक्लेयर भैसक्यो ।

🗣 नौ पन्ध्रमा त हामीले वहाँ पुर्‍याइसकेका थियौं । नौ पन्ध्रमा त हस्पिटल पुर्‍याइसकेका थियौं । तर पछि त्यसपछि त राजेशलाई यो पुर्‍याएको त्यसपछि अरुलाई त हामीले......

🗣 चेन चाहिं त्यहाँ देखियो । उछिट्टिएर त्यहाँ गएर बन्द भएको हो कि ?

🗣 एकछिन चलेर पछि बन्द भएको हो ।
🗣 बन्द हुन्छ ?
🗣 अँ ।

*समिति:* होइन, यो सब टोटल्ली हेरौं । अँ यहाँ पनि ।

*समिति:* अब हामी विलियर्ड हलबाट बाहिरको एउटा हल निरिक्षणका लागि गेटबाट देब्रे मोडिएर (बाँया) कोठामा प्रवेश गरेका छौं । यो चाहिं डाइनिङ्ग हल रहेछ यहाँ ।

*समिति:* होइन जस्तो सिक्वेन्स के हो भनेदेखि इन्जिनियर पनि आइसक्नु भएको छैन ।
🗣 तपाई ल्याउने ?
🗣 त्यसैले बाहिर मान्छे एक मान्छे मात्रै त्यही ब्याइज किचेन ल्याउने त्यत्ति मात्रै छ, अरु कोही पनि छैन बाहिर ।

*समिति:* यो धेरै दिएको छ त हामीलाई । नाम त थुप्रै छन् त ।
🗣 त्यो त काम गर्ने पछिल्तिरबाट । दुईवटा ब्याइज एउटा अर्कै ...

*समिति:* यो कुनै पनि घटनाको सम्बन्धमा अप्ठेरो र प्रायः केही डाइनिङ्गसहरु भएनन् नि त, त्यही टाइम....
🗣 त्यसले टाइम पनि देखाउँछ ।

*समिति:* अँ, टाइम देखाउँछ । त्यो त हेर्नैपर्छ । त्यहाँ त अरु इन्सिडेन्ट त भएको छ । त्यसलाई डिनर वाज रेडी वट वाज नट सर्भेड ।

*समिति:* हामी डाइनिङ्ग हलबाट बाहिर निस्केर बाहिर मिटिङ्ग हल लवीमा हामी.... लवीमा पनि त्यस्तो विशेष डिस्क्रिमेन्सिभ रहेको र कुनै पुरानो बसेर चुरोट पिएको मात्रै ट्रे मा रहेको चुरोटका ठुटाहरुले देखाउँछ । त्यसको पनि पूरा तस्वीर लिनुस् है ।

*समिति:* त्यहाँ जाने एउटा बाटो भएको......

*समिति:* यता जाने बाटोमा कुनै यसको प्रभाव देखिदैन र यो गोलीकाण्डको प्रभाव पनि यो बाहिर लवीमा यो अहिले हामी जहाँ हामी बसेका छौं ।

*समिति:* उत्तरतिर डायनिङ्ग हलबाट निस्कँदा देब्रेतिर एउटा ढोका देखिन्छ । त्यो खुलेको पाइदैन । त्यो बन्द नै भएको देखिन्छ । साँचो झुण्डिरहेको छ ।

*समिति:* यहाँ राज भएको रे, सरकारबाट हुकुम भएको । मुमा बडामहारानी सरकारबाट ।

*समिति:* अब हामी यताबाट सोझै भित्री बगैंचा ।
🗣 भित्री बगैंचा ।
🗣 यो भयो होइन ?

*समिति:* ल, क्यामरा मेनहरु...

*समिति:* यो भयो त ?

*समिति:* अब हामी विलियर्ड हलको पूर्वतिरबाट भित्री वगैंचामा प्रवेश गरेका छौं ।

–

एउटा चलिरहेको सि.डी. रेकर्डहरु यहाँ देखिन्छ । यो सजावटको दराजमा एउटा गोलीकै हो वा (गोलीकै हो) शिशा फुटेको छ । एउटा फोटो फ्रेम झरेर कुर्सीमुनी देखिन्छ । घुमिरहेको पंखालाई पनि लिनुहोस् । र यो सोफाको आडमा रहेका सम्पूर्ण पेय पदार्थका गिलासहरु यिनीहरुको पनि तस्वीर उतार्नुस् । रगतको ठूलो टाटा नजिकै एउटा ठूलो लेडिज टप देखिन्छ ।

अब हामी सिटिङ्ग एरियामा प्रवेश गर्‍यौं । र यहाँ उ सिटिङ्ग उसको उत्तरतिर फर्किएको सोफामा सिग्रेट र लाइटर त्यसको नजिकै कालो रातो फिता भएको लेडिज चप्पल र एउटा लिफाफा जयन्ती भनी लेखेको सोफामा अल्झिरहेको देखिन्छ । उत्तर.पट्टि फर्केको सिंगल सोफामा र मेन ३ सिटर सोफाको बीचमा रहेको सिग्रेट र लाइटरको अगाडि यो पेय पदार्थको एउटा गिलास यो सिग्रेट पाइप र (

जसले गरेको यो यसलाई लिनुस्) टेबुलमाथि रहेको गमलाको नजिक सिगरेट सहितको पाइप छ । यो पाइप कसको हो भन्ने केही जान्न सक्नुहुन्छ ? आइडेन्टिफाइड हुन सक्छ ? भेन्टिलेसनका लागि खुलेका ढोकाहरु होलान्, अलिअलि झ्यालहरु खापाहरु खुलेका भेन्टिलेशनका खुलेकै देखिन्छ । मेन सिटिङ्ग भएको माथिको पंखा पनि घुमिरहेको छ । यो घुमिरहेको पंखाको पनि लिनुहोस् र यो बीचमा जुन हामीले रेकर्ड गरेको एउटा धर्के खैरो कोट, ढाकाको शिरपोश र एउटा सेतो चश्मा यो चाहिं आइडेन्टिफाइड छ श्री ५ महाराजाधिराज सरकारको चश्मा र शिरपोश भन्ने कुरा यो विलियर्डको टेबुलको पूर्वपट्टिको एउटा टंडालमा अगाडि रहेको यो टोपी र कालो चश्मा यो धीरेन्द्र शाहको भन्ने कुरा आइडेन्टिफाइड भएको छ । यहाँ पनि ठूलो रगतको आहालमाथि टोपी र चश्मा देखिन्छ । यो विलियर्ड टेबुलको पूर्वपट्टि रहेको एउटा कालो कोट र त्यसमा एउटा ढाकाको टोपी रगतको आहालमाथि देखिन्छ । यो पनि कुमार गोरखको भन्ने कुरा आइडेन्टिफाइड भयो । चप्पलहरु त केही भएन, कसको हो के हो भन्ने कुरा केही गर्न सकिएन । ठूलो टेबुलको नजिक देखिएको कालो चप्पल (रातो फिता सहितको) र टेबुलमा रेड वाइनको एउटा ग्लास र सबभन्दा छेउतिरबाट देब्रेपट्टि पर्नेगरी रहेको यो चुरोट र लाइटर र एउटा रातो लेडिज पंखा यो तत्कालिन श्री ५ बडामहारानी सरकारको देखिन्छ । यो बार टेबुलको ठीक अगाडि रहेको जुन कालो टोपी छ त्यो पनि आइडेन्टिफाइड भएको छ । त्यो कुमार खड्गले लगाउने टोपी हो भन्ने कुरा बुझियो । यो चश्मा चाहिं प्रिन्सेस शाहको चश्मा भन्ने बुझियो । यसबाट खड्ग र प्रिन्सेस शाह सरकारसंगै भएको बुझिन्छ होइन ?

अब हामी विलियर्ड हलबाट बाहिरको एउटा हल निरीक्षणका लागि विलियर्ड हलको मूल गेटबाट देब्रे मोडिएर दाहिने भित्री कोठामा प्रवेश गरेका छौं । यो दाहिने हो र यहाँ खाद्य पदार्थका खाने प्रवन्धको सारा बन्दोबस्त टेबुलमा राखिएको छ । कुनै कुराको पनि प्रयोग भएको देखिंदैन । स्पुनहरु थुप्रिएको अवस्थामा छन्, प्लेटहरु थुप्रिएकै अवस्थामा छन् । अन्य कुराहरु कुनै कुरामा परिवर्तन आएको देखिंदैन । त्यसको अर्थ यहाँ प्रवेश गरीसकेको पाइएन होइन ? प्रवेश गरी सकेर यसलाई युज गर्न खोजेको पाइदैन । सम्पूर्ण रुपले यो डिनरको सेटिङ भइसकेको पनि देखिदैन । केही वस्तुहरु लिएर आएर सामाग्रीहरु मात्रै यो प्लेट राता चम्चाहरु र अचारहरु आएको देखिन्छ । अरु सामानहरु यहाँ राखिसकेको देखिदैन । आउन नै बाँकी देखिन्छ । यो कोठामा पाहुनाहरु प्रवेश गरेको देखिंदैन । खाली मिलाउन शुरु गरेको स्पष्ट देखिन्छ ।

हामी डायनिङ हलबाट निस्केर वाहिरी लवीमा अहिले छौं । यहाँ पनि त्यस्तो विशेष केही भएको देखिदैन बसेर चुरोट पिएको मात्रै यो ट्रे मा रहेका चुरोटका ठुटाहरुले देखाउँछ । अरु विशेष देखिँदैन यसमा पनि अहिले किचन जाने तिर एउटा गल्ली छ । अब त्यतातिर विशेष त्यतातिरको मान्छे ओहोर दोहार गरेको र विशेष इन्सीडेन्टको लक्षणहरु देखिँदैन । यो सँग सम्बन्धित घटनाहरु त्यो किचेनतिर जाने लवी ठूलो बाटोमा पनि यसको कुनै प्रभाव देखिँदैन र गोली काण्डको प्रभाव पनि वाहिर लवीमा देखिदैन र गोली काण्डको प्रभाव वाहिर लवीमा जहाँ अहिले हामी बसेका छौं त्यहाँ देखिन्न । खाली चुरोटका ठुटाहरु आराम गरेर चुरोट पिएको मात्रै यो दृश्यले जनाउँछ । यो उत्तरतिर डायनिङ हलबाट निस्कँदा देव्रेतिर एउटा ढोका देखिन्छ र त्यो खुलेको पाइदैन । त्यो बन्द नै भएको देखिन्छ । साँचो झुण्डिरहेको छ ।

विलियर्ड हलको मूल गेटको पूर्वतिरबाट देखिने भित्री बगैचामा प्रवेश गरेका छौं । सानो बाटो हुँदै हामीहरु पूर्वतिर लागिरहेका छौं र यो बगैंचाको पूर्व लागेर हिंड्दा रहेको एउटा सानो गार्डेन जस्तो चाइनिज दुवो र निलकाँडाको बारले घेरिएको बुद्धको स्तुपाको प्रारूप ढुङ्गाको मूर्ति जस्तो राखिएको बगैंचामा हामी निरीक्षण गर्दैछौं र यो बगैंचामा प्रवेश गर्ने सानो एउटा विलियर्ड हलबाट पूर्व आएर अनि हामी फेरि एउटा सानो बाटोबाट उत्तरतिरलागेर फेरि पश्चिम फर्केर यो दुवोको सानो र जहाँ बुद्धको मूर्ति स्थापित छ त्यसमा प्रवेश गर्दाखेरी प्रवेश गरेर दक्षिणतिर लाग्दा एउटा एम १६ राइफल देखिन्छ र यसमा टेलिस्कोप टर्च सब देखिन्छ र म्याग्जीन ३० राउण्डको म्याग्जीन जडान भइराखेको छ । ट्रिगर स्वीच अटोमेटिक प्वाइन्टमा रहेको यो हतियार यसमा टेलिस्कोप र लाइट दुवै जडान भएको छ । यो बुद्ध मूर्तिको ठीक पश्चिम पर्ने गरेर यो सानो चौरको दक्षिण पश्चिम कुनामा एउटा झाडीमा एउटा हतियार देखिन्छ । यो हतियारको नाम S.P.A.S. 12–L फ्रेन्चीस्पा ब्रभसिया मेड इन इटाली देखिन्छ । यसको म्याग्जीन हुँदैन र यसको भित्र नै गोलीहरु फिट गरी राखेको हुन्छ । (यसको ट्रिगरको अवस्था फायर मोडमा रहेको देखिन्छ) । दुईवटा ठूला हतियारहरु फालिएको चौरबाट पूर्व मोहडा गरेर बाहिर गल्लीमा निस्कँदा र उत्तर फर्कंदा दुवैतिर साना दुईवटा पोखरीहरु छन् । यसमा एउटा सेट गरी राखेको स्वीमिङको अलिकति भत्किएको देखिन्छ र केही ढुंगाहरु केही ठक्करले लच्किएको सेट बिग्रिएको अवस्थामा छन् र सानो एउटा दाहिनेतिर पोखरीको दक्षिण पश्चिम कुनाको ठीक अगाडि फूलको झ्याङ नजिकै रगतको टाटा देखिएको छ । त्यो रगत नै हो ? यहाँहरुलाई थाहा छ ? यो रगतको टाटा हो र यी ढुंगाहरु सेट अलिकति एउटा सानो ढुंगा उप्किएको देखिन्छ । यहाँ नै तत्कालीन युवराजाधिराज सरकार दीपेन्द्रको शरीर पल्टिरहेको थियो भन्ने कुरा जानकारीमा आयो । त्यसको ठीक बायाँतिरको एउटा पोखरीमा पश्चिम उत्तर कुनामा सानो रगतको दाग देखियो, त्यसको ठीक उत्तरतर्फ जाँदा दाहिनेतिरको बाटोको पूलमुनी एउटा पिस्तोल पानीमुनी पोखरीमा परिरहेको देखिन्छ । यो पिस्तोलको नाम ग्लक भन्ने रहेछ । पानी अलिकति धमिलो भएको हुनाले के फोटाग्राफरहरु तपाईहरुले उतार्न सक्नुहुन्छ ? तस्वीर आउँछ होइन ?

दीपेन्द्र सरकारको शरीर जहाँ परिरहेको थियो भन्ने पाइयो त्यसको देब्रेपट्टि रहेको पोखरीको अर्को भागमा कम्ब्याट टोपी पानी माथि तरिरहेको छ । त्यताबाट फोटो उतार्नुस् । त्यो पोखरीमाथिको सानो पूल बाटो पार गरेर हामीहरु एउटा मेन हलको एउटा ठूलो बिल्डिङको दाहिनेतिर रहेको एउटा हलमा प्रवेश गर्दैछौं । यसमा प्रवेश गर्न लाग्दा डोरम्याट रहेको एउटा ठाउँबाटै साना शिशाका टुक्राहरु र यो स्टेपमा पनि साना शिशाका टुक्राहरु र मूल ढोका जहाँ 'T' अंकित छ गेटमा, त्यो हलमा हामीहरु प्रवेश गर्दैछौं । त्रिभुवन सदनको मेन इन्ट्रान्स हो यो । त्यसैले यसमा 'T'अंकित छ मूल ढोकामा पनि र त्यो ढोकामाथिको एउटा शिशामा पनि ।

यो मूल गेटको ढोका बीचमा प्वाल परेको छ । यो शिशा के प्रकारको भन्छन् यसलाई ? त्यसमा गोली लागेर यो फुटेको देखिन्छ । यो विल्डिङको मूलगेटतिर उक्लने स्टेपको सबभन्दा प्रारम्भमैं जहाँ डोरम्याट छ, ४ वटा प्रयोग भएका खोकाहरु पाइएका छन् र यसको स्टेपमा एउटा रातो रंगको चुरा फुटेको रसानो चुराको नजिक एउटा सानो रगतको अलिकति रगतको टाटा र माथि पनि अलिकति रगतको सानो टाटा भेटिन्छ । यो मेन हलबाट बाहिर निस्कँदा यो ढोका फुटेको अनुमान हुन्छ । किनभने भित्र त्यो शिशा पुगेको छैन । बाहिरतिर शिशा फालिएको छ । मूल गेटको शिशाका टुक्राहरु बाहिर मात्र देखिन्छन् । र यो 'T' अक्षर अंकित शिशाको ढोकामा एउटा ठूलो प्वाल त छँदैछ, शिशा फुटेको र गोली लागेको सानो प्वालहरु पनि देखिन्छन् । स्पष्ट किसिमले एउटा प्वाल देखिन्छ, माथि दोश्रो प्वाल देखियो । यो मेटलको ढोका हो । यसको फ्रेममा पनि गोली लागेको एउटा सानो दाग देखिएको छ । यो खापाको (मेटलको खापा हो यो) त्यसमा एउटा ठूलो बडो जोडसंग आएको गोलीको दाग प्रष्टसंग देखिन्छ । यो बाहिरबाट ढोकाको फ्रेमको छेउमा लागेको गोली हो । त्रिभुवन हल प्रवेशको मूलद्वारबाट बाहिर निस्कँदा दाहिनेतिरको कुना र प्रवेश गर्दाखेरी देब्रेपट्टि पर्ने एउटा कुनामा लुकिङ्ग ग्लास देखिन्छ । यो लुकिङ्ग ग्लासमा पनि गोली आइपुगेको छ । यो काठको फ्रेममा पहिला लागेर त्यसपछि यो सिमेन्टेड वालमा पनि गएर गोली दागिएको छ । त्यो दागमाथि तरवारहरु राखिएको देखियो । यो युज भएको तरवारहरु होइन, यो डेकोरेशनको लागि राखेको तरवारहरु हुन् ।

यो त्रिभुवन सदनको मूलद्वारबाट जहाँ बडामहारानी सरकारको यहाँ गोली लागेको वा यहाँ परिरहेको रगतका दागहरु वा फुटेको चुराका खपेटाहरु देखिन्छन् । यो युवराजधिराज सरकारको बंगला हो यो र यो बंगलाको माथिल्लो सुरमा जाने जुन भऱ्याङ्ग छ, त्यसमा बडामहारानी सरकार यतातिर उक्लँदै गरेको अनुमान हुन्छ र त्यहाँ भऱ्याङ्गको बीचमा सातौं स्टेपमा ठूलो रगतको टाटा रगतको खोलै बगेर यता भऱ्याङ्गबाट पनि तल धेरै ठूलो रगतका टाटाहरु भित्तामा रगतका उ हरु र तल यो भऱ्याङ्गमा लडिसकेपछि कानमा लगाउने हो कि कपालको हो यो ? यहाँ हामीले देख्दाखेरी पनि यो रगतको गन्ध स्मेल आइराखेको छ अहिले । यो साडी क्लिप हुनुपर्दछ । रगतका प्रसस्त छिटाहरु छन्, रगतका छिटाहरु र स्मेल पनि यसको आइरहेको छ अहिले । यो त्यहाँ भित्ताबाट रगत चुहिंदै आएर जमेको एउटा ठूलो रगतको आहाल देखिन्छ र यसको स्मेल पनि अहिले आइराखेको छ । त्यसको अगाडि बढ्दाखेरिको देब्रेतिरको बालसंगै जोडिएको एउटा रगत बाहेकको वस्तु देखिन्छ । यो रगत बाहेकको संभवतः यो भमिट भएको हुनुपर्दछ । यो भमिट भएर जमेको यो पदार्थ जमिसकेको स्थिति छ । मैले पहिला अनुमान गरेको थिएँ, यो भमिट भएर कुनै पदार्थ होला भनेर । त्यो चाहिं टाउको फुटेर निस्किएको पनि हुनसक्छ भन्ने अनुमान भयो खाली अनुमानको कुरा मात्रै हो । यो परीक्षणबाट देखिएला के वस्तु हो भन्ने कुरा त ।

अब हामी यो भऱ्याङ्ग उक्लँदै छौं । सातौं स्टेपमा ठूलो रगतको उ र अलिकति साडी वा कुनै कपडाले लतपतिएको स्थिति पनि यो देखियो । अनि आठौंमा अलिअलि छिटाहरु र नवौंमा निकै ठूलो र नवौं स्टेपमा अर्को त्यो तल गल्ली त्यो उसमा रहेको क्लिप अथवा साडीको क्लिप अथवा कानको कुनै जुन देखिएको थियो, त्यो दाहिनेपट्टि कुनामा अर्को देखिएको छ । त्यसैले यो जोडा भएको हुनाले कुन प्रयोगको लागि अर्नामेन्ट हो, यहाँ अहिले अनुमान हुन सकेन र यो भऱ्याङ्ग पार गरीसकेपछि रगत जमिरहेको र उसमा रातो टीका पनि रगतमाथि जमेको देखिन्छ । यो पोतेको टुक्राहरु पनि सानो सानो देखिन्छ । होइन, यो त कुनै अर्नामेन्टकै स्टोन हो कि ? दाँतै हो ? यसको अनुमान के भयो भनेदेखि यो ढलेर यो मुख भऱ्याङ्गमा जोतिन जाँदा वा गोली त्यहाँ लाग्दाखेरी दाँत त्यहाँ झरेको देखिन्छ; वंगाराको एउटा टुक्रा र दाँतको टुक्रा पनि यहाँ भऱ्याङ्गमा देखिन्छ । भऱ्याङ्ग उक्लँदा देब्रेतिर यो देखिन्छ । तल सानो कोरिडरको उसमा पनि अर्को दाँत पनि देखा परेको छ । माथिबाट हेर्दाखेरी यो भऱ्याङ्गको रगतका छिटाहरु भऱ्याङ्गको देब्रेपट्टि हरिणको सिंगलाई राखेको ठाउँको भित्तामा पनि रगत उछिट्टिएको पाइयो । यो हरिणको टाउको सजाइएको जुन हरिण हो, त्यसमा जोडिएको रगत होइन भन्ने हाम्रो अनुमान रह्यो, पछि सबै सल्लाह गर्दाखेरी । त्यो गिदी गएर त्यहाँ थुप्रिएको छ । यहाँ त्यो एक एक्स्पर्टिजहरुसंग कुरा गर्दाखेरी बडामहारानी सरकार भऱ्याङ्ग उक्लेर माथि कक्षतिर आइवक्सँदै गरेको र गोली चाहिं भऱ्याङ्ग सिद्धिने बित्तिकैको एउटा ल्याण्डिङ्ग स्क्वायरबाट प्रहार भएको देखिन्छ । किनभनेदेखि गोलीका खोकाहरु यो ल्याण्डिङ्ग स्क्वायरमा सातवटा देखिन्छन् । यो चाहिं कुन चाहिं हतियारबाट ? 5.56 M-16 बाट प्रहार भएका गोलीहरु हुन् । यी दक्षिणतिर फर्केर ओर्लदा भऱ्याङ्गबाट उत्तरतिर माथितिर उक्लिरहेको अवस्थामा यो गोलीहरु चलाइएको देखिन्छ । भऱ्याङ्गको ठीक माथि जहाँ गोलीहरु रहेको एउटा स्क्वायर छ, त्यो भन्दा माथि दुईवटा स्टेपहरु छन् र त्यो भन्दा माथि कुनै प्रकारको संकेतहरु पाइदैन । दाहिनेतिर एउटा कोरिडोर छ, त्यतातिर पनि कुनै चिन्हरु कुनै कुरा परिरहेको वा केही मानिसहरुको आवतजावत गरेका कुनै लक्षणहरु देखा पर्दैनन् । ढोका पनि बन्द छ र यसमा कुनै प्रकारको डिमार्केशन देखिंदैन । कक्षबाट बाहिर निस्किएर र यसरी यो स्क्वायरबाट गोली प्रहार भएको र आउँदै माथि उक्लँदै गरेको व्यक्तिलाई गोली प्रहार भएको, गोली प्रहारबाट तत्काल ढलेको टाउको फुटेको, गिदी यत्रतत्र छरिएको, दाँतहरु दुईवटा एउटा माथि भऱ्याङ्गमुनी, एउटा तल गएर त्यो सानो गल्लीमा फालिएको, रातो चुराहरु फुटेको यो भऱ्याङ्गको स्थिति हो । भऱ्याङ्ग र भऱ्याङ्गको तल देखिएको जुन एकप्रकारको दुईवटा रातो अर्नामेन्ट देखियो, त्यो अर्नामेन्ट चाहिं कानकै हो जस्तो देखियो । यो कानको टप नै हो भन्ने देखियो ।

अब मेन त्रिभुवन सदनबाट बाहिर निस्कँदा दक्षिण मोहडा गरेर देब्रे मोडिंदा यही भित्री वगैंचाको दाहिनेतिर यो लामो दुवो र बाटोमा एउटा खोका देखिन्छ । यो झाडीमा खरायोको एउटा प्रारुप बनाएर राखेको देखिन्छ र फुटेको छ र झाडीको ठीक बीचमा एउटा टोपी शिरपोश देखिन्छ र यो निराजन सरकारको टोपी हो भन्ने कुरा आइडेन्टिफाइड भयो र यहाँ यो निराजन सरकारको लाश थियो भन्ने पाइयो ।

यसरी त्रिभुवन सदनतिर मेन विलियर्ड हलबाट निस्केर पूर्व लाग्दा र त्रिभुवन सदन प्रवेशका लागि उत्तर मोडिंदा दाहिनेपट्टिको एउटा सानो चौरमा खोकाहरु भेटिएको छ र यो खोकाहरुलाई हेर्दाखेरी र यसको ठीक दक्षिणपट्टि निराजन सरकारको टोपी देखिंदा हिड्दा हिड्दै यहाँबाट गोली हानेर चौरमा यी खोकाहरु परेको हो भन्ने चाहिं विशेषज्ञहरुले अनुमान गरेको बताउनुभएको हो । त्रिभुवन सदन

प्रवेशका लागि उत्तरतर्फ फर्केर जाँदा क्रस गर्नुपर्ने दाहिनेपट्टिको पोखरीको कुनामा रहेको पिस्तोललाई हामी पोखरीबाट झिक्ने तयारीमा छौं । र मान्छे यो पोखरीमा प्रवेश गर्दैछन् । र यो सहयोगीले पानीबाट त्यो पिस्तोल झिक्दै छ । अब हामीले पिस्तोल पानीबाट झिकिसकेका छौं र त्यो उहाँले अब सुरक्षा अधिकारीलाई हस्तान्तरण गरीसक्नुभयो ।

- यो हतियार लोडिङ्ग समेत भएर फायरिङ्ग पोजिशनमा तयार भएको हुनाले यसलाई सुरक्षाको कारणले म यसको म्याग्जीनहरु झिकेर अलग गरिदिन्छु ।

*समिति*:- सुरक्षाका लागि यो म्याग्जीन झिक्नु पर्ने अवस्था भयो । यसलाई अहिले झोलामा राखी हाल्नुहोस् यो गोली पनि देखिने गरेर । ल झोला ल्याउनु त कपडाको । हामी M16 पट्टि छौं । यो लोडेड र सेमी अटोमेटिकमा रहिराखेको हुनाले यसको म्याग्जीन झिकेर यसलाई खतरामुक्त बनाउन पर्ने स्थिति छ । त्यसैले हामी यो खतरामुक्त बनाउँदैछौं र खतरामुक्त बनाइसकियो र भित्र उसमा गोली छ ल, त्यो तुरुन्त राख्नुस् । यसलाई राख्ने यो लामो बनाएको होला । बन्दुक राख्नलाई बनाएको झोला, यसलाई अब हामी कपडाको झोलामा सुरक्षाकोलागि राख्दैछौं । र यही सानो चौरको यो बगैंचाको दक्षिण-पश्चिम सीमानामा रहेको यो 12 Bore इटालीमा बनेको SP .A .S12-L प्रेन्चिस्पा ब्रभासियाको यसलाई पनि खतरामुक्त बनाउन यसका गोलीहरु उतार्ने र यसलाई सिलबन्दी गर्ने अवस्थामा पुगेका छौं । अनि उतारौं र यो 12 Bore बाट उतारिएका गोलीहरु झिकेर यसलाई पनि हामीले सिलबन्दी गर्दैछौं ब्यागमा । अहिले भर्खरै हामीले पोखरीबाट झिकेको शिरपोश, युवराज धिराज सरकारले पहिरीवक्सने गरेको भनौं, कुरा आइडेन्टिफाइड भएको छ ।

अब हामी यो विलियर्ड हलमा प्राप्त MP5 सब मेशिन गन खतरामुक्त बनाउन यसमा रहेका गोलीहरु र म्याग्जीन अनलोड गर्दैछौं यसमा सारा गोलीहरु सकिइसकेको अवस्थामा रहेछ । यसैगरी नजिक देखिएको एउटा ग्लक पिस्तोल अनलोड गर्दैछौं, खतरामुक्त बनाउनको लागि ।

हामी अहिले त्रिभुवन सदन सानो बैठकमा प्रवेश गरेका छौं; र यहाँ त्यो इन्सीडेन्ट भएको दिन मुमा बडामहारानी सरकार र उहाँसंग अधिराजकुमारी हेलेन र सानो रानी साहेव तीनजना यहाँ राज भइराखेको कुरा बताइएको छ र यहाँ श्री ५ महाराजाधिराज सरकार यो जमघटमा सामेल हुन सवारी हुँदा उहाँको दर्शन गर्न यहाँ प्रवेश गरेको भन्ने पनि पाइयो; र यहाँ जो जो पाहुनाहरु राज भएको थियो, यहाँ पेय पदार्थहरु रहेको मूल लामो सोफाको दाहिनेतिर एउटा ग्लास अनि देब्रेतिर एउटा पहेंलो रंगको पदार्थको ग्लास र अनि त्यसभन्दा अगाडि कोही बसेको देखिंदैन । कुनै कुरा प्रयोग भएको देखिंदैन ।

यसको अलिकति भित्रपट्टि अर्को सानो खाल छ, उतापट्टि केही बारको सामानहरु पनि छ । पिउने बार राखेको देखिन्छ । यहाँ पनि गेष्टहरु बसेको देखिन्छ । एउटा सोफाको अगाडि टेबुलमा प्रयोग गरेको एउटा गिलास राखेको पाइन्छ र चुरोट खाएको एस (खरानी) चाहिं देखिन्छ तर चुरोटको अरु बाँकी भाग यसमा देखिएन । एउटा कोकाकोला प्रयोग भएको रित्तो बोतल देखियो । अरु प्रयोग भएको यो कोठामा देखिंदैन । अब यसरी जहाँ मुमा बडामहारानी सरकार राज भएको भनिएको छ, त्यसमा त्यस्तो विशेष खतराका कुराहरु वा त्यो घटनाको कुनै प्रभाव यसमा देखिंदैन ।

यता बाहिरबीचको मुख्य विश्राम हलमा मुख्य बैठकमा प्रवेश गर्नुभन्दा पहिले सानो बैठकको ढोकाबाट प्रवेश गर्नेवित्तिकै देब्रेतिरको टेबुलमा दुईवटा- एउटा पानीको र अर्को ह्विस्कीको प्रयोग गरेको र अनि एष्ट्रेमा चाहिं चुरोटका ठुटाहरु भएको सानो एउटा टेबुल देखिन्छ । यता यो गोल टेबुलमा केही कुरा प्रयोग भएको, यहाँ बसेको कुनै चिन्हहरु देखिंदैन । यसरी जुन दुःखद घटना विलियर्ड कोठामा घटेको थियो, त्यसको कुनै प्रभाव लक्षण यसमा पाइएन । यी कोठाहरुलाई चाहिं त्रिभुवन सदनको सानो बैठक भनेर भनिन्छ । यो सानो बैठक र विलियर्ड हलको बीचको कोरिडोरमा पनि हिड्दा हिड्दै पेय पदार्थको एउटा ग्लास राखेर गएजस्तो देखिन्छ । किनभने बसेर त्यो सेवन गरे जस्तो देखिंदैन । महाराजधिराज सरकारको शिरपोश चश्मा यहाँ देखिएको छ र एउटा धर्के खैरो कोट देखिएको छ र त्यो जहाँ महाराजाधिराज सरकार गोली लागेर पल्टिवक्स्यो भन्ने कुरा छ, त्यसलाई पनि हामी सिलबन्दी गर्दैछौं । कोट चाहिं महाराजाधिराज सरकारको होइन भन्ने कुरा बुझियो । टोपी र चश्मा चाहिं निश्चित महाराजाधिराज सरकारको हो भन्ने कुरा बुझियो ।

यसरी यो विलियर्ड हलमा भएको घटनापछि र यहाँ यत्रो उपद्रव भइसकेपछि रेस्क्यू गर्नका निम्ति जुन दक्षिणतिरको ढोकापछि खुल्यो भनेर पहिले नै अंकित गरेका छौं हामीहरुले; शिशा फोडेर रेस्क्यू गर्नेहरुले भित्र पसेर रेस्क्यू गरेजस्तो देखिन्छ । अहिले जुन सामाग्रीहरु संकलन गरिरहेका छौं, यो त्यसमा रगतका गन्धहरु फैलिएको पाइएको छ । श्रीकृष्ण अगाडिपट्टि तस्वीर र पछाडिपट्टि ॐ अंकित एउटा लकेट यहाँ बाटोमा प्राप्त पनि भएको छ; गमलाको तल मूल गेटको गमलाको तल प्राप्त भएको एउटा लकेट छ । यो रेस्क्यू गर्दा खसेको जस्तो देखिन्छ ।

अहिले यो घटनास्थलमा पाइएका हातहतियार खोकाहरु, लाइभ गोलीहरु र अन्य जुत्ता चप्पल, कोट, गहना, टोपी जस्ता सामानहरु संकलन गरेर तिनीहरुलाई सिलबन्दीका लागि लाहाछाप गर्ने प्रकृया छ र भित्रको निरीक्षण भयो र यी मध्ये यहाँ रगत संकलन गरेको रेटर पनि लाहाछापभित्र परेको छ । यो सुरक्षित उसका लागि । कति छ हाम्रो यो पोका संख्या ? त्यो अहिले गर्दै गरौंला । यी मध्ये हतियार र गोलीगट्ठासंग सम्बन्धित पोका ठूला र साना गरेर नौवटा छन् । अन्य सामाग्रीहरु जुत्ता आदि ईत्यादि र साना गहनाहरु र रगतका सम्पूर्ण सामानहरु जति कलेक्सन गरिएको छ र दुईवटा ठूला यो कपडाको थैलोमा सुरक्षित राखेर लाहाछाप गरिएको छ । घटनास्थलको निरीक्षण कार्यक्रम १२:३५ मा प्रारम्भ भई पौने ६ बजे समाप्त भयो ।

**(घ) वीरेन्द्र सैनिक अस्पताल, छाउनीबाट संकलन गरिएका भौतिक चीज वस्तुहरुको विवरण**

देहाय वमोजिम प्राप्त भएका भनी वीरेन्द्र सैनिक अस्पताल, छाउनीले यस समितिलाई निम्न लिखित चिजवस्तु पठाएको थियोः-

१. तत्कालिन महाराजाधिराज श्री ५ वीरेन्द्र वीर विक्रम शाहदेव सरकारको रातो छालाको जुत्ता जोर-१, खैरो मोजा, क्रिम कलरको कुर्ता सुरुवाल, क्रिम कलरको ज्वारीकोट र भित्री गन्जी ।

२. तत्कालिन श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाह सरकारको रातो बुट्टे सारी, रातो ब्लाउज र छाला रङ्गको मोजा ।

३. श्री ५ महाराजाधिराज दीपेन्द्र वीर विक्रम शाहदेव सरकारको कालो आर्मी बुट जोर-१, आर्मीको क्यामफलाईज ज्याकेट पाईन्ट, छालाको कालो पञ्जा जोर-१, कालो मोजा जोर-१ र क्यामफलाईज भेष्ट-१ ।

४. श्री ५ अधिराजकुमार नीराजन वीर विक्रम शाहदेव सरकारको कालो बुट जोर-१, कालो कालो पाईन्ट, कालो बुट्टे कमीज र कालो मोजा ।

५. श्री ५ अधिराजकुमारी श्रृति राज्यलक्ष्मी देवी राणाको प्याजी सारी, प्याजी पेटीकोट, प्याजी ब्लाउज, सेतोमा प्याजी बुट्टा भएको भित्रि पोशाक र सेतो रुमाल ।

६. स्व. श्री ५ अधिराजकुमारी जयन्ती राज्यलक्ष्मीदेवी शाहको कालो जुत्ता जोर-१, खैरो ब्लाउज, सेडेड खुरपानी र खैरो सारी, खैरो पेटीकोट ।

७. स्व. श्री ५ शारदा राज्यलक्ष्मी देवी शाहको जुत्ता जोर-१ र प्याजी ब्लाउज ।

८. स्व. श्री ५ कुमार खड्ग विक्रम शाहको कालो जुत्ता जोर-१ र मोजा जोर-१ ।

९. स्व. श्री धीरेन्द्र शाहको खैरो कुर्ता सुरुवाल, खैरो मोजा, बुट्टे स्टकोट र खैरो जुत्ता ।

१०. <u>पहिचान हुन नसकेका सामान</u>
   (क) काटेको अन्डरवेर १ वटा,
   (ख) रातो रुमाल १ वटा,
   (ग) रातो रिवन जस्तो कपडा १ वटा,
   (घ) भित्री ब्रा २ वटा,
   (ङ) कालो छालाको पेटी १ वटा,
   (च) मार्बोलो चुरोट बट्टा १ वटा ।

११. १५/१५ वटा गोली भरिएका दुईवटा म्यागजीन राखिएको थैलो थान-१

१२. गोरख शम्शेर जंगबहादुर राणाको नामको लेवल लगाई शिशाभित्र राखिएको धातुका टुक्राहरु ।

२.　**घटनाको जानकारी सम्बन्धमा समितिले लिएको वयान**

**(क)　घटना सम्बन्धी प्रत्यक्षदर्शी**

**<u>श्री ५ बडामहारानी सरकार कोमल राज्यलक्ष्मी देवी शाह</u>**

*समितिः*　सरकार, नारायणहिटी राजदरवारमा यही १९ गते घटित घटनामा सरकारको गाथमा समेत चोट लागेको खवरले हामीलाई मर्माहत तुल्याएको छ । सरकारको शीघ्र स्वास्थ्य-लाभको कामना गर्दै सरकारमा श्री ५ महाराजाधिराज सरकारबाट उक्त घटनाका सम्बन्धमा सत्य तथ्य पत्ता लगाउन हुकुम भई गठित उच्चस्तरीय समितिको तर्फबाट घटना घटेको समयमा सरकारको समेत समुपस्थिति थियो भन्ने जानकारी प्राप्त भएकोले सरकारलाई सो सम्बन्धमा भएको जानकारी यस समितिलाई उपलब्ध भएको खण्डमा समितिलाई आफ्नो कार्यसम्पादनमा सहयोग पुग्ने दृष्टिकोणले हामी यहाँ उपस्थित भएका छौं । सरकारको स्वास्थ्य स्थितिलाई विचार गर्दै सरकारबाट यस समितिलाई त्यस घटना सम्बन्धमा केही जानकारी बक्स हुन्छ कि ?

*जवाफः*　त्यस दिन त्रिभुवन सदनमा आयोजित पारिवारिक कार्यक्रममा म पनि गएको थिएँ । श्री ५ युवराजाधिराज सरकार अलिक चाँडै सुकला भइबक्सन गएको सुनें । केही समय पश्चात् गोली चलेको आवाज आयो र त्यो गोली सिलिङ्गमा लाग्यो । त्यस पश्चात् श्री ५ महाराजाधिराज वीरेन्द्र सरकारको घाँटीको दाहिने भागमा गोली लागेको देखें । कुमार गोरख र कुमार खड्गलाई पनि गोली लाग्यो । त्यसपछि मलाई पनि पछाडिबाट लाग्यो र म लडें । त्यतिबेला मलाई सास फेर्न कठिनाई भएको महसूस भयो । शान्ती राज्यलक्ष्मी म माथि पऱ्यो र वहाँको रगत मेरो टाउकोमा लागेको थियो । राजीव र पारसले घाइतेहरूलाई लग लग भनी कराएको सुनें । शान्ती म माथि लडेको हुनाले त्यसपछि मैले अन्य कुरा देख्न पाइनँ ।

**<u>श्री ५ अधिराजकुमारी हेलेन शाह</u>**

*समितिः*　१९ गते राती राजदरवारमा घटेको घटनाका सम्बन्धमा वास्तविकता बुझ्ने क्रममा सरकार समक्ष उपस्थित छौं ।
*जवाफः*　सोध्नुस न सोध्नुस्

*समितिः*　जे जानकारी छ सरकार ।
*जवाफः*　हामीहरुचाहीं सधैं हाम्रो साथै दरवारको चलन के थियो भन्देखि महाराजाधिराज सवारी भएको थियो अफिसबाट मुमाबडामहारानी र मचाहीं एउटा कोठामा थियौं एकातिर । अरुहरु सवै Younger Generation युवराजाधिराज सहित विलियार्डतिर त्रिभुवन सदनतिर सवारी भएको थियो । त्यो दिन पनि म गएँ । गएपछि शुरु शुरु विलियर्डतिरै गए । म भन्दा अगाडि रवि शम्सेर र महेशकुमार आईपुग्या रहेछन् । अनि म एकछिन बसेपछि बडामहारानी सरकारको सवारी भयो । धमाधम सबै जना आउन थाले । आठ बजेतिर युवराजाधिराजले विन्तीगरी बक्स्यो बडामहारानीलाई । आफू मुमालाई म सवारी चलाउन जाउँ भनेर । जाउ भनेर हुकुम भयो । सवारी लिएर तल गए । मूमा बडामहारानी सवारी भएपछि हामी सबै बस्ने कोठा जहाँ हो हामी सवै त्यही गयौं । अरुहरु पनि सवै दर्शन गरिवरिकन उता गए । महाराजाधिराज सवारी नभएसम्म यतातिर आउने थिएन कोही पनि । त्यसैले बडामहारानी हामी सबैजना त्यही नै बस्यौं । त्यो दिन महाराजाधिराज पनि चाँडो सवारी भयो, ८.३० तिर सवारी भयो । त्यहाँ अलिकति ड्रिंकहरु जे जे सर्व भएपछि उतातिर सवारी भयो । महाराजाधिराज वीरेन्द्र विलियर्डमा सवारी भएको तपाईहरुलाई एक्ज्याक्ट्ली त भन्न सक्दिन तर आधा घण्टा ४५ मिनेट यस्तै कति होला १ घण्टा पनि पुगेको छैन जस्तो लाग्छ । त्यहाँ एउटा ठूलो आवाज आयो । आवाज भएपछि ३ वटा तीन गोली । पहिले पहिला त हामीलाई थाहा थिएन के हो ? साँच्ची भनुँ भने त मलाई चाँहि त्यस्तो शंका त कहिल्यै पनि मनमा हुँदै हुँदैन । विशेष वास्ता गरिएन । त्यो चल्यो एकछिनसम्म चलेपछि आखिरमा एउटा त्यो बाहिरपट्टी वगैंचामा ठ्याक्कक त्यो वगैंचाको बाहिरपट्टी हामी बस्ने पछाडीपट्टी एउटा बाहिरपट्टी ठ्याक्क त्यो झ्यालको बाहिरपट्टी एउटा वरण्डा छ त्यहाँ चाहीं मान्छे दौडिएको आवाज आयो । दौडिएको त्यस्तो जोडले होइन अलि विस्तारो दौडिएको जस्तो आवाज आयो । आएपछि अनि लोग्ने मान्छेको एउटा एकैछिनमा लोग्नेमान्छे कराएको अलि कडा साह्रो धेरै ठूलो होइन भएपछि मैले मूमा बडामहारानीलाई जाहेर गरें दिज्यू, के हो त्यो मान्छेहरु पनि कराउँछन् के हो त्यतातिर त मान्छेहरु पनि कराए भनेपछि तीन सट आयो । अब त्यो बीचमा त कति गयो हामीले वास्ता पनि गरेनौं । केटाकेटीहरु सवै खेलेको होला भन्ठानें । पहिले शुरुमा मैले एकचोटी केटाकेटी खेल्या हो वा दौडिएको होला जस्तो स्वर सुनेको थिएँ । त्यतिमात्रै हो । आखिरमा सुनेकोचाहीं जब आवाज आएपछि वान सट वा टु मैले त्यो चाहीं राम्रो सुन्न सकिन । त्यसपछि सामसुम भयो । त्यसपछिकेही भएन । सामसुम्म भयो । केही उपद्रो होला, ठट्टा होला के होला भनेर हामी चुप्प लागेर कुरा गरेर बसिराख्यौं । ७ मिनेट ८ मिनेट पछि पारस दौडिएर ढोका खोलेर आफूमुमा ! दाइले त ठूलो बुबा देखि लिएर सबैजनालाई गोली हान्यो भन्ने सुनेपछि म ढोका खोलेर अगाडि अगाडि गएँ । मुमा बडामहारानी मेरो पछाडि होइबक्सिन्थ्यो । झ्याल निर उभिई बक्स्यो पहिले दुईजना उभिएको । त्यहाँभित्र महेशकुमार र रवि शम्सेर जिल्ल परेर

उभिइरहेको हुनुहुन्थ्यो । महेशलाई बोलाइवक्स्यो । मुमा बडामहारानी सरकारलाई उसले केही पनि जवाफ टक्र्याएन । उ त्यसै खुरु खुरु गयो । रवि सम्शेरलाई चाहीं मैले पनि वोलाएँ । २ जनालाई हामीले वोलाएपछि उसले यसो हेर्‍यो । मुमा सवारीहोस् भनेर डाक्यो । त्यसै बीचमा चाही म भित्र पसिहालें विलियार्डमा । म पसेको वेलामाचाहीं अब त्यो गति देख्दा खेरीचाहीं कसैले पनि त्यो अहिले भन्न सक्दैन । मेरो ठाउँमा जो भए पनि को छ को छैन । मेरो एउटा छोरी गयो अर्कोलाई पनि गोली लागेर त्यही बसिरहेको रहेछ । कुन कुनचाहीं भन्ने थाहा पाइन । एकछिन उभिएर जताततै हेरें । सब लडिराखेको देखें । देखेपछि चाही मैले धीरेन्द्र कराई राख्या ऐया ऐया भनि कराईराखेको देखें । मैले उठाईन । उसलाई एता फर्केर आएर मुमा बडामहारानीलाई जाहेर गरें दिज्यू, धीरेन्द्र एउटा वाहेक सबैजना मरिराखेको । मैले देख्दाखेरी त्यहाँ जिउँदो पनि थाहा पाइन मरेको पनि थाहा पाइन । सबजना निश्चल थिए । विन्ति गरेपछि अनि मुमाबडामहारानीले महाराजाधिराज खै त भनेर सोधिवक्यो । पारसले भन्यो ठूलो वुवालाई त मैले मोटरमा हालेर हस्पिटल चलाई सकें । अनि बडामहारानी र निराजन खै भन्ने हुकुम भयो । त्यो बेलामा चाहीं वहाँहरु बाहिर निस्की वक्स्याथ्यो । बडामहारानी अघि अघि अं....निराजन पछि पछि कहाँ हो भन्ने मलाई पनि थाहा छैन । अनि हामीहरु हस्पिटल गयौं । धमाधम सिपाहीहरु आएर लग्न थाल्यो । सबैलाई को मैले त त्यही भन्ठानेको छु तपाईलाई मैले भनिसकें सबैजना मरीसके धीरेन्द्र एउटा जिउँदो छ भनेर । अनि त्यहाँबाट हामी दुईजना हस्पिटल गयौं । हस्पिटलमा गएपछि मुमाबडामहारानी र म भित्र गयौं । महाराजाधिराज खोई भनेर सोध्या । डाक्टरहरुले यहाँ ट्रिटमेन्ट हुँदैछ भने । निराजनलाई पनि त्यही राखी छाड्या । उसको पनि ट्रिटमेन्ट हुँदैछ भनेर अरु चाहि त जाने जति गई नै सक्या थिए वाँच्ने जति अहिले पनि छ । धीरेन्द्र एउटा पछि गयो । बाच्ने त अहिले पनि छदैछ । मैले आफ्नो आँखाले चैं कोले गोली चलायो देख्या होइन ।

समितिः सरकारहरु सानो कोठा सानो बैठकमा ?

*जवाफः* यता बाहिरबाट आएपछि बीचमा वरण्डा छ वायाँतिर ठूलो कोठा छ विलियार्ड । यतातिर दाहिनेतिर चाहीं सानो छैन दरवारको कोठाहरु ठूलोठूलो छ । हामीहरु चाहीं त्यही सधैं बस्ने उतातिरको चाहीं हामीलाई केही पनि थाहा छैन । आवाज सुन्या हो तर केटाकेटीहरु खेलेको हो कि पट्का पट्काएको हो कि, यस्तो हुन्छ भन्ने कुरा सपनामा पनि भएन । आफ्नो आँखाले त गोली चलेको पनि देखेको होइन । कानले मात्र सुनेको हो । मुमा बडामहारानीबाट पनि त्यही हो । हामी त कुरा नै गरिराखेका छौं । अघिसम्म पनि जुन बेला पारस भित्र पस्यो । त्यती सिवाय त म के भन्न सक्छु र ....

*समितिः* ..........धन्यवाद ।

***श्री ५ अधिराजकुमारी शोभा शाही***

*समितिः* सरकार, यो पारिवारिक जमघटको १९ गतेको tragic incident मा त्यस बेलामा सम्मिलित भएको भन्ने जानकारी राजदरवारको लिष्टबाट था भो सरकार घाइते भैसकेपछि त्यसरी त्यहाँ जे अनुभव जो जे भोगिवक्स्यो, जे देखिवक्स्यो सम्पूर्ण चाहीं बताइवक्स्योस् ।

*जवाफः* त्यो त हाम्रो फ्राइडे, थर्ड फ्राइडेको It was a normal gathering. हाम्रो जहिले पनि हुने ग्यादरिङ हो बोलाइबक्सेको । त्यसमा केही पनि No argument, no discussion. It was just gathering ...... कुरा केही भएको छैन । सबैजनालाई उहाँले नै ड्रिंक्सहरु बक्स्यो- सबैलाई । त्यसपछि मम्मीलाई लिन सवारी भयो । त्यसपछि मम्मी पनि सवारी भयो । त्यसपछि एकछिन पछि महाराजाधिराज सवारी भयो । त्यसपछि महाराजाधिराज सवारी होइवक्सेपछि हामीहरु एउटा कोठामा थियौं । उहाँहरू विलियर्ड रूममैं थियो । त्यसपछि यतापट्टी मम्मीहरुसंग कुरा गरिवक्सेर र हामी सबैजना यता कुरा सकेर सबैजना विलियर्ड घरमैं आयौं । त्यो बेलामा Crown Prince त्यहाँ थिएन । He had just taken a drink ...... भाइ र म कुरा गर्दाचाहीं भाइले चाहिने चारजनाको ग्रुपले माथि कोठामा लगेको छ भनी भाइले भन्यो मलाई म त होला भन्ठानें । त्यहाँबाट निस्केपछि विलियर्ड हलमा आइहालें । एकैछिन पछि चाहीं यो एकछिन पछि त विल्कुल कम्व्याट cloths लगाएर ....... (गला अवरुद्ध) .... यत्रो गन, कुरा सुरा केही पनि छैन, सबैजना बन्दछौं वरिपरि त्यसैमा ड्यारर्र भएको थियो । त्यो गरेपछि अब हाम्रो त विचारै छैन । that he intended to kill भनिकन त हाम्रा विचार छैन Mis-fire भन्ठान्या, मैले तःis-fire भन्ठानें । वीरेन्द्र दाइ लडिबक्स्यो । म गएर समातें । राजीव पनि आएर उसले हेल्प गर्‍यो । कहाँ हान्यो कहाँ लाग्यो मलाई थाहा छैन । खाली छिर्का मात्र देखें मैले । वीरेन्द्र दाइ was standing. He tried to get up. And he was holding a ..... यो छोडिवक्स्योस् भनेर मैले ट्याप्प थुतें । म्याग्जीन आयो, मैले फालिदिएँ । एकछिन पछि ड्याम्म, दिज्यू बाहिरबाट दौडदै आयो । कहाँबाट बाहिर सवारी भएको रहेछ सानी दिज्यू । बाहिरबाट ड्याम्म बाहिरै ढोकाबाट ड्याम्म हान्दाखेरी माइली भाउजु ढल्यो । यसो गरिकन ढलिबक्सेको । त्यसपछि यसो हेर्दाखेरी गोरख यतापट्टि यहाँ लागिसकेकोरहेछ । ए, पर सर, पर गर भन्दै थिएँ मैले । ल फेरि स्वामस्वाम भित्र आइदिए पछि त धीरेन्द्रले ए बाबु That's enough के भनेको थ्यो, उसलाई ड्याम्म हानिदियो । बाहिर यसो गरिकन he was back एउटा मात्र गन लिएर झरेपछि उ स्वात्रयाम्म त्यहीं । त्यसपछि दाइ ढल्नेवित्तिकै श्रुतीले ए बुबा, बुबा भनेको थियो, हस्व्याण्डलाई पनि देखेर ए बा तिमीलाई पनि लाग्यो भनेर हस्व्याण्डतिर गयो । अनि

मैले हेर्दाखेरी त्यहीं लड्या । त्यसपछि एकैछिन पछि त भाइलाई हानेपछि त यता फर्केर बहिनी चाहींलाई हान्छ । बहिनी चाहींलाई हानेपछि फेरि महाराजाधिराजलाई, महाराजाधिराज ढालिवक्स्यो । ...... (रुँदै) ......... He was only stand... It was the ..... fightMovement पछि he tried to get-up. अनि म यता फर्कें । ..... राजीव चाहीं भाग्यो । .... (गला अवरुद्ध भएकोले बुझ्न नसकेको) ..... अब ऊ त त्यो त उ चाहीं दौडेर उता आर्मिको मान्छे, त गाये नि । म चाहीं अब यता फर्केपछि चाहिने ........... त्यसपछि अनि Actually he killed that third time, मलाई त्यो त थाहा छैन । म चाहीं यतै बसेको बस्यै भएँ । There was no change, vigorous firing. अब त्यसरी हानेको थियो । देखेको होइन उता । ............ त्यो त मलाई थाहा छैन । उता श्रुती जहाँ पल्टेको थियो त्यही पल्टिराखेको, चलहल केही छैन । उसको माथी ज्वाई छ । त्यसपछि त मलाई दुख्यो, ऐया ऐया भनें एकछिन; त्यसपछि...... सुरेन्द्र ए.डि.सी. अरु चाहीं । सुरेन्द्र ए.डि.सी. दौड्यो ...... आर्मि आएर अनि पारस, Paras was only shouting. चाहिने त्यो झ्याल फोरेर भित्र आइज भनीकन ........... अनि ल है पहिले ठूलो बुबालाई लग भनिकन ............ त्यसपछि मलाई बोकेर लग्यो । अनी ......... भाउज्यू चाहिनी बाहिर सवारी भएको हो । अब निराजन गएको पनि मैले देखेको छैन, महाराजाधिराज लडिबक्सेपछि पारस आउन लागेको थियो । उताबाट पारस नआऊ तिमी त्यहीं बस भनेपछि कसो मानेर त्यहीं बस्यो । नत्र लोग्ने मानिस आइहाल्थ्यो नि । .... (गला अवरुद्ध) ..... महाराजाधिराज ढलिबक्स्यो, गोरख ढलिराखेको थियो, खड्ग विक्रम र माइली भाउजुलाई हान्यो । कहाँबाट हानेको पनि थाहा छैन । ड्याङ्ग मात्र के भएको थियो, माइली भाउजु ढल्यो । अनि भित्र आएर फेरि भाइलाई, अनि श्रुतीलाई, अनि फेरि महाराजाधिराजलाई ...... (रूँदै) .... त्यस्तो कोखबाट पनि कोही आउँछ, ..... गरिकन आफ्नो सन्तान भनेपछि त ..... (रूँदै) क्यामोफ्ल्याज (सैनिक पोशाक) युवराजाधिराज ..... सवारी भयो । अनि चाहिने पहिला ड्यार ड्यार सिधै महाराजाधिराजलाई, महाराजाधिराज ढलेपछि यस्तोमा लागेको ... त्यसपछि सबैजना आत्तिने भैहाले । ............ अनि त्यहाँ पछि कान्छो भाइ, गोरख र कुमार खड्गविक्रम......... लागेर ढलेपछि म कान्छाकहाँ गएर के भयो भन्दा सास फेर्न गाह्रो भयो भन्दै थियो । यति हानेर युवराजाधिराज बाहिर सवारी भयो । बाहिर सवारी भयो । त्यति भन्दा चाहीं मलाई चाहिने अनि त्यहाँबाट पिठमा लाग्यो । अनि म ढलिहालें । म चाहीं अब ढोकाबाट मैले देखेको होइन । म पछाडि फर्केको थिएँ पछाडिबाट लागेको म ढलेपछि त्यति वेला के भयो थाहा छैन । म उठेपछि चाहिने पछिपछि सास फेर्न गाह्रो भयो भनि उ म माथि चाहीं शान्ती, म माथि ऊ सुतेको थियो । मैले प्रेस गरेको, प्रेस गरें, प्रेस गरेबाट .... ब्लिडिङ्ग भयो, सबै बिलडिङ्ग ...... राजीव र ........ दुईजना निक्लिए, लग लग ...... मैले हेर्दा महाराजाधिराजलाई लगिसकेको रहेछ क्यारे । गोरख र श्रुती, गोरखलाई सिटमा सुताइराखेको ......... अनि कान्छो भाइ, मैले देखेको त्यत्ति हो ।

*समिति:* धन्यवाद ।

आज २८ गते हामिहरु Royalties हरुको जानकारीको लागि आज शनिवारको दिन ९:०० बजे निर्मल निवास प्रवेश गरेका छौं । यहाँ पारस सरकार र यहाँ रहेका अन्य राजपरिवारका सदस्यहरु जसको सम्बन्ध त्यो घटनासँग थियो उहाँहरु जानकारी लिने हाम्रो, यहाँ निर्मल निवासमा, काम हुन्छ ।

**श्री ५ शाहज्यादा पारस वीर विक्रम शाह**

*समिति:* सरकार, राजदरवारमा भएको १९ गते जुन पारिवारिक जमघट थियो, त्यसमा सरकारको उपस्थिति छ भन्ने जानकारी हामीलाई प्राप्त भयो । त्यसबाट सरकारले के नजर गरिबक्स्यो, के अनुभव गरिबक्स्यो, त्यो सबै जानकारी भएको सुनेको कुराहरु चाहीँ हामीलाई प्राप्त भएमा रिपोर्ट दिन सजिलो पर्ने थियो ?

*जवाफ:* अब, हामी पुग्यौं त्यहाँ त्यस्तै अन्दाजी साँढे ७:०० भन्दा अलि ढिलो पुग्यौं । हामी त्यही .... ७।४० तिर पुग्यौं, सबै जना आइसकेको थियो । मुमा, म, बहिनी, हिमानी र हामी अलि ढिलो पुग्यौं । ७।४० तिर पुग्यौं, पुग्दाखेरी अ... युवराजाधिराज अलिकति ककटेल ज्यूनार भैसक्या जस्तो थियो । अनि के खाने-मैले कोक मात्र खाने विचार गेरं । ए कोकमात्र खाने ! म त ह्विस्की खाएर बसेको छु हुकुम भयो । त्यो बेलासम्म ठिक्कै होइबक्सन्थ्यो, एकदमै लागेको जस्तो गरिबक्सी राखेकोथ्यो । अ ..... कुरा गर्दाखेरी के भो भन्दाखेरी हैन यहि विवाहको कुरा भइ राखेको छ । मेरो, मुमासँग पनि कुरा गरें । आफूमुमासँग पनि कुरा गरें अनि, दुवै जनाले हुन्न भन्नु भयो । अब आइतवार बुबासँग कुरा गर्छु हुकुम भयो । त्यति कुरा भइ राखेको थियो, त्यत्ति हुँदा हुँदै आठ बज्यो । सबै जनालाई ड्रिंक्स सिंक्स टक्राइबक्स्यो । आठ बज्यो आफूमुमा, मुमा बडामहारानी सवारी होइबक्स्यो, फेरी सरकारबाटै सवारी चलाइबक्सेका, फेरी ...... ड्रिंक्स दिइबक्स्यो, अनि यस्तै साँढे आठतिर महाराजाधिराज सवारी होइबक्स्यो । अफिस सक्याएर सवारी होइबक्स्यो, त्यो बेलामा दाई हामीसँग भित्र होइबक्सन्थ्यो । जहाँ घटना भयो त्यही कोठामा होइबक्सन्थ्यो । एकदमै लागेको जस्तो ढलिबक्स्यो, बेहोसै होइबक्सेको जस्तो सुकला नै भयो, त्यही भुइमा नै सुकला भयो, म, गोरख, निराजन र राजिव भएर उठाएर लगेर सरकार यहाँ त मिलेन ठूलो बुबा सवारी होइबक्स्यो, अब यसो यस्तो कति छ ...... छ माथि सवारी चलाउँछौं भनेर हामी चार जना भएर

माथि खोपीमा सवारी चलायौं, त्यो खोपीमा लगेर गद्दीमा त सुकला गराउन पाइन । गद्दीको मुन्तिर सानो ओछ्यान छ नि त्यहीं नै सुताएर गयौं हामीले । करीव साँढे आठ, जस्तो भाथ्यो, साँढे आठ त्यस्तै ३१ ।३२, आठ ३१ ।३२ होला । हामी तल आयौं । वत्तिसत्ति निभाएर तल आयौं । तल आएपछि अब महाराजाधिराजको भित्रै, मुमा बडामहारानी सरकार जहाँ राज होइबक्सेकोथ्यो त्यहीं नै हेलेन शाहसँग मिटिङ्ग भइ राखेको थियो । हामीले दर्शन गर्न पनि पाएको थिएन, वाहिर कुरेर बसि राखेको थिएँ, त्यहाँ भित्रको मिटिङ्ग आधा घण्टा जति चल्यो होला, मेक्सीमम आधा घण्टाजति चल्यो होला । त्यसपछि हामी दर्शन गरेर यता आयौं । महाराजाधिराज सरकार र मुमा बडामहारानी सरकार पनि यतै सवारी भयो । त्यही कोठामा जहाँ यो घटना भयो, त्यही कोठामा सवारी भयो । भर्खर ड्रिंक्स लिई बक्सेको थियो, महाराजाधिराज सरकारले । हामीले चियर्स पनि गरेको छैनौं, भर्खर ड्रिक्स लिई बक्सेको थियो, यसै बीचमा अब हामीचाँही एतापट्टी कुनामा थियौं हजुर, देखिएन युवराजधिराज सवारी भएको । अ..... हामीले युवराजधिराज सवारी भएको देखेनौं, हामी कुनामा थियौं । मैले त यो ..... ........ ...................

*समिति:* कुना भनेको त्यो बडामहारानी सरकार राज भएको कुर्सितिर कि?
*जवाफ:* होइन क्यारेमवोर्ड छ नी ।

*समिति:* क्यारेमवोर्ड यो?
*जवाफ:* क्यारमबोर्ड, क्यारमबोर्ड छ नी ।

*समिति:* त्यो वारको पछाडि ?
*जवाफ:* हो, बारको पछाडि त्यो ...... कुनामा हामी बस्ने कुना त्यही हो । हामी Youngs हरुको, अब त्याहाँ उताबाट चुरोट सुरोट समाएको नदेखियोस् भनेर त्यो कुनामा हामी धेरै जस्तो बस्ने त्यही कुनामा हो । अनि त्यहाँ मैले सवारी भएको कोही देखेको थिइन, मैले सवारी भएको भनेको थाहा पाएको पहिलो बन्दुक पड्केपछि थाहा पाएँ । गड्याङ्ग गऱ्यो, त्यत्ति ३ राउण्ड जति फायर भएको छ । पहिले सवारी हुने वित्तिकै ३ फाएर भएको छ । एउटा माथि छ, एउटा सिधा छ । त्यसरी दागि बक्सदाखेरी एउटा सिधै गएको छ, एउटा माथि गएको छ । ३ राउण्ड जस्तो लाग्छ मलाई जहाँसम्म लाग्छ । अब त्यस्तो हुँदाखेरी ३ राउण्ड जस्तो लाग्छ First मैं त्यो पनि आवाज । महाराजाधिराजले के गरेको मात्र हुकुम भएको थियो ड्याङ्ग ड्याङ्ग एउटा यस्तोमा एउटा यस्तोमा । महाराजाधिराज ढलिबक्स्यो । म र डाक्टर राजीव सँग सँगै । दुइजना कुदेर गयौं । डा. राजीव चाही महाराजाधिराज भएको ठाउँमा कुद्न भ्यायो हजुर, मलाई चाहीं अधिराजकुमारी शोभाले जानै दिन बक्सेन, तिमी त्यहीं बस हिड्ने होइन, हुकुम भयो । त्यही नै मैले पछाडी फर्केर बहिनीहरु सबै जनालाई ढल्नलाई सुत तिमिहरु यहाँ भने । यहाँ वाङ्ग वाङ्ग पड्कन थालिसक्यो सबै जना सुत भनेर त्यो लाइन क्रोसियरमा सबैजनालाई राखें । उता दुई जना सिनियर मेम्वरहरु पनि महेशकुमार र रवी शम्शेर दुवै जना पनि मेरै छेउमा थियो । दुवै जनालाई पनि मैले लाइन क्रोसियरमा राखें । यत्तिमै यत्ति हुँदा हुँदै युवराजधिराज सरकार, फेरी फर्केर सवारी भयो । मैले देखेको चाहीं हजुर, महाराजाधिराजलाई हानिबक्सेको देखें । धिरेन्द्र सरकारलाई हानी बक्सेको देखें, बाबा enough, you done enough damage भनेर second time फर्केर जाँदाखेरी, धीरेन्द्र सरकारले के हुकुम भयो भने you done damage हुकुम भयो । त्यति हुकुम हुँदाखेरी ड्याङ्ग ड्याङ्ग अर्को एउटा यस्तोमा लागेको छ । एउटा होकी दुइटा त्यो पनि धीरेन्द्र सरकारलाई, राम्रो सँग सम्झन सकेको छैन । ढलिबक्स्यो । धीरेन्द्र सरकार ढलिबक्स्यो, ढलिबक्से वित्तिकै त त्यसपछि त अरुहरु मान्छेहरु त one after another को ढल्यो को ढल्यो त्यसपछि राम्रोसँग भन्न सक्दिन । म पछाडी फर्केर बहिनीहरु सुताउन थाली सकेको थिए, अं...... मैले ढलिबक्सेको देखेको महाराजाधिराज ढलिबक्सेको देखें यता, कुमार खड्ग ढलिबक्सेको थियो, उता कुमार गोरख ढलेको देखें । त्यो चाही Frist मै ठूलो बुबा सँगसँगै ३ जना ढलेको छ । त्यो First Automatic weapon MP-5 को फाएरले ३ जना ढलेको छ । वाहिर सवारी भयो, फेरी फर्केर सवारी भयो, त्यसपछि त्यो सानो weaponMP-5 automatic त्यो फालिबक्स्यो, त्योweapon महाराजाधिराज सरकारले टिपिबक्स्यो । त्यो weapon टिपिबक्सेको थियो । अधिराजकुमारी शोभा सवारी भएर त्यो weapon लिई बक्स्यो, म्यागजिन पनि झिकिबक्स्यो । त्यही भइमा राख्दीबक्स्यो त्यो । अब के भन्ठानी बक्स्यो भने त्यही एउटा मात्र होला भन्दठानी बक्सेछ । दाइले चाही अरु पनि बोकिबस्केको मैले पनि देखेको हो । अरु तीनवटा बोकिबस्केको थियो, चारवटा थियो weapon । एउटा चाहीने बन्दुक left side मा थियो hand gun. Hand gun चाही Left side मा थियो । दाहिने वगलिमाः MP-5 थियो । भिरिबक्सेको shot gun र एम १६, त्यो Automatic हो । भ्यार्रर गरेर ठूलो बुबालाई हानीबक्स्यो, कान्छो बुबालाई पनि हानी बक्स्यो, यता खड्ग विक्रम ढलिबक्स्यो उता गोरख ढल्यो । त्यो first attack मै कता कता दागेर वाहिर सवारी भयो । त्यसछि हामी त कुनैमा थियौं । वाहिरपट्टी के भयो मैले त देखिन फेरी भित्र सवारी भयो । सवारी भएर ठूलो बुबालाई ..................

*समिति:* समयको त्यस्तो कुनै ग्याप लामो ग्याप त हैन ?

*जवाफः* छैन, एक मिनेट पनि छैन, ३० सेकेण्ड होला म्याक्सिमम्, म्याक्सिमम् भए ३० सेकेण्ड, भित्र बाहिर भित्र वाहिर गरिबक्स्यो । सवारी भयो ठूलो चाही बन्दुक एम १६ एम १६ ले पहिले नै ठूलो बुबाको माथमा हानिबक्स्यो, सट त्यस पछि यता सवारी भयो, खड्ग फुपाजु ढलिबक्स्यो, कुमार खड्ग त्यो वारको ठ्याक्कै तल ढलिबक्स्यो ।

………… हजुर, उतापट्टी गोरख, ठूलो बुबा बीचमा स्नुकर बोर्डको तल गोरख ढलिराखेको थियो, …… श्रुति, त्यसपछि श्रुति मैले आएको देखिन, गोरखलाई गएर बाबा तिमीलाई पनि लाग्यो भनेको देखें । त्यो गएको बेलामा उताबाट फर्कि बस्क्यो, युवराजाधिराज सवारी भयो, यतापट्टी ढली राखेको थियो हजुर, पहिला कुमार खड्ग ढलेकोमा अधिराजकुमारी शारदा सवारी भो । तिमिलाई के भयो तिमीलाई के भयो भनेर सवारी भई माथि पट्टी सुतिबक्स्यो, खड्ग फुपाज्यूको माथि ढलेर कवर गरिबक्स्यो । युवराजधिराज सवारी भयो ड्याङ्ग ड्याङ्ग (Point Blank) ड्याङ्ग ड्याङ्ग ड्याङ्ग यस्तो घारीबाट देखेको त्यही देखेको । त्यो भएको म यताको कुनाको मेचमा त्यो वारको मूनिबाट त्यो चाही राम्रो सँग देखेको हो मैले । ड्याङ्ग हानी बक्स्यो । त्यो गोली आएर यतापट्टी कार्पेटमा लागेछ । भएर आएर मेचको यतापट्टी काठमा लागेर मेरो साइडमा महेश कुमारलाई राखेको थिएँ मैले, त्यो गोली उछिट्टिएर गएर उसको यस्तोमा लागेको हो । त्यो चाही लागेको उसलाई । अब त्यस पछि फेरी वाहिर सवारी भएको हो कि म राम्रो सँग सम्भन सकिन, वाहिर सवारी भएको जस्तो लाग्दछ, दुईतिन चोटी गरिबक्स्यो भित्र, वाहिर, Third time सवारी हुँदा चाही यता … अ… शाहज्यादीा जयन्ती दिदी, केतकी अ… श्रुति ३ जनालाई हानी बक्स्यो । श्रुती Third time …. अनि बाहिर सवारी भयो युवराज सरकार चाही मैले त्यसपछि, यता कुनामा सवारी भयो, त्यो अग्लो मेच जस्तो छ नि हजुर, त्यो, कुनामा सवारी भयो, त्यसपछि डाइरेक्ट नजरमा हामी पऱ्यौ ……. के गरिबक्स्या हजुर ….. हामी ….. के गरिबक्स्या please …… गई बक्स्योस भनेर त्यो विन्ति जाहेर गरें मैले । नत्र भए सबै जनालाई हानेको भए म थिएँ, महेश मेरो पछाडि थियो, रवी उतापट्टी ठ्याक्कै वारको मुनि रवि थियो । अ…… महेशको पछाडि मेरो वहिनी छ । पछाडी मेरो वाइफ थियो, मेरो वाइफ पछाडि मेरो ३ जना वहिनीहरु मैले राखेको थिएँ । लुकाएर राखेको थिएँ । एउटा वहिनी चाँही त्यो सोफा जस्तो छ त्यसको पछाडि राखेको थिएँ । एकदमै कभर गरेर राखेको थिए मैले । मैले चाही दाइसँग के गरिबक्स्या हामी यस्तो यहाँ त हामी मात्र छौं please …. one by one सबैलाई हेरेर छोडेर बाहिर लागिबक्स्यो, त्यसपछि थाहा भयो हामीलाई हानी बक्सेन भनेर । म उठेर गएँ । त्यहाँ अरु मान्छे ढलिराखेको थियो । के के भाछ भनेर मैले कान्छो बुवाका गएँ । पारस मेरो खुट्टा चलाउन मैले खुट्टै चलेन अं. …… मेरा खुट्टा खुम्च्याउन सक्दिन खुट्टा चलाई देउ । अलिकति चलाएँ, फिल गर्न सकिबक्सेन । त्यसपछि यता केटाकेटीलाई हेर भन्नु भयो, मैले त मेरो मुमा ढलेको पनि देखेको छैन । मुमा पनि देखेको छैन, यता अधिराजकुमारी शान्ति पनि देखेको छैन, उता उता …… वडामहारानी सरकार निराजनको त वाहिरै कुरा भयो मैले त्यति देखेकै छैन । अनि त्यो बेलामा हेर्दा खेरी मुमा भर्खर उठि बक्सिराथ्यो, ढली बक्सेको । मूमा तल होइसिन्थ्यो । अधिराजकुमारी शान्ति माथि होइसिन्थ्यो । मुमाले चाही घचडेर उठिबक्सेको देखें । म help गरेर उठाएँ मुमालाई । …… मठिक छैन, म ठिक छैन भन्नु भयो, माथबाटपनि रगत आइराखेको यस्तो समातेर बसिबक्स्याथ्यो । माथको रगत चाहिने अधिराजकुमारी शान्तिको रगत रहेछ । मैले त माथमा लागेछ भन्ठानेको थिए पहिला । अधिराजकुमारीको रगत रहेछ । त्यतिगरे पछि कहाँ लागेको छ भन्दा यहाँ लागेको छ हुकुम भयो, माथ पनि चेक गरें मैले, केही पनि छैन । त्यसपछि म दौडेर गएर यता मुमा वडामहारानी सरकारकाँ गएँ । वाहिर पनि मैले त फायरिङ्ग सुनेको थिएँ । मैले त उता भन्ठाने, मूमा वडामहारानी सरकरको खोपिमा भन्ठानें । दौडेर त्यहाँ गए त्यहाँ त केही पनि भएको छैन । त्यहाँ यस्तो यस्तो भयो भनेर जाहेर गरें, त्यो बेलासम्म फायरिङ्ग सकिसकेको थियो, म जाँदा मुमा वडामहारानी सरकार ……

*समितिः* मुमा वडामहारानी सरकार भनेको उता सानो बैठकमा …

*जवाफः* उता सानो बैठक, वाहिर पट्टीको । त्यहाँ होइबक्सन्थ्यो । त्याहाँ जाँदासम्म Firing बन्द भएको थियो । जब म मान्छेहरुलाई हेर्न गएको थिए त्यो वेलासम्म कोही फायरिङ्ग भइ राखेको थियो । वाहिर ….. त्यो चौरमा फायरिङ्ग भइ राखको थियो । लास्ट भएकै चौरमा हो । त्यसमा पनि के भयो म केही भन्न सक्दिन । मैले देखेको होइन । कसलाई हानिबक्स्यो, त्यहाँ कसरी घटना भयो, त्यो पहिला कसलाई हानिबक्स्यो, पछि कसलाई हानीबक्स्यो मलाई थाहा छैन । मैले त मुमालाई लागेको देखेको होइन, अहिले कुरा सुन्दाखेरी वाहिरबाट हानीबक्सेको मुमालाई पछाडी दुइटा वाहिरबाट हानीबक्सेको मात्र सुनें । त्यो मलाई थाहा छैन मैले नदेखेको कुरा म भन्न सक्दिन । मैले देखेको कुराचाही यति हो । म पनि त्यसपछि मान्छेहरुलाई हेरें, सबैजना ढली राखेको छन् । खुट्टा चलाई देउ भन्नु भयो । पाउ चलाएँ, सिधै हेर्न सकिदैन यता केतकी फुपुलाई हेर भन्नु भयो, कान्छो बुबाले । म खुट्टा पनि चलाउन सक्दिन म हेल्प भन्दा धेरै त्यो जाहेर गरें । दौडेर आफूमुमा कहाँ गएँ मुमावडामहारानी सरकारकाँ ३ जना होइबक्सन्थ्यो, त्यहाँ केही पनि भएको छैन । बाहिर दौडेर ए.डि.सी.हरुलाई भित्र ल्याएँ । त्यो ए.डि.सी.हरु वाहिर गयो, वाहिर जाँदाखेरी ….. हरु ठ्याक्क आइराखेको थियो । म वाहिर पुग्नु र ADC हरु आइपुग्न Almost सेम टाइम थियो । अनि त्याहाँ बाहिर गएर के भने यो भित्र मरेको मान्छे पनि छ घाइते मान्छेहरु पनि छ । मरेको मान्छेहरुलाई छाडदेउ । घाइते मान्छेहरुलाई दौडाइहाल पहिला, भित्र लगें घाइते मान्छेहरु सबै जना पहिला उठाएर one by one सबै जनालाई जो जो पहिला गए जो जो हाल्न सकें पठाएथें, ५–६ मर्डरहरु थिए । जो जो आए हाल्दै पठाउँदै थिएँ । अब दाई, बडामहारानी सरकार र भाइलाई भेटाउन, गएको तिमिहरु खोज भनेर ३ जना । दाइको एडिसी दौडेर आयो he shot himself, he shot himself भन्दै आयो । त्यसपछि

भाइ कहाँ भन्दा भाइलाई पनि हानिबक्स्यो । ठूलोमुमा खोइ, ठूलो मुमालाई पनि डाउन, सबै जना डाउन ठुलोमुमाको chance नै छैन भनेर उनीहरुले मलाई भन्यो । मैले देखेको होइन, ठुलोमुमाको चान्स छैन, दाइचाही ऐया ऐया गरेर लडीबक्स्याथ्यो, माथमा लागेको थियो । ल हाल भनेर दाइ र भाइलाई चाही मैले सँगै हालेर दाइको एडिसीले हाल्यो, म अगाडी बसे, पछाडि एकजना ड्राइभरले दाइलाई समाइराथ्यो र भाइलाई समोतेको थियो पछाडी अर्को एक जना थियो । दुइजना चाही म र दुईजना एडिसी अर्को एक जना ड्राइभर भएर अस्पताल पुऱ्याको । त्यतिवेला महाराजाधिराज सरकारको सवारी चलाइसकेको थियो । .......... सबैभन्दा पहिला त सुन्दर भन्ने एडिसी छ, त्यो गर्दा उ आयो, उता उताबाट घुमेर आयो त्यहाँ त फायरिङ्ग भइ राखेको थियो । उसले अरु मान्छे ल्याउन सकेन, उताबाट वाहिर घुमेर फायरिङ्ग भइ राखेको थियो, उता ढोकाको शिशा फुटाएर मैले आउ भन्दिए । यो फुटाएर भित्र आएर ठूलो बुबा महाराजाधिराज सरकारलाई लग्यो, महाराजाधिराज सरकारलाई पहिला लगेको हो ।

यो राजीव कहाँ थ्यो के थ्यो, राजीव गएको पनि देखेको छैन, हजुर, म पछाडि गर्दै थिए यता मान्छेहरु हेर्दै थिएँ, राजीव गएको मैले देखेको होइन, सबभन्दा पहिला चाही महाराजाधिराज सरकारलाई लिएर गएको । त्यसपछि चाहीं म गएर मान्छेहरुलाई हेर्न गएको । ए.डि.सी. हरुलाई मैले नै बोलाएर त्यो शिशा ढोका फुटालेर महाराजाधिराज सरकारको सवारी चलाएँ । मैले देखेको त यत्ति नै हो ।

समितिः सरकारले कति weapon use भएको देखिबक्स्यो ?

जवाफः मलाई जहाँसम्म लाग्दछ एउटा एम १६ यूज भएको छ । Glock यूज भएको छ । चारवटा यूज भएको छ । मैले त्यो 12 bore फायर गरेको देखेको छैन । त्यसको फाएर देखेको होइन मैले । अरुचाहीं फायर भएको देखेको छु मैले । यो एम १६ फायर भएको देखेको हुँ ।

*समितिः* युवराजधिराजको कसरी ? ।

*जवाफः* मैले सुने अनुसार दाइले आफूलाई हानिवक्स्यो, ब्रिजमा हानिवक्सेको ।

*समितिः-* यसको पछाडि के यस्तो कारण ?

*जवाफः-* यो विवाहकै हो हजूर । मलाई जहाँसम्म लाग्छ, विवाहकै हो । यो शुरु भएको पोहोर गएको जन्मोत्सवमा शुरु भएको कुरा हो । पार्टी भएपछि पार्टी भएको त्यही ठाउँमै त्यही ठाउँमा भएको कुरा हो । त्यहीं नै हामी आएर कुरा गर्दाखेरी जो जो against अघि जो जो with अब भाई र म with जहिले पनि वीथ । दाइको त हामी जे जे हुकुम हुन्छ त्यही गर्ने मान्छे । भाई र म with थियौं । अब राजिव त डा. with भयो, श्रुती, गोरखहरु र अरु बहिनीहरु against थियो विवाहकोमा । मेन कुरा यही नै जस्तो लाग्दछ । मेन कुरा यही हो जस्तो लाग्दछ ।

*समितिः-* तर त्यो दिन त्यहाँ त्यो कुरा चल्यो कि चलेन ?

*जवाफः-* म संग कुरा गरिवक्स्या छैन । मैले अघि तपाईलाई भनेको जस्तो म जाने बित्तिकै के मर्जीभयो भने मलाई मूमासंग पनि कुरा गरें, आफु मुमासंग पनि कुरा गरें, नहुने भयो । अब म बुबासंग आइतबार दर्शन पाउँछु, त्यो बेला कुरा गर्छु, त्यत्ति मात्र हुकुम भाथ्यो मलाई ।

*समितिः-* राम्रो मुड थियो ?

*जवाफः-* लागेको जस्तो भएको थियो । एकदमै राम्रो थियो मूढ । त्यस्तो होला भन्ने केही सोचेकै थिएनौं हामीले । एकदमै जोक गरी बक्सेको जस्तो सबैलाई हँसाइवक्सेको थियो, त्यहाँ तल होइवक्सँदासम्म त ।

*समितिः-* सरकार माथि कसले पुऱ्याएको ?

*जवाफः-* हजूर । हामी चारजनाले पुऱ्याएको । हामी चारजना, एकजनाले कहाँ सक्नु !

*समितिः-* बोकेरै लगिवक्स्यो ?

*जवाफः-* दुईजना साइडमा म पछाडि यसरी उचालेर गोरख र भाइले, अं.... राजीव र भाइले दुईजना साइडमा मैले पछाडी समाएर माथि लग्यौं । गोरख होइन, गोरख पछि पछि आउँदै थियो । माथि ......

*समितिः-* तल सुताइवक्स्यो ?

*जवाफः-* तल, मेन गद्दीमा त सुताएनौं । तल सुतायौं । मैले भाईलाई भनेको वेपनहरु झिक लैजाऊ, अप्ठ्यारो हुन्छ झिक । ..... पर्दैन होला .....

*समितिः-* त्यो कोठाबाट ?

*जवाफः-* कोठाबाट । माथिको कोठाबाट । जुन मेन गद्दी थियो, त्यो गद्दी भन्दा तल अर्को एउटा बेड ... ऊ ..... ग्राउण्ड बेड जस्तो त्यहाँ सुताएर हामी तल आएको ।

*जवाफः-* वेपन्सहरु ?
*जवाफः-* वेपन्स अब त्यो, त्यस्तो त बोकिवक्सेको छैन । एमपी ५ र मैले देखेको छैन कहाँ थियो । अँ, ...... अनि एम १६ चाहिनी त्यो तखताहरु छ नि, जाने बित्तिकै तखताहरु जस्तो छ ।

*समितिः-* त्यसमा कार्टिजहरु पनि निस्किराखेको थियो ?
*जवाफः-* हो, त्यो तखतामा छ । त्यो होला ... अँ.... बट्टाभित्रै बक्स भित्र नै थियो । त्यो तखतामा नै देखेको थिएँ मैले । त्यो चाहीं एम १६ चाहिनी । ...... पनि म चिन्छु हजूर जहिले पनि चलाईवक्सिराखेको हो । अब यस्तो हुन्छ भनेर कसले भन्न सक्ला र ?

*समितिः-* अरु सरकारलाई सम्झिनुपर्ने त्यस्तो केही बाँकी ?
*जवाफः-* म अब सम्झें भनेदेखि, म त्यही सम्झन खोजिरहेको छु । त्यो यस्तो छिटो भैद्याथ्यो कि सबै कुरा मैले गर्न सकेको काम गरेको हो । अब सक्नेजति गरेको हो । बचाउन खोजेको हो मान्छेलाई । त्यही पनि अरु पनि बचाउन सक्थें कि जस्तो लाग्छ । आफूलाई अहिले, सोंच्दाखेरी । जे जति गरें त्यो कम भयो जस्तो लाग्छ आफूलाई ।

*समितिः* हस् त ।

**श्री ५ शाहज्यादी हिमानी राज्यलक्ष्मी देवी शाह**

*समितिः-* त्यो १९ गतेको पारिवारिक जमघटमा सरकारको सवारी भएको भन्ने कुरा आइराखेको छ । लिष्ट प्राप्त गऱ्यौं । अब सरकारलाई के कति सम्झना छ ? डिटेलमा पाउन पाएदेखि हामीलाई रिपोर्टको लागि सजिलो पर्छ ।

*जवाफः-* डिटेलमा त अब के भयो हामीलाई त्यो त थाहा भएन । तर सुरुदेखिन् पहिला हामी गएको आफुमुमा सवारी भयो ८:०० बजे । त्यसपछि ठूलो बुबा सवारी हुँदाखेरी अलि अगाडि समय त मलाई थाहा छैन ठूलो बुबा सवारी हुनु भन्दा पहिले crown prince लाई निराजन सरकार, पारश, राजीव ज्वाई, गोरख बोकेर खोपीमा सवारी चलाको । पछि महाराजाधिराज सवारी भएको एकै ड्याङ्ग आवाज आयो । अनि ......... अनि त्यसपछि ....... कान्छो बुबा अगाडि सर्नुभयो........

कान्छा वुवा लाई हानी बक्स्यो अनि ..... कुनातिर यसो सायड परेर लुकेर वसिराखेका थियौं अनि त्यसपछि चुप लागेर बस्यौं ...... त्यसपछि फेरी आएर परर परर् बन्दुक पड्केको सुनेको ............... त्यत्ति नै

*समितिः* यसमा, अतिरिक्त जानकारी सरकारलाई छ, छैन ? अनि आफ्नो चाही ?
*जवाफः* हामीतिर पनि बन्दुक तेर्स्याइ रहनु भएको थियो ।

*समितिः* सरकारहरु चाही उतापट्टी राज होइबक्सेको होला, वारको उतापट्टी?
जवाफः डाइनिङ्ग रुम जाने डोर छ नि त्यसैको एतापट्टी एउटा कर्नर छ, त्यसमा हामी ।

समितिः कहाँनेर ?
*जवाफः* यतापट्टी चाहिने यतापट्टी साइडमा म थिए ........... ।

*समितिः* अनि त्यो बगैचाका कुरा ?
*जवाफः* बन्दुकहरु पड्केको मात्र सुनें ........... ।

समितिः धन्यवाद ।

**श्री ५ शाहज्यादी पूजा राज्यलक्ष्मी देवी शाही**

*समितिः* राजदरवारको त्यो जमघटमा को को सवारी होइबक्सेको थियो, .... त्यो घटनास्थलमा सरकारबाट के देखिबक्स्यो, कस्तो कस्तो दृश्य के कस्ले हानेको जस्तो सरकारलाई थाहा छ भने हामीलाई रिपोर्ट तयार पार्न सजिलो हुने हुनाले जानकारी लिन आएका हौं ।

*जवाफ:* राती शुक्रवारको पार्टी थियो । त्यहीँ गएको, हामी जादाखेरी पछि हामी पुगेर यताउती भै रहेको थियौ पार्टी, त्यत्तिकै ८:०० बजेतिर सवारी भयो आफूमुमा अनि........... त्यसपछि अब मेरो ....... हसब्याण्ड र निराजनले लगेर माथि सुताएर आको । एकै छिनमा दिपेन्द्र आर्मी ड्रेसमा ठूलो ड्रेसमा गन फेरी पहिला माथि फायर भयो, सिलिङ्गमा त्यसपछि ठूलो बुबालाई हानिबस्यो, ठूलो बुबालाई हानिबक्सेर .......... को को लाई हानिबक्स्यो ........ अरु त सबै जना ढलेको देखेको छु मैले । .......... अनि त्यसपछि हानिराखेको थियो हान्दा भ्यारारर भयो । सबैजनालाई पारसदाई, पारस दाइले लुकाइदियो पारस दाइले हामी सबै जनालाई ...... सोफाको पछाडि .... पारस दाई अगाडी बसेर ...... हामी हेर्न आएको वाहिर ...... पारस ....... कराउँदाखेरी टर्न ब्याक त्यति हो । त्यसपछि .... पारस दाई ..... एडिसी आर्मी दाइहरु बोलाउन थाल्यौं । त्यसपछि पारसले तिमीहरु जाउ हामी हस्पिटल लैजान्छौं बुबा मुमालाई भनेर हुकुम भयो । हामी फर्कियौं ।

*समिति:* त्यो भन्दा बढी जानकारी ?
*जवाफ:* अरु मलाई जानकारी छैन ........ को को लाई लाग्यो, ठूलो बुबा र मेरो बुबालाई लागेको देखेकै हो । अरुलाई चाही मैले ढलेको मात्र देखेको हो ।

**श्री ५ शाहज्यादी सिताष्मा राज्यलक्ष्मी देवी शाह**

*समिति:* त्यो पारिवारिक जमघटमा सरकार पनि सवारी भएको भन्ने कुरा थाहा भयो । हामीलाई लिष्ट दरवारबाटै प्राप्त भएको छ । त्यस सम्बन्धमा के थाहा छ, कसले गोली चलायो, त्यो सबै जानकारी पाउन पाए रिपोर्ट तयार गर्न सजिलो हुनेहुँदा सबै जानकारी पाऊँ ।

*जवाफ:* हुकुम भाथ्यो, हामी गयौं । हामी गएपछि ...... त्यहाँ बस्याथ्यौं । ठूल्दा त्यो बेला नै अलि अलि .... अनि ..... पहिला अनि .... ले पारस दाइलाई ८:०० तिर भन्नु आफू मुमाकोको सवारी ल्याउनु पर्छ ...... भन्ने कुरा भयो, हामी सबै जना गफ गरेर बसिरहेको समयमा ८:०० बजे सवारी भयो ........ ड्रिंक्सहरुसम्म भयो । त्यसपछि ठूल्दादा शायद he was drunk अलि निराजन दादा, पारस दादा र राजीव भिनाजु ...... भनेर कुरा भयो । अनि माथि लगेर सुताएर आउँछु भनेर माथि लग्नुभयो । त्यसपछि पार्टी कन्टिन्यू ...... सवारी भयो । त्यहाँ राज भयो । कुरा सुरा भैरहेको थियो । मुमाहरु सबजना त्यहाँ बैठकमा यतापट्टी ...... सानो बैठकमा भित्र हामीहरु चाहीं यतापट्टी नियर द वार, हामीहरु यतापट्टी बसिराख्यौं । अनि वन आवर जतिमा होला, ठूल्दा इन आर्मी ड्रेस ....... हामी ....... अनि त्यसपछि ....... भएपछि एकछिन त ....... हेरेको हेर्‍यौं भयौं .......... मा यस्तो भयो अनि त्यसपछि एकैचोटी ढर्रर गर्‍यो ..... डा. राजिव भिनाजु रन ........ पारस दा ले गेट डाउन ..... गेट डाउन भनेपछि हामी यतापट्टी लुक्यौं । हामी सबैजना ..... जस्तो गरेर बसिराख्यौं । त्यसपछि, देन आइ स ........ माइ फादर ...... गोइङ डाउन स्लोली । त्यसपछि अब आइ डान्ट फिल एनी ........ ढर्रर गरेर अटोमेटिक मेसिनगन त्यसपछि पछाडि नै बस्यौं, अगाडि आउने कुरा भएन । पारस दा ले गेट डाउन ...... हामीलाई हेरेर छोडिबक्स्यो । त्यो बेला महेश पनि पछाडि आइसकेको थियो, बारको पछाडि आइसकेको थियो । अनि त्यसपछि आइ हर्ड ............ बाहिर भएको कुरा हामीले देखेनौं ........ ढोका खोल्न सकिरहेको थिएन ............ भित्र आएर .......... क्यारिट बडी आउट हामीलाई चाहीं पारस दादाले लेट अस गो आउट भनेर हामी बहिनीहरु र ..... वाइफ सबैलाई टुक अफ आउट साइड .........

*समिति:* अरु केही सम्झना छ ?
*जवाफ:* नो ।

*समिति:* ........................
*जवाफ:* .......... त्यो मलाई थाहा भएन, सो आइ क्यान नट से .........

*समिति:* हि वाज इन ....................... ?
*जवाफ:* एस, हि वाज इन .................... भनौ कि नभनौं अब ................ अब त आइ डण्ट नो, पहिला त .......... यताबाट उता ............. भनेर दादाहरुले उठाएर राखिबक्सेको, फेरी ढली बक्स्यो ।

*समिति:* धन्यवाद ।

**श्री ५ शाहज्यादी दिलासा राज्यलक्ष्मी देवी शाह**

*समिति:* पारिवारिक जमघटमा भएको भनेर हामीलाई लिष्टबाट थाहा भयो । त्यसैले त्यो घटनामा के नजर भयो ? घटनाको बारेमा यहाँहरुबाट जानकारी पायौं भने रिपोर्टिङ्गको लागि सजिलो हुन्थ्यो ।

*जवाफः* देखेको कुरा ... त्यसपछि ....... सवारी भयो ..... त्यसपछि ..... ८:०० बजेपछि ...... ढलिबक्स्यो । अनि दादाहरुले ठूलो बुबा पनि सवारी हुनेबेला भयो .......... भनेर निराजन दा भिनाजु र पारस दा भएर माथि लगिबक्स्यो । त्यसपछि ........ त्यसपछि एकछिनमा .... ढर्रर्र महाराजाधिराजलाई सट सुनेपछि पारस दाले नाइ नाइ भनेर कराउन थाल्नुभयो । हामीलाई पारस दाले उतापट्टी गएर लुक भनेर तल बस तल बस भनेर भन्नुभयो । म त कुनामा लुकिसकेको थिएँ । तर मैले ठूलो फायर भएको देखेको थिइन । ठूलो दादाले नै हो भन्ने कुरा आइ नो द्याट । अनि बुबालाई पनि लागेको मैले देखेको थिएँ । त्यसपछि म ......... बसिहालें । अनि ..... अगाडी होइबक्सन्थ्यो । पछाडि होइबक्सन्थ्यो । अनि त्यो .......... दुईजना पनि थियो .... (रूँदै) .... त्यत्ति हो मैले देखेको । अरू त सबै कराको .... कराइबक्सेको, अरू केही देखिन मैले ... (रूँदै रूँदै) .....

*समितिः* धन्यवाद ।

**श्री ५ शाहज्यादी प्रेरणा राज्यलक्ष्मी देवी शाह**

*समितिः* १९ गतेको पारिवारिक जमघटमा सरकार पनि उपस्थित भएको कुरा हामीलाई दरवारबाट प्राप्त लिष्टबाट बुझिएको; त्यस घटनाको बारेमा जानकारी लिन हामी यहाँ आएको; जे जे त्यहाँ नजर भयो र जस्तो दृश्य देखियो, कसबाट के घटना भए भन्ने यथार्थ विवरण प्राप्त भएमा हामीलाई रिपोर्ट तयार गर्न सजिलो पर्दछ ।

*जवाफः* हामीले ७:४५ तिर त्यहाँ पुग्दाखेरी ठूलो दा Crown Prince लाई दर्शन गऱ्यौं । अनि ८:०० बजेतिर हामीले QueenMother लाई दर्शन गऱ्यौं । त्यहाँ then crown prince drunk, intoxicated.... His Majesty the King आइसिने समय भो । मेरो दा, भाइ निराजन, भिनाजु भएर ...... त्यसपछि आराम छैन भनेर जाहेर ...... त्यसपछि हामी तल बैठकमैं, ठूलो बुबा यता बैठकमा सवारी भाथ्यो ......... चियर्स पनि गऱ्याथेन । त्यति बेलासम्म हामी कुराहरू गरेर बस्याथ्यौं । दिदीबहिनीहरुसँग भाउज्युसँग ठूलो दा सवारी भयो । ढ्याङ्ग अटोमेटिक गन चल्यो । We were shocked. हिज मेजेष्टिलाई हानिबक्स्यो; घाँटीमा लाग्याथ्यो, त्यो पनि मैले देखें । ढलिबक्केको पनि देखें । ............ ढलिबक्सेको पनि देखें ........... बाबा हामीलाई भनेर लुकाई बक्स्यो बाले ................ सुनेर बसिराथ्यो ................ अरु केही पनि देखेन । अनि एकै छिनमा ठूलो दा हामीतिर पनि सवारी भाथ्यो । सवारी हुँदाखेरी हामीलाई पनि हानिबक्सन्छ होला जस्तो ............ भनेर हुकुम भाथ्यो । What are you doing ? भनेर सोध्नु भाथ्यो ........ अनि मैले हेर्दाखेरी ............ अनि ......... त्यहीं नै बसिराथ्यो हामी; सबैजना ऐया भनेर कराको मात्र सुनेको थियो हामीले ......... अनि महेश ........... गोली लागेको छ, देख्या थ्यौं हामी । ......... पछि ए.डि.सी. आयो, विलियार्ड रूमको अगाडि थियो त्यो ढोका कराइबक्स्यो, ग्लास फुटायो अरू ..... बोलायो ...... लगेपछि पारस दा ले तिमीहरू घर जाओ भन्ने हुकुम भयो । दा नभएको भए भाउज्यू, पूजा दिज्यू ... र म .........

*समितिः* वाहिरको घटनाको बारेमा ?

*जवाफः* थाहा छैन, भित्र मात्रै । ढलिराखेको देख्या चाहीं महाराजाधिराज अनि मेरो सानो बुबा र others familyMembers .................... मेरो दा ले .... नगरेको भए हामी पनि जान्थ्यौं ......... ले हामीलाई लुकाइबक्स्यो ।

*समितिः* अरु सम्झना ?

*जवाफः* अरु त त्यस्तो अब छैन

*समितिः* धन्यवाद ।

**कुमार श्री गोरखशम्शेर ज.ब.रा.**

-

अहिले अस्पतालको बेडमा कुमार गोरख राणालाई भेटिरहेका छौं । Royal Palace मा भएको त्यो दुःखद घटनाको चस्मदिद गवाहा, सिरियस घाइते भएको कारण उहाँमा केही सम्झना छ भने म रिक्वेष्ट गर्दैछु ।

*समितिः* यहाँले आफूलाई सम्झना भएसम्मका जानकारी हामीलाई रेकर्ड गराएर यो अनुसन्धानका लागि सहयोग उपलब्ध गराउनु हुन ।

*जवाफः* म यस्तो .... रा थिएँ ....पहिला त के भो के भो जस्तो लाग्यो । पटटट आवाज सुनें, पटका जस्तो लाग्यो । मनमनै यसो के भा रैछ भनेर हेर्दा महाराजाधिराज सरकार लडिबक्सेको देखें । अनि त्यसपछि सबैजना ए, के भयो के भयो, के गरिवक्स्या भनी हो-हल्ला भयो । अनि म यतातिर कुनाबाट उतातिर महाराजाधिराज भएको कुनातिर दौड्दै गएँ । हेरें । गोली लाग्यो, गोली लाग्यो भनें र अनि त्यसपछि त्यतैबाट आउँदा खोई, के भन्ने खोई ! दीपेन्द्र शाह ... (गला अवरुद्ध) .... जस्तोबाट आएर फेरि त्यहाँ अगाडी जो जो थ्यो त्यसलाई ड्याङ्ग ड्याङ्ग ड्याङ्ग गर्दै-गर्दै हानिवक्स्यो । त्यतिबेला म त्यहाँ यस्सो पछाडी थिएँ । एउटा टेबुल जस्तो थियो । त्यस्तोमा ...... मलाई ड्याङ्ग लाग्यो । अनि त्यहाँबाट भुईमा लडिहालें । अनि त्यसपछि फेरि बाहिर पनि, भित्र बाहिर भइरहेको थियो । मैले देखेको चाहीं बन्दूक लिने एकैजना दीपेन्द्र शाह मात्र होइवक्सन्थ्यो । अरू त कोही थिएन त्यहाँ । त्यसपछि फेरि घुमेर आएर घाइते घाइते को को थियो, त्यसलाई फेरि ताक्दै हान्दै, ताक्दै हान्दै गरेर ......... अब अरु कुरा त्यस्तो के छ..... (रुवाई) ......

*समितिः* दीपेन्द्र सरकारले कस्तो पोशाक लगाइवक्सेको थियो ?

*जवाफः* आर्मीकै लुगा ।

*समितिः* हतियार कति हुन सक्थ्यो होला ? देखेको जस्तो लाग्थ्यो ?

*जवाफः* हतियार कम से कममा दुईवटा मेसिन गन जस्तो थ्यो । एउटा पेस्तोल चाहीं पनि हुनुपर्दथ्यो । देखे जस्तो लाग्दछ मलाई । मेशिन गन के किसिमको हो थाहा छैन मलाई । तर यस्तरी बन्दूक ल्याउँदाखेरी टिलिक्क बत्ति नै बलेको थियो हजुरको । म त लौ खा गयो भनें । त्यत्तिबेला नै एउटा गोली खा थें मैले । एउटा गोली खाँदाखेरी डङ्ग लडें । चलहल नै गर्न नसकेर त्यहींको त्यहीं बसें । अनि मेरो श्रीमती पनि आयो, बुबालाई के भएको रहेछ भनेर हेर्नलाई । त्यसपछि बाबा मलाई पनि दागियो भनेर भनें । उल्ले अनि काखमा लिराथ्यो । उसलाई पनि त्यही बेला ढ्वाङ्ग हान्दियो । दुईजना त्यहीं लडी बसिराथ्यौं । पछि फेरि अरु मान्छेहरु आएर अनि अस्पताल ल्याइदियो ।

**श्री रवि शम्शेर ज.ब.रा.**

*समितिः* यहाँले आफ्नो परिचय आफै दिउँ । यहाँ त्यो घटना हुँदाको दिन दरवारको जमघटमा हुनुहुन्थ्यो भन्ने दरवारको लिष्टबाट जानकारीमा आयो । त्यसैले त्यो घटनाका सम्बन्धमा यहाँले देखेको वा अनुभव गरेको कुराहरु चाहीं जानकारी गराई दिनु हुन अनुरोध गर्छौं ।

*जवाफः* मेरो नाम रवि शम्सेर ज.व.रा. हो । त्यो घटना हुँदा त्यो विलियर्ड रुमको ढोका जहाँचाहीं वहाँ राज भएको त्यहाँ ढोकाभित्र अलिकति पसेको थिएँ जहाँ महाराजाधिराज सरकार के भयो भने कोकाकोला लिएर विलियर्ड टेवलमा सवारी भयो र मचाहीं २/३ कदम पछाडि थिएँ र श्री ५ ए रवि यहाँ आउ भनेर हुकुम भयो । अनि म चाहीं अगाडि बढेर गएँ । अगाडि बढेर गएपछि अँ के छ हुकुम भयो अनि मैले सरकार केही पनि छैन भनेर भनेपछि महेशकुमार चाहीं आयो । महेशकुमारले मेरो श्रीमती आउन सकेन । सरकार बाँथ भएको छ भनेर भनेपछि महाराजाधिराज सरकार अलिकति अगाढि बढेर त्यही हो हाम्रो सन्तानको बाँथ हुने यूरिक एसिडवाला हुने र कोलस्टोर हुने भनेर हुकुम भो र आफ्नै ठाउँमा सवारी भयो । कोलस्टोरलको कुरा नसकिदै महेशकुमार सिंह यता निस्क्यो र एउटा मान्छे यता स्वाट्ट आयो । आयो आर्मी युनिफर्ममा युनिफर्म होइन त्यो काम गर्ने लुनालाई फटिक भन्छ आर्मी युनिफर्म यसो हेरेको त युवराजधिराज सरकार भनेर भने मैले यसो गरे मैले मेरो मुख नजर भो अनि हाँसिवक्स्यो जस्तो लाग्यो । मुस्कुराए जस्तो भएछ थियो मैले देखेको थिएँ धरक्क एक ब्रष्टमा तीन फायर गइहाल्यो के गर्ने महाराजाधिराज उभिएर नजर भइराखेको छ म पनि हेरिराखेको छु त्यहाँबाट फायर पनि भयो मैले के भन्ठाने भने यो ठट्टा गर्ने मान्छे यस्तो पनि के ठट्टा गऱ्या होला भन्ने मन मनमा लाग्यो । मैले दायाँपट्टिबाट यसो रगत आएको देखें । देखेपछि चाहीं डाक्टर भनेर बोलाएँ । डाक्टरचाहीं उता कुनामा थियो अलि टाढै तुरुन्त आइहाल्यो र डाक्टर आइसकेपछि डाक्टरले विस्तारै समातेर डाक्टरसंग सुनिवक्स्यो ए के गऱ्या भनेर हुकुम भो त्यो हुकुम हुनु भन्दा अगाडि he had bolted out यसो पछाडि हेर्दाखेरी यसरी हेरेको भएर ढोको देखिन्थ्यो । मैले यताबाट हेर्दाखेरी बाहिर सवारी भइसकेको थियो । त्यहाँबाटचाहीं मैले एम्वुलेन्स भनेर कराएँछु । हुन त आत्तिएर कराएको हुँ । कसैले सुन्ने होइन पछिचाहीं त्यहाँ दिज्यूहरु सवारी भो वरिपरि साथीभाई थिए । अब शाहज्यादीहरु सवारी भो के भो ? के भो ? भनेर हुकुम भो ... सरकार पनि यत्तिकैमा मैले के विचार गरे भने सरकार पनि मूमा बडामहारानी सरकारलाई जाहेर गर्न म त त्यहाँ मूमा बडामहारानी ड्रिंक भएको ... कि भनेर भनेर जा भनेको हुनाले हुकुम भाको भनेरचाहीं गइन । गएरचाहीं ढोका खोलेर हेरें । हेर्दाखेरी खाली त्यहाँ मूमा बडामहारानी र हेलेन सरकार २ जना मात्र कुरा गरि राखेको छ । अनि यो ढोकाको साँचो छ सरकार भनेर ढोकाबाटै भने मैले कहाँ हुन ढोकाको साँचो भनेर हुकुम भयो । म ढोका लगाएर भित्र पसी हालें । भित्र पसेरचाहीं सरकार सरकारहरुलाई राज होस् न यही राज होस् भनेर भनें भन्दाखेरी आत्तिइवक्सेला भनेर विस्तारै कुरा गरें । यत्तिकैमा के भो भने ढोकाको ऐना फुटालेको आवाज आयो । ऐना फुटालेको आवाज आएपछि के भयो भने । सरकार सरकारलाई गोली लाग्यो हँ क्यो हो ? भनेर हुकुम भयो ।

समितिः श्री ५ महाराजाधिराज सरकार ढल्ने वित्तिकै यहाँचाहीं मूमा बडामहारानी सरकार कहाँ जानुभयो ?

*जवाफः* अँ, मूमा बडामहाराजनी सरकारकहाँ गइहालें ।

समितिः	त्यसपछि के भयो के घट्ना घट्यो ?
*जवाफः*	पछि अनि मूमा बडामहारानी सरकार ल के भयो भन्दाखेरी यस्तो भएको छ ढोका झ्याल कसले फोरेको भन्दा त भनेपछि सरकार उठिबक्सेछ नजिक छ क्या ढोका खोली हेर्दा सिपाहीहरू आइराख्या त्यहाँ सरकार म जान्छु त्यहाँ वहाँलाई छोडेर गएँ । त्यहाँ हेर्दाखेरी त त्यहाँ धीरेन्द्र सरकारहरु त्यहाँ लडिबक्सेको छ ऐया ऐया भनिबक्सेको छ श्रुती सरकार अनि केतकी सरकारचाहीं मलाई त यहाँ लाग्यो भनि सुतिबक्सेको छ । कोही पनि यहाँ बोल्ने होइन अहिले स्टेचरमा लैजान्छ भनेर धमाधम स्टेचर लान थालियो । फर्केर आएर मूमा बडामहारानी सरकार कहाँ कुरा गर्दै थिएँ मूमा बडामहारानी सरकार बाहिर सवारी भएछ मोटर जम्मै गइसकेछ । मेरो मोटर मात्र बाँकी रहेछ । यो कस्को मोटर भनिबक्सिएछ रवि सम्शेर जर्सावको भनेर हाम्रो ड्राइवरले भनेछ । ड्राइभरचाहीं लुकेर बसेछ । ढक ढक ढोका ढकढकाएपछि ढोका खोल्न हुकुम भएपछि ड्राएभरले चिनीहाल्यो उ पनि पहिला दरवारमा काम गरिसकेको ड्राइभर थियो । ल त रवि वुवालाई तुरुन्त बोलाएर लेरा भनेर एडिसी तुरुन्त दौडिएर आयो । मचाहीं त्यही आउनै लागेको थिएँ । तीनजना मोटरमा बसेर हस्पिटल गइयो ।

समितिः	महाराजाधिराज सरकारलाई सुट गरेको बेलामा हैन यो के गरेको भनि महाराजाधिराज सरकारबाटै हुकुम भएको थियो ?
*जवाफः*	महाराजाधिराजबाटै हुकुम भएको थियो ।

समितिः	हजुरले यसो हेर्दाखेरी युवराजाधिराज त्यहाँ होइबक्सेको थिएन ?
*जवाफः*	होइबक्सेको थिएन देखिन पहिले त युवराजाधिराज मेरै अगाडि मेरो टाउको र उहाँको नजिकै छ नि देखे हत्यार अलिकति तल थियो क्या खेलौनाको रहेछ भने त्यत्तिमात्र हो नि । गोली चल्यो तर के भन्देखि भने युवराजाधिराजचाहीं त्यहाँ फर्किसकेपछि महाराजाधिराज सरकारबाट के गरेको भनि हुकुम भा हो कि? के हुकुम भएको थियो । यसरी हेरेको भए ढोका देखिन्थ्यो अथवा मैले यसरी हेरें दाहिनेतिर फर्कंदा पड्कीहाल्यो म चाहीं त्यहाँ आइसकेपछि फेरी त्यहाँ काण्ड भइसकेको थियो ।

समितिः	काण्ड भइसकेपछि मूमा बडामहारानी सरकारकोमा जानुभयो? त्यही बीचमा झडपहरु भए ।
*जवाफः*	(सहमति जनाउँदै) हो त्यही बीचमा भएछ । सिपाही आएर लात्ताले हानेर त्यो खोलेको रहेछ । ढोका फोरेपछि यो हाम्रो मूमाबडामहारानी राज भएको ढोकाबाट त्यो झ्यालचाहीं देखिन्छ । झ्यालबाट त्यो ठूलो झ्याल हो । सिपाहीहरु पसेर आएर स्टेचरहरु ल्याएर सिपाहीहरुले बोक्न पनि थाले मैले भने नवोक है स्टेचरमा लैजानु पर्छ ।

समितिः	तपाईले हेर्दाचाहीं युवराजाधिराज सरकारबाट कतिवटा हतियार थियो ?
*जवाफः*	एउटा ।

समितिः	ठूलो कि सानो ?
*जवाफः*	त्यही हो यस्तो तलको (देखाउँदै)

समितिः	भिरेको इत्यादि देखिन्थ्यो देखिन्नथ्यो ?
जवाफ	देखिन्न भन्या त्यहाँ आत्तिने कुरा त केही छैन । मैले त जोक गरिवक्सेको भन्ठानेको थिएँ । जब परिसकेपछि मात्र आत्तिएको । पहिला त आत्तिने कुरा केही छैन । मान्छे आइरहेछ, गइरहेछ के को आत्तिनु ? नदेखेको युवराज होइन ।

समितिः	गोली चल्ने वित्तिकैचाहीं महाराजाधिराज ढलेपछि त्यहीं हुनुहुन्थ्यो ?
*जवाफः*	अँ अँ यि नै आएर भने मैले हैन खवर पनि भो त्यहाँ बडामहारानी सरकार पनि एम्वुलेन्समा सवारी भो रे । म त एम्वुलेन्स भनेर वेपत्ता कराएँछु । त्यसपछिचाहीं त्यो डाक्टरले महाराजाधिराजलाई देखिहाल्यो । साहेव पनि सवारी भो । त्यसमाचाहीं फेरि मैले १ जना उतार्न जान भनि लागेको थिएँ मेरो यो हात चल्दै चल्दैन । अस्ति लडेर मेरो यो हात चल्दैन । त्यसैले म यही नै बसें । स्वास्नी मानिसहरु सबै सवारी हिडिरहेका थिए खै के भयो बरु के भन्देखि बडामहारानी सरकार अब चाहीं ...

समितिः	श्री ५ महाराजाधिराज सरकारले लिइबक्से गिलास खस्यो वा त्यहीं लड्यो कि के भयो त्यो हजुरलाई केही थाहा छ कि ?
*जवाफः*	विस्तारै राखिवक्स्यो गिलास विस्तारै विस्तारै त्यो डाक्टरलाई पछि लीन गरेर विस्तारै चाहीं भएको पहिले जस्तो गोली चलेपछि त झड्का लाग्छ नी मान्छेलाई त्यो झड्का सड्का केही होइन, त्यो म्यालिवर सानो साह्रो रहेछ कि केही रहेछ पहिला गोली हानेपछि त म हेरिराखेको छ नि रगत आएपछि यो त लाग्यो भन्यो भन्या पछि त विस्तारै सुरुवालमा नै रगत देखें

समितिः	त्यो वेलामा हजुरले यहाँ मात्र गोली लागेको देखिवक्स्यो अन्यत्र त केही देखिबक्सेन ?

*जवाफ:* यहाँ मात्रै । यहाँ मात्रै । पेटमा मात्रै लाग्या एक बर्स्टमा तीनवटा गोली गएको रहेछ । जुन मैले गोली झल्यांस्स हुँदा गने नि त्यो बर्स्ट त थाहा भइराखेको नि । पाँचवटा बर्स्ट हुन्छ, तीनवटा बर्स्ट हुन्छ एउटा मात्र हुन्छ त्यो भन्दा बढी हुन्छ सुनिराख्या भो नि तालीम नै भा हो नि बर्स्ट हानेर

_

......... त्यहाँ कोही गएको छैन त्यहाँ जति मान्छे छन् ती सबै तीनै छन् । ती चाहीं त्यहाँ भन्दा बाहिर कतातिर गए । म जाँदाखेरी त मुमा बडामहारानीबाट के हुकुम भयो भन्देखि कुरा गरिराखेको रहेछ, म त नर्मल रुपमा गएको थिएँ । म त व्याकग्राउण्ड भन्छु के भने मुमा बडामहारानीहरु माथि .... मान्छे हो हगि म पनि त्यही ... हगि वहाँहरुसंग खासचाहीं कुरा गर्ने मान्छे मै हुँ महाराजाधिराजसंग ।

समितिः यहाँ घट्ना घटेको दिन वहाँ ... पुगेपछि त्यसपछि तत्काल को पुग्यो ?

*जवाफ:* कोही पनि पुगेको छैन । त्यहाँ घट्ना भइसकेपछि फेरि ढोका खोलेर हेरें । हेर्दाखेरीचाहीं त्यस्तो भइराखेको रहेछ । सिपाहीहरु आइसकेको रहेछ । हामीहरुले पनि एकताली सुनेका हौं वहाँहरुले पनि सुनिवक्सेको रहेछ । एअर कण्डिसन खोलिराखेको त्यो चाहीं एकदम बन्द छ । त्योचाहीं आवाज सुनिबक्सनेछ । त्यो क्यालिवरको चिज पनि होइन ।

*समितिः* यहाँ चाहीं त्यो कोठामा प्रवेश गर्दाखेरी श्री ५ मुमाबडामहारानी सरकारको कोसंग कुरा गरिबक्सेको थियो ?

*जवाफ:* आफै दुईजना कुरा गरिवक्सेको थियो ।

*समितिः* हेलेन सरकारसंग ?

*जवाफ:* हो हेलेन सरकारसंग ।

म त चाहीं के भन्देखिन त्यहाँ एकछिन चाहीं कुरा गरेर म त गिलास भरेर आउन भनेर हुकुम भएर पो त गएको गिलास त खाएको छैन । हगि, मुमा बडामहारानी सरकारले रवि बुवा त पहिल्यै जस्तै हो एक गिलास त पहिल्यै खाइदियो होला भन्ठान्या होला । म पनि एक गिलास कहाँ खान सक्छु र ? धेरै हाले पछि । युवराजधिराजले धेरै हालिवक्सेको थियो । टन्नै हालिवक्सेको थियो आधा खाएपछि वारदात भएपछि त गिलास त मैले कहाँ लिएर गए र त्यही उही नै राखे विलियर्ड टेवुलको मेचमा मेरो गिलास थियो । त्यो कसैले पनि जाहेर गरेको छैन । मैले पनि मुमाबडामहारानी सरकारलाई तुरुन्तै जाहेर गरिन । बुढी मान्छेहरु चाँडै आत्तिएलान् भनेर । सरकार यो के भयो भन्देखिन महाराजाधिराज सरकारलाई गोली लाग्यो भने त्यसपछि मुमा वडामहारानी सरकार हुँ भनेर उठिवक्स्यो । सरकार म पहिले ढोका खोलेर हेर्छु भनेर उठिवक्स्यो । सरकार म पहिले ढोका खोलेर हेर्छु भनेर मैले ढोका खोलेर हेरे हेर्दाखेरी त्यहाँ ऐना सिधै झ्याल छ त्यहाँ .... ढोकाको अगाडि त्यहाबाट त जम्मै देखिन्छ । सानो झ्याल हो त्यो अनि ठूलो झ्यालबाट सिपाहीहरु जम्मै पसिराखेको थिएँ र लगिराखेको थिए । अर्को हुल आयो अनि के हुकुम भयो भने युवराजाधिराजलाई चाहीं समातेर कोठामा लगेर थुन्नु भन्ने भनेर हुकुम भयो ।

त्यसपछि एडिसी सिपाही लिएर आउनु भयो । उनीहरुले हस् भनेर दौडिहाले । दौडे पछि सिपाही पनि क्लियर भयो । म पनि उता गए त्यो वारदात भएको ठाउँमा । सवारी भएछ वाहिर । वाहिर सवारी भएर त्यहाँ त मोटर सबै गैसकेछ । मेरो ड्राइभरले मोटर ल्याएको थियो अलि अगाडि आइसकेर सुतिराखेको रहेछ । लुकेर सुतिराखेको पछि ढकढक गरी

समितिः एउटा नयाँ कुरा त्यो ढोका बन्द के भन्न लाग्नु भएको थियो । प्रवेश निषेध सानो ढोका के हो ?

*जवाफ:* कोरिडोरको सानो ढोका त्यो वहाँले देख्नुभएको छ ।

**श्री महेश्वर कुमार सिंह संग**

_

*समितिः* यहाँको परिचय

*जवाफ:* मेरो नाम महेश्वरकुमार सिंह ।

*समितिः* अनि राजदरवारको त्यो १९ गतेको जमघटमा यहाँको उपस्थिति थियो भन्ने राजदरवारको लिष्टबाट पनि थाहा पायौं । राजदरवारमा यहाँ हुनुहुथ्यो ?

*जवाफ* : हो थिएँ ।

*समिति* : त्यहाँ जे जे देख्नु भयो यसलाई सम्झी सम्झी हामीलाई त्यसको जानकारी दिनु भयो भने रिपोर्टिङ्गको लागि सजिलो पर्छ । त्यसैले सम्झी सम्झी आफुले थाहा पाएको, देखेको सारा कुरा बताइदिनोस् ।

*जवाफ:* ७:३० बजे आइपुग्नु भन्ने एडिसी अफिसबाट हामीलाई खवर आएको थियो । दरवारमा ढीला गर्नु भएन भनेर २ मिनेट अगाडी नै पश्चिम ढोका विलियर्ड बैठक त्रिभुवन सदनको वगैचाको देब्रेतिरको एउटा वरण्डा, वरण्डाको देब्रे साइडको विलियार्ड. कोठामा २ मिनेट अगाडी पुगें । म पुग्दाखेरी त्यो लेफ्ट साइडको ऐनाबाट देब्रे साइडका कोठामा युवराजाधिराज पहिले नै पुगिबक्सेको मैले देखे । युवराज विलियार्ड एक्लै खेलिबक्सेको थियो । मैले दर्शन गरें म भित्र गएँ । भित्र जाँदाखेरी कस्तो छ भनी दर्शन गरें । हुकुम भयो, ड्रिंक्स लेऊ भन्ने हुकुम भयो । सरकार आफैंले बार सेल्फ सञ्चालन गरिबक्सेको थियो । सरकारको सवारी भैसकेपछि लिइहाल्छु नी भन्ने विन्ति चढाएँ । हैन के भयो र लिइ राखन मर्जी भयो । लौत भनेर बक्स भयो लिएँ । एउटा टेबुलमा लिएर राखें । त्यपछि रवी भाई छ नी रवी भाइको सवारी भएको जस्तो लाग्यो । त्यसपछि कुन क्रममा को सवारी भयो त्यो त सम्भना भएन । यो ७:३० देखि ७:४५ जति भयो होला । त्यसपछि बाहिर सवारी भयो । सम्भवत: श्री ५ मुमा बडामहारानी सरकारको सवारी चलाउन हो कि ? मैले त्यो दर्शन पाएको अवस्थामा वहाँको स्वास्थ्यस्थितिको अवस्था वहाँ एकदम सामान्य हाँसी हाँसी कुरा गरिबक्सने कुनै त्यस्तो अनौठो कुरा चाहीं मैले पाइन । १५-२० मिनेट अब त्यो १५-२० मिनेट पछि वाहिर सवारी भयो । त्यसपछि अब पहिले पनि त्यस्तो हुन्थ्यो । वरण्डाको त्यो राइट साइडमा एउटा अर्को ज्वाइन हुन्छ । सवारी भएर सबै जम्मा भइसक्दा पनि महाराजाधिराज सरकारको सवारी त्यहाँ भएको थिएन । अब सवारी उता भयो भन्ने थाहा पाएपछि हामी सबै जना क्रम अनुसार दर्शन गर्न जाने भएँ म पनि गएँ । अरु को को गए त्यो त सबै मलाई याद भएन । म गएको पछि रवी भाई गएको पनि याद छ । त्यहाँ गएपछि हर मेजेस्टी क्वीन पनि सवारी भएको थियो । वहाँ पनि छेउतिर खासगरी त्यो जेनेरेशनकोछोराहरु मुमा बडामहारानी सरकार, श्री ५ बडामहारानी सरकार, श्री ५ अधिराजकुमारी हेलेन सरकार म र रवी जरसाप अगाडी सोफमा बस्यौं । कुराकानी हुन थाल्यो, त्यत्ति हो । अनुत्तरित अहिलेसम्म भनौं अब कति भो ८-१० या लगभग ८:३० को लगभग श्री ५ महाराजाधिराजको सवारी होइबक्स्यो । कुरा गरिबक्सन लागिबक्सेको देखेर म चाहीं बाहिर आएँ । रवी जरसाप पनि बाहिर आएजस्तो लाग्छ मलाई । एक्ज्याक्ट थाहा छैन । मलाई सोफाहरु भएको ठाउँबाट त्यो रुमबाटै बाहिर आएँ । कुरा गर्न लागि बक्सेको देखेर बस्न पनि त उचित भएन भनेर रुमबाट बाहिर आयौं । त्यहाँभित्र श्री ५ मुमा बडामहारानी सरकार, रविविक्रम शाह, श्री ५ बडामहारानी सरकार, ऐश्वर्य सरकार ४ जना महारानी मात्रै बाहिर आइबक्स्यो । बाहिर आएपछि त्यो बरण्डामा देख्नु नी भाहोला । त्यो बरण्डामा बस्ने ठाउँ छ, एउटा गोलो त्यहाँ श्री धीरेन्द्र शाह, कुमार खड्ग विक्रम शाह अलरेडी त्यहाँ राज भैसकेको थियो । त्यसपछि कुराकानी गर्न लागे । लगभग .... शाहको सवारी १० देखि १५ मिनेट पछि घडी हेरेको थिएन, श्री ५ बडामहाराजधिराज सरकारको सवारी वाहिर होइबक्स्यो । वरण्डाबाट सवारी भएर विलियार्ड रुममा सवारी भैबक्स्यो । सवारी भए पछि ड्रिंग्स र केही लिइ बक्सेला र दर्शन त गर्नै पर्‍यो भनी हामी पछि पछि गएको, त्यहाँ श्री ५ बाट कोक लिइबक्स्यो । त्यो बेलामा शान्ति शाहको सवारी त्यहाँ छैन । अनी मैले सम्झे अनुसार महाराजाधिराज सरकार, म र रवी जरसाहेव थियौं । धीरेन्द्र शाह, हेलेन शाह, कुमार खड्गविक्रम शाह अनि कर्नरतिर मैले देखिन पारस शाह हुनुहुन्थ्यो वा हुनु हुन्थ्येन । शाहज्यादी हिमानी सरकार, अनि यादगरेसम्म श्री ५ पूजा सरकार, श्री ५ साहज्यादी प्रेरणा सरकार, श्री ५ शिताष्मा सरकार, श्री ५ शाहज्यादी दिलशा सरकार अरु ठूलो तर जुन स्पटमा म उभिएको छु, त्यहाँ पनि देखिएन, यसो अनुमान चाहीं कतैतिर लाग्यो पारस शाह चाही पक्कै त्यहाँ होइसिन्नथ्यो, तर विलियार्ड टेबुलको भनौंन सिरानतिर सँगै दुइतिन फिट हटेर सरकार उभिस्याथ्यो । ड्रिंग्स लिइबक्सेको थियो । वहाँको दाहिनेतिर मेरो लेफ्टतिर वहाँ जनरली होइस्न्थ्यिो । उनी झण्डै झण्डैको राइटमा म उभिएको छु । मेरो पिठ चाहीं बिलियार्ड बैठकको जुन प्रवेशद्वार छ, त्यतै सोझै मेरो अगाडी धीरेन्द्र शाह अनि वहाँको देब्रे कुमार खड्ग विक्रम होइबक्सिन्छ । अनि त्यो एउटा सर्कल जस्तै मेरो वाइफलाई पनि निमन्त्रण थियो, उसलाई सञ्चो नभएर आउन सकेन, त्यो कुरा मैले जाहेर गरें । । स्वास्थ्यको विषयमा कुरा चल्यो, त्यस्तै कुरा भैराखेको थियो, लगभग यो कति वेला होला पौने नौ र ८:५०–८:५५ बीचको लगभगमा होला कुरा हुँदै थियो । मैले एउटा पछाडितिर केही आवाज आएको जस्तो सुनेको थिए । सुन्दाखेरी पछाडि केही आइराखेको होला तर पछाडिपट्टी फर्केर हेर्दा युवराजधिराज सरकार कम्प्लिट ब्याटेल ड्रेस, त्यो टाटेपाटे ड्रेस, टोपी, हातमा अटोमेटिक वेपन पनि क्लियर रुपमा देखेको छु । मैले एउटादेखि दुइवटा देखें भन्छन् मान्छे, तर मैले देखें ..... त्यो थाहा हुने कुरा पनि भएन । त्यो देख्ने वित्तिकै त्यो के हो कसो हो अनुमान गर्न सकिन्न । त्यस्तो होला भनेर तर त्यस्को वास्तै गरिएन । .............. फेरी कुरातिर लाग्यौं । .............. डेढ २ सेकेण्ड जस्तो लाग्छ, ड्याङ्ग दुई आवाज आयो । मलाई लाग्यो टि.भी.तिर हो कि भन्ने लाग्यो । यति नजिक मेरो कानमा पर्‍यो म त एयर ड्रम नै ब्रस्ट भयो कि भनेर कान बन्द भयो । एकछिन आँखा पनि झिम्म भयो । त्यो बेलामा कानमा बन्द भएपछि कम सुनिने भयो । त्यो बेलामा घर्रर गरेको आवाज सुने । तै पनि के भयो भनेर यसो हेरें यसो हेरें पछाडि त मैले हेरिन जस्तो लाग्यो .......... ३५ डिग्री लेफ्टतिर होइबक्सन्थ्यो । अनि यसो अलिअलि गरेर दाहिनेतिर लठ्ठी बक्सिएको जस्तो लाग्यो, यसो विचार गरें, अझ फर्दर भएपछि त्यस बीचमा रवीन्द्र शाह पनि सतर्क हुनु भयो । त्यहाँबाट कुनबेला डा. राजीव शाही दौडिएर आएर सरकारको पछाडि भनिबक्सेको थियो । ............ भनिबक्सियो । अनि वहाँले सपोर्ट गर्न खोज्यो । वहाँको बाहुलीमा. भएजस्तो लाग्छ । अनि वहाँ एक्लै फ्लोरमा. सरकारलाई सुकुला गराइबक्स्यो । गराउनै पर्‍यो । त्यति भयो । म पनि पछाडि दौडिएर केही मद्दत गर्नु पर्छकि भनेर सिरानतिर पुगें, घुमे अनि वहाँको रगत पुरा पुरा भैसकेको थियो । त्यो एकदम कन्फ्यूजन थियो । मान्छेहरु के हो कसो हो भनेर हडबडाएको स्थिति थियो । त्यति भएपछि रेस्क्यू गर्नु पर्ला भन्ने लाग्यो । र पनि ३, ४ वटा सम्झिन्छु, हँ .......... श्री ५ ऐश्वर्य सवारी जस्तो लाग्यो मलाई बाहिरतिर हो कि ? पछाडि होकि ? सवारी भयो । अनि शान्ति शाह, वहाँ दुइहात हल्लाएर ओ के भयो के भयो भनेर कम्प्लेन गर्न लागिबक्स्यो । अनि तुरुन्तै बाहिर सवारी भयो । मद्दतको लागि होला अरु केही होला ।

*समिति:* बाहिर भनेको कता ?

*जवाफ:* बरण्डातिर त्यसपछि हँ मैले सम्झे अनुसार श्री ५ अधिराजकुमारी शारदा शाह वहाँको पछि पछि सवारी भैराहोला । वहाँ भित्र पसिबक्सेको श्री ५ महाराजाधिराज शाहपट्टी नै सवारी हुन लागिबकसेको होला । यस बीचमा फेरी श्री ५ युवराजाधिराज शाह सवारी भयो । सवारी भएपछि सोभ्कै धीरेन्द्र सरीबक्सेको केही हुकुम भएको हो कि मुभमेण्ट भए जस्तो लाग्यो । केही हुकुम भए जस्तो लाग्यो । खाली मुभमेण्ट मात्र देखें । कुरा सुनिएन । त्यसपछि ढ्याङ्ग हानिबक्स्यो । वहाँ ढली बक्स्यो । वहाँ ढली बक्सेपछि पारस शाहले हातले थुनिबक्सेको थियो, वहाँ ढलेको देखेपछि वहाँ अगाडी के भयो भनेर वहाँको अगाडी अलमोस्ट छुनेगरी वहाँ ढली बक्स्यो । त्यो भएपछि ..........ओहो यो त .............. हुनलाग्यो । यस्तो बेलामा मलाई .......... यो त नचाहिने कुरा हुन लाग्यो भनेर म त ........ यस बीचमा पारस शाह सोभ्कै देखिनु भयो .......... कर्नरको अपोजिट वहाँ के डण्ट स्ट्याण्ड, सिट डाउन, सिट डाउन, डण्ट वी अन द फायरलाइन । हुकुम भयो । म त सर्रर दौडिएर पछाडि गएँ । पछाडि गएपछि यसो घोप्टिएर चल हल नगरेर अब यसो भएपछि देख्ने त कुरै आएन, सुन्न चाँही त्यो हो त्यहाँ बसें । त्यसपछि फाइरिङ्ग भएपछि धीरेन्द्र शाह कुमार खड्गविक्रम शाह, प्रिन्सेज शाहलाई हानेपछि ३ वटा त देखें । अरु हानीबक्सेको थाहा छैन । अनि त्यसपछि आखिर बाहिर सवारी भयो । यो दोस्रो पटक हो । तेस्रो पटक होइन । म त्यहाँ त्यो अवस्थामा छु हँ मेरो पछाडितिर अधिराजकुमारी शाहज्यादी सरकार, हिमानी सरकार, पुजा सरकार, शिताष्मा सरकार, दिलासा सरकार, प्रेरणा सरकार एकदम गुच्चमुच्च गरेर एउटा कुनामा राज भएको थियो । अब यो भएको करीव ४, ५ पटक होला, त्यसपछि फेरी मैले त्यहाँ मूल ढोका गेटतिर कोही कराएको हाहु गरेको शाहहरु उता सवारी भएको गेटतिर त मैले देखेको छैन । त्यहाँबाट गेटतिर त देखिंदै देखिंदैन । मैले साथीभाइसँग सवारी भएको होला, फायरिङ्ग भएको होला, कसलाई कहाँ लाग्यो भन्ने कुरा थाहा भएन । अनि त्यही बेला पारस सरकारबाट एउटा ......... वहाँचाहीं मभन्दा ५,६ फिट अगाडी ........ भैराखेको थियो । मेले आवाज सुनें, नाइ दाइ नाइ दाइ हुकुम भयो । त्यसमा त सुनीराखेको छु । सवारी भएको .......... त्यत्ति हो । त्यस पछि क्वाइट केही आवाज आएन । अब त्यसको अर्को ३,४ मिनेट पछि अलि टाढा विलियार्ड बैठकको गेटकै अगाडी बगैंचा जाने बाटो छ जहाँ राज हुने कक्ष त्यतै पर्छ, बगैचाहरु छ, पानी ब्रिज पनि काठको घर बरण्डा हरेक एक्ज्याक्टली डिस्टेन्स भन्न सकिन्न । तर डेफिनेटली बरण्डातिर होइन । बरण्डाभन्दा त्यो बगैचातिर हुनु पर्छ । सट त्यो अटोमेटिक हुँदैन । २ सर्ट सुनेजस्तो लाग्छ, ढ्याक ढ्याक । त्यसपछि कुनै ....... केही भएन । त्यस बीचमा दौडा दौड धारधुर मान्छे दौडिए .......... त्यहाँ त मान्छेहरु सिसा फोरेर पनि मान्छे पसे ........... म त्यही पोजिसनमा छुँ । ............ म जुन गेटबाट पसें, त्यही गेटबाट निस्केको छु । अगाडीको गेटमा केही ऐना फुटेको छ । त्यहाँबाट म उनीहरु पछि पछि म पनि लागें । अनि ......... सवारी भैसकेको थियो । एउटा अर्को मिनिवस रहेछ, म आफैं ड्राइभ गरेर आएँ । त्यो मलाइ कुन वेला हो थाहा छैन । एउटा यहाँ प्वाल छ । एउटा यहाँ राइट निर एउटा यहाँ .......... त्यो पछि रगताम्य भएपछि थाहा भयो, त्यही कुनामा रगत कुनामा भएको बेलामा लाग्यो होला, त्यही बेलामा श्री ५ शाहज्यादी प्रेरणा शाहले आम्मै तिम्रो हातमा के रगत हुकुम भएको थियो । मैले थाहा पाइसकेको थिए । त्यसपछि ड्राइभ गर्न सक्दैन, अस्पताल जानु पऱ्यो भनेर रुममा बसें । त्यसपछि सरासर अस्पताल गएँ । अस्पतालमा ठुलै रुम छ, सानो थियो, त्यो स्कवायर रुम छ, मेन रिसेप्सनबाटै जानु पर्छ त्यहाँ धमाधम ल्याएर उनीहरुले व्यवस्था गरे, सानो सानो बेडहरु ल्याएर डाक्टरहरुले घेरेको छ । धमाधम ल्याएर राख्यो । म चाहीं त्यही घुमी राखेको छु । हरेक ठाउँमा पुगेर घुमेको छु । कस्तो छ के छ भनेर सोध्ने प्रयास गरें श्रुती शाहलाई ............ गर्ने कोशीश गरें त्यहाँ जाने कुरा भएन । कुमार खड्गलाई पनि त्यही अवस्थामा कोशीश गर्दै ............ त्यहाँ पनि ........... अर्कोतिर यसो हेर्छु, ............ श्री ५ बडामहारानी सरकार त्यो बेलामा स्वर्गीय भैसकेको थियो । अनि ....... शान्ति शाह पनि मृत अवस्थामा पुगिबक्सेको जस्तो लाग्यो । अनि जयन्ती शाह यसो पुगेको वहाँ पनि स्वर्गीय भैसकेको जस्तो लाग्यो । यसरी ३ जना । निराजन शाह वहाँको पनि स्वर्गीयभैसकेको थियो । अनि कुरा गरें । श्री ५ अधिराजकुमारी शोभाकोमा वहाँले कम्मरमा चिसो लाग्यो, कम्मरमा बाँधिदेउन हुकुम भयो, बाँधिदिएँ । अनि धीरेन्द्र शाह .................... २ दिन पछि ..................... सिक्नेस ............ होइबक्सन्थ्यो ........... त्यो त मेडिकल बेड ................ चेन अलि तल तानिदिए ब्लीडिङ्ग भयो । अनि केतकी चेष्टर मलाई यहाँ दुख्छ ब्लिडिङ्ग भइराखेको मर्जी भयो । अक्सिजन दिन लाउनु भनेपछि डा. हो वा कम्पाउण्डरलाई भनें, त्यति भएपछि मुमा बडामहारानी सरकारको सवारी भयो । पारश शाह पनि वाहिर होइबक्सन्थ्यो । यो गर उ गर भनेर अह्राइबक्सन्थ्यो । मलाई यस्तो भयो भनेपछि ड्रेसिङ्ग गऱ्यो । सानो प्वल छुटेको रहेछ, आफैंले टालटुल गरें ।

*समिति:* घटना हुँदा हजूर कहाँ हुनुहुन्थ्यो ?

*जवाफ:* (देखाउँदै) यो विलियार्ड रूम भयो, श्री ५ महाराजाधिराज सरकार यहाँनिर होइसिन्थ्यो । म यहाँनिर थिएँ ।

*समिति:* श्री ५ बडामहारानी सरकार यो कर्नरमा हो ?

*जवाफ:* त्यो मलाई याद भएन बडामहारानी सरकार कहाँ होइबक्सीन्थ्यो । सानो बैठकमा हुनुपर्छ । यता हामी व्याकमा पऱ्यौं । कुराकानी थाल्ने ५ मिनेट ... २/३ मिनेट भएको होला । त्यस बीचमा को कता होला विचारै पुगेन भएको कुरा त्यही हो मलाई लाग्छ बाहिरबाट सवारी भएको होला ।

*समिति:* कम्प्याट ड्रेसमा युवराजाधिराज सरकार सवारी हुँदा कतिवटा वन्दुक पेस्तोल इत्यादि के थियो ?
*जवाफ:* मैले अघि पनि भनेको छु। युवराजाधिराज सरकारले कम्प्याट ड्रेसमा एउटा राइट मैले बाँधेको मैले देखेको छु।

त्यो कन्फम भन्न त गाह्रो छ तर त्यो यसो हेर्दा Automatic weapon हुनुपर्छ । कुन टाइप के भन्नु कुरा त एक्सपर्टले भन्ने कुरा हो ।

के लिन्छौ भन्दै हुनुहुन्थ्यो मैले फेमस रम लिन्छु भनें त्यो त भर्खरै ..... एक्चुअली महाराजाधिराज सरकार सवारी नभईकन त्यो त्यो मौकै भएन तर त्यो मेरो पहिलेको स्प्रीरिट अनुसार ... दिंदा पनि ढिला हुँदैनथ्यो । तर घटना घटेको करिव ९ बजे ९.०५ तिरमा हुनुपर्छ वा ८.५०/८.५५ तिर हुनुपर्छ त्यो बीच सरकार भर्खर लिएर राज भएको १ मिनेट भएको छैन आउला तर त्यहाँ .... हैन शुरु भएको थियो । ... छुट थियो तर त्यत्तिको चलन छैन अर्को .... हो ।

**श्रीमती केतकी चेष्टरसंग**

कुमार गोरख राणाको जानकारी लिएर हामी केतकी चेष्टरसंग जानकारी लिन प्रवेश गरेका छौं । केतकी चेष्टरबाट जानकारी लिंदैछौं ।

*समिति:* हुन्छ, यहाँलाई जे जस्तो जानकारी छ, उपस्थित भएर देखेको जानेको भोगेको कुरा जानकारी गराइदिनु हुन म ।
*जवाफ:* अब मैले भन्ने ? अब मैले देखेको त अब त्यो कोठामा हामीहरु त्यो विलियार्ड रुम भन्ने जुन कोठा छ हामीहरु सबैजना थियौं । खाली त्यहाँ नभइवक्सेकोमा चाहीं वडामहारानी होइवक्स्निथिएन र निराजन पनि थिएन त्यहाँ । र पहिले ..... ब्रेकहरु भयो । भइकन सबैजना आफ्नो आफ्नो ठाउँमा उभिए, बस्या पनि कोही थिएन । हामी गफ गर्दै महाराजाधिराजको वरिपरी को को थियो भनेर मैले हेरेको त होइन तर हाम्रो परिवारहरु सबैजना होइवक्सन्थ्यो । त्यो पछि मैले देखेको चाहिने मेन ढोकाबाट उ दीपेन्द्र शाह चाहिने सेल्फ कम्प्याट युनिफर्ममा दुईवटा बाहुलीमा एउटा एउटा मेशिन गन बोकेर सवारी भयो । मेरो मन साँच्चिकै भन्ने हो भने मैले बन्दूक चिनेको पनि छैन । साँच्चिकै बन्दूक भन्ने मेरो मनमा लागेको पनि छैन । र उहाँ सवारी भयो र मेरो दिज्यूसंगै होइवक्सन्थ्यो र मैले कतिसम्म उहाँलाई बिन्ति गरें भने अझ पनि उमेर छ, यसरी ड्रेस-अप गरीकन सवारी हुनलाई मान्छेका अगाडि सवारी हुनलाई भनेर दिज्यूले पनि मलाई, उहाँ स्वर्गवास होइवक्स्यो । उहाँले पनि त्यही हुकुम भयो । खोई के हो ? भनेर । त्यो पछि पनि मनमा के उठ्यो भने महाराजाधिराजलाई नजर गराइवक्सन ल्याएको हो भनेर । शुरु शुरु सवारी भयो, महाराजाधिराज भन्दा करीव १० फिट यता राज भइकन त्यो पछि डङ्ग गोलीको आवाज सुनें । तर मलाई गोली भन्ने लागेको थिएन । माने ......... भन्ने लाग्यो, त्यो पछि हामी हेर्दैखेरी जिल्ल परेर एकदम दायाँ बाहुलीमा भएको बन्दुक माथितिर रैछ र माथितिर ताकिराथ्यो । त्यसपछि मलाई गन्ध आयो । त्यो पछि मेरो दिज्यूलाई यो त बारुद हो कि गन भनेर बिन्ति गरें । त्यत्रि पनि विन्ति गर्नु, अब खै, त्यसको मुख हेर्ने कुरै आएन । के भएको हो कसो भएको हो, मैले त केही बुझेको थिएन । त्यो पछि फरक्क फर्किकन बाहिरतिर सवारी भयो, सवारी भएपछि अनि अगाडी बढिकन हेर्दाखेरी महाराजाधिराजको चाहिने ठाउँ ठाउँमा गाथबाट रगत आएको थियो र विस्तारै उहाँ लड्दै होइवक्सन्थ्यो । उहाँको वरिपरी मैले चिनेको मान्छे याद गरेको चाहिने कुमार गोरख छ, उसको जीउमा पनि २/३ वटा रगत देखें मैले । अनि त्यहाँबाट सबैजना ए, के भयो ए के भयो भन्नेमा नै गयो । त्यो पछि त अब जिल्ल पर्दछ मान्छे चाहीं, त्यो पछि फेरि युवराजाधिराजको सवारी भयो । त्यो बेलामा उहाँको बाहुलीमा एउटा मात्र बन्दुक देखें । देख्दाखेरी धीरेन्द्रले अगाडी आइकन परैबाट पुग्यो बाबा, विध्वंश निकै भइसक्यो भनिकन एकदम अगाडी धीरेन्द्र सर्दाखेरी बन्दूक उठाइकन हानिवक्सेको देख्यौं । धीरेन्द्र चाहीं एकदम पछाडी गईकन लडिवक्सेको देखें । त्यो देख्ने वित्तिकै महाराजाधिराजको वरिपरी त प्रशस्त मान्छे थियो । धीरेन्द्र उठ्न खोज्यो, र म दौडेर धीरेन्द्रको साइडमा गइकन छातीमा हात राखिकन नउठ बा, झन खराव हुन्छ भनिकन म उसैलाई नै समाएर बसेको थिएँ । ठाउँ ठाउँमा गोली लागेको थियो । र म चाहीं भुइमा .... यसो कुहिना टेकिकन के गर्ने धीरेन्द्र कसलाई बोलाऊँ भनेर म उहीसंग नै कुरा गरिराखेको थिएँ । त्यत्तिकैमा ढोकाको सोझ्ो नै पऱ्याथ्यो, फेरि पनि सवारी होइवक्स्यो तर दोश्रोचोटी जुन धीरेन्द्रलाई हिर्काइकन फेरि अरु सबैलाई कस कसलाई पऱ्यो त्यो पनि मलाई राम्रो याद छैन । मैले राम्रोसंग देखेको छैन । मैले देखेको चाहिने कुमार खड्ग घोप्टो परिकन लडिबक्सेको पाउबाट रगत आएको देखें । त्यहाँबाट प्रिन्सेस शारदा ए के भयो मेरो बुबालाई भनिकन त्यतातिर सवारी भयो । म चाहिने धीरेन्द्रमा नै लागिराखेको थियो । मैले दिज्यू धीरेन्द्रको यता ....... धीरेन्द्रको यता होइवक्सन्थ्यो । त्यो पछि मैले यसो ढोकातिर हेर्दाखेरी बडामहारानी सरकार लम लम लम गरिकन सवारी होइवक्सेको देखें बगैंचातिर । देख्दाखेरी मैले दुईचोटी भाउजु भाउजु नसवारी होस् भनें, कराएँ ।

*समिति:* बसी बसी ?
*जवाफ:* बसी बसी । तर उहाँ सवारी भयो । त्यो पछि बाहिर दुईचोटी मेशिन गन चलेको आवाज सुनिकन मैले धीरेन्द्रलाई क्या हो, बडामहारानीलाई पनि हान्या जस्तो छ भनें । त्यत्ति भनी त्यो पछि सवारी भएको मैले देखेको होइन । तर I

sensed सवारी भएको जस्तो लाग्यो । त्यो बेलासम्म अरु कस कसलाई लागेको थियो, मैले राम्रोसंग देखिन । त्यसपछि कोमल भुइमा परिवक्सेको, उहाँको माथि चाहिनी प्रिन्सेस शान्ती लडिवक्सेको र उहाँको गाथमा चाहिने पूरा रगत लागिकन लडिवक्सेको देखिराखेको थिएँ । त्यो पछि पछि फेरि सवारी भएपछि फेरि गोलीको आवाज सुनेपछि मैले चाहीं मेरो दिज्यू म संगै होइवक्सन्थ्यो । उहाँ बिलियर्ड चाहीं वहाँको पछाडि थियो । मैले दिज्यू .... भनिकन दुईचोटी विन्ती गरें ...... तर ..... एक्सन वहाँबाट गोली चल्दै आएको देखेको थिएँ । मेरो दिज्यू ढ्याक्र्याक्क वहाँ र म त मुखामुख गरिराखेको बेलामा ढ्याक्र्याक्क ढलिवक्स्यो । त्यो देखें । त्यो पछि धीरेन्द्रको छातीमा मेरो हात थियो । दुईचोटी उसको वडी उफ्रेको जस्तो, त्यो पछि मलाई पनि लागेको रहेछ । मलाई लागेको जस्तो याद पनि भएन । फरक्क फर्केर म त त्यहीं भुईमा ढलें । ढल्दाखेरी मेरो आँखा ठ्याक्क कुमार खड्ग र प्रिन्सेस शारदामा गयो । र मैले त्यो शारदाको ..... चाहिने सट्ट उठेको देखें । अब मैले साँच्चिकै राम्रोसंग सम्झेको चाहीं त्यत्तिनै हो । त्यो पछि अब रगत ख्वाल्ल ख्वाल्ल गएको सुनें । आफ्नै हातले यसो समाएर राखें । एकछिनपछि बाहिर एउटै ढ्वाङ्ग गोलीको आवाज सुनियो । त्यो पछि चाहिने I been shocked. धिरेन्द्र र म चाहीं कुरा गरिराखेको थियौं । उसले के भैराखेको छ, के नजर भयो भन्दाखेरी शारदा दिज्यू र भिनाजू त होइवक्सन्न । वहाँहरु दुईजनालाई गोली लागिसक्यो । They are not alive. तर चाहीं थर्ड टाइममा एउटा कुरा के मैले फर्केर हेर्दाखेरी त्यहाँ भुईमा लडिवक्सेको प्रिन्सेस कोमल र प्रिन्सेस शान्तीमाथि फेरि गोली चलेको देखें । त्यो पछि फेरि युवराजाधिराज बाहिर सवारी होइवक्सेको देखें । त्यसपछि धीरेन्द्र र मेरो बीचमा यत्तिनै कुरा भइरह्यो । धीरेन्द्रले चाहीं के भन्यो भने मेरो ज्योत्स्ना कुन बेला मऱ्यो, त्यो बेलामा भनेको हो कि, त्यो भन्दा अगाडि भनेको हो, मेरो ज्योत्स्ना म बाहेक छ, भेटिवक्सन्छ भनेर मलाई सोध्यो । मैले त्यति हात चल्दैन, केही पनि भेटिदैन भनेर भनें उसलाई । दोश्रोचोटी युवराजधिराज भित्र सवारी भयो र गोली चलाएर बाहिर सवारी भयो । मैले आँखाले ट्याक्क के देखें भने राजिव चाहिनी, राजिव शाही झ्यालबाट हाम्फालेर गएको, मलाई चाहिनी के लाग्यो भने उसले ए.डी.सी. बोलाउन गयो होला । उसलाई कसरी गोली लागेन ? मलाई केही थाहा छैन । उसले महाराजाधिराजलाई थामेरै बस्यो । त्यो पछि त डाक्टर बोलाउने कुरा पनि भएन । त्यो पछि पारसले उतातिर जानुपर्दैन, त्यो झ्याल फोडी तिमीहरु भित्र आउनु भनेर कराएको दुई तीनचोटी सुनें । ऐना फोडेको आवाज सुनें । भित्र आएपछि चाहिनी पारसले के भन्यो भने जीउँदा जो जो होइवक्सन्छ तुरुन्तै लगिहाल्नु, अरुलाई हतपत छैन भनेर त्यो पछि टाइम चाहिने मलाई केही पनि याद छैन । कतिबेर लाग्यो, के भयो, केही पनि याद छैन । मलाई एकजनाले उठायो । वास्तवमा म हिडेर गैराखेकी थिएँ । म हिड्न सक्छु, त्यहाँसम्म हिड्छु भनेको थिएँ । फुटेको ग्लास आएपछि चाहीं मेरो खुट्टामा जुत्ता थिएन, मेरो खुट्टा काट्छ भनेर मैले भनेपछि त्यो मान्छेले म बोक्छु भनिकन जुरुक्क पारीकन बाहिर लगिकन मोटरमा राख्यो । मलाई चाहीं अगाडि ड्राइभरसंग राख्यो । पछाडी चाहीं मैले धीरेन्द्रलाई सुताइराखेको देखें । दरवारदेखि र यहाँसम्म धीरेन्द्र र म कुरा गर्दै आउँदै छु । म चाहीं ए खाल्टो आयो है, धीरेन्द्र take safeside भनेर भन्थें । ऊ चहिनी मलाई यहाँ पनि दुख्यो, यहाँ पनि दुख्यो भन्छ, म चाहिनी आइपुग्न लाग्यो बाबा भन्थें । भन्दै बताउँदै आइराखेको थिएँ । त्यहाँबाट हामी अस्पतालमा आइपुग्यौं । स्टेचरमा राखेर सुताइदियो । माथि अलिकति अग्लोमा सुता । त्यो पछि दाहिनेतिर त मैले कसैलाई पनि देखिन । बायाँतिर त म संगै मेरो दिज्यू जयन्ती शाहलाई ल्याएर राख्यो । त्यो भन्दा पर शान्तीलाई र हेर्दा हेर्दै स्टेचरमा ल्याइकन भुईमा निराजनलाई र बडामहारानीलाई राखेको देखें । तर उहाँहरुलाई हेर्दाखेरि त वहाँहरु त ज्यूदो छैन भन्ने लागि नै सकेको थियो । त्यत्ति नै ।

*समिति:* निराजन सरकारको ..... ?

*जवाफ:* जुन बेलामा बडामहारानी सरकार लम्केर बगैंचामा सवारी भयो, त्यस एक सेकेण्डमा निराजन चाहीं दौडी दौडी उहाँको पछि लागेको मैले देखेको थिएँ । मैले .......... दुईजना ए.डी.सी.ले जुरुक्क पारेर महाराजाधिराजलाई बाहिर लग्यो । अरु अरुलाई चाहीं कुन बेला लग्यो, के गऱ्यो मैले केही पनि देखिन ।

*समिति:* युवराजधिराज एकपटक प्रवेश गरेर फेरि दोश्रोचोटी आइवक्स्यो ?

*जवाफ:* एकचोटी आइकन चाहीं पहिले बुबालाई र गोरखलाई परेको, दोश्रोपटक चाहीं धेरैलाई लाग्यो । तेश्रो पटकमा चाहिने तीनजनालाई लागेको । मेरो दिज्यू जयन्ती शाह, शारदा शाह र मलाई त्यो बेलासम्म केही पनि भएको थिएन ।

*समिति:* तेश्रो पटक ?

*जवाफ:* तेश्रो पटक लाग्यो ।

*समिति:* त्यसपछि मात्र बडामहारानी ?

*जवाफ:* होइन, दोश्रो पटक जुन बेला मलाई लागेको थिएन, म धीरेन्द्रलाई मद्धत गर्न कोशिस गरिराखेको थिएँ । त्यो बेलामा बाहिर सवारी भएको देखें । लमक लमक बगैंचातिर दुईचोटी मैले भाउजु भाउजु हुन्न भाउजु भनीकन बिन्ति गरें । तर वहाँको मुहारबाटै थाहा पा थें कि म बन्दूकै लिन्छु कि म मर्छु भन्ने मेरो मनमा लागेको, त्यत्ति हो । निराजन चाहीं वहाँको पछिपछि सुरक्षा गर्न गएको भन्ने मलाई लाग्यो ।

*समिति:* तेश्रो पटक चाहिने पड्केको आवाज यहाँले कति पटक ?

*जवाफ:* एक पटक, एक सट् that I was ……… मैले सुनेको चाहीं त्यही हो, वन सट् ।

*समिति:* धन्यवाद ।

**स.से. डा. राजीव शाही**

*समिति:* डा. साहेव पनि त्यो पारिवारिक जमघटमा गएको भन्ने कुरा हामीले दरवारबाट प्राप्त लिष्टमा देख्यौं । त्यो घटना कसरी घट्यो, त्यो घटना हुँदा कसले घटाएको हो ? त्यो अवस्थामा यहाँ के गरिरहनु भएको थियो ? आदी इत्यादी कुरा जति देखेको हो सम्पूर्ण यथार्थ हामीलाई रेकर्ड गराइदिनु पऱ्यो ।

*जवाफ:* म त्यो दिन पारिवारिक पार्टीमा थिएँ । धीरेन्द्र शाह, शाफी शाह, गुलाफी शाह, र आफ्नो धर्मपत्नी पूजा …. एउटा कारमा हामीहरु गएको साढे सात, पौने आठको लगभगमा हामी दरवारमा पुग्यौं । हामी भित्र गयौं । त्यतिखेर युवराजाधिराजको दर्शन गरेर हामी बैठकमा बस्यौं । गफ भैरहेको थियो । हामी केटाहरु चाँही एउटा साइडमा स्नुकर खेलिरहेका थियौं । मैले अलिकति आज खाएकोछु भनेर हुकुम भएको थियो । तर ८ बज्नलागेपछि भनहै मैले आफू मुमाको सवारी चलाउनु पर्छ भनेर हुकुम भयो । त्यस्तै ८ बज्नुभन्दा अलि अगाडि जाहेर गऱ्यौं । अनि मुमा बडामहारानी सरकारको सवारी चलाउन सवारी भयो । ८ बजे सवारी चलाएर फिर्ति सवारी भयो अनि अलि बढी लागे जस्तो छ भन्ने पनि हुकुम भयो । ……. महाराजाधिराज सरकारले ……. सवारी भयो । कुरा गर्दै होइबक्सन्थ्यो ….. उता अर्को कोठामा खोपीमा मुमा बडामहारानी सरकार राज होइबक्सेको ठाउँमा वहाँ सवारी भइ दर्शन गरिबक्स्यो, यस्तो स्थितिमा पार्टीमा के राज होला भन्ने हिसावबाट निराजन शाह, म पारश शाह र गोरख हामी भएर हामी मिलेर खोपीमा सवारी चलायौं । मैले …… सवारी चलायौं …… तल्तिर लाग्यौं । तल लागेपछि महाराजाधिराज सरकार मूल बैठकतिर त्यहाँ सवारी भयो । हामीहरु सबै भित्र गयौं, दर्शन गऱ्यौं । दर्शन गरेपछि हामीहरु कुनातिर ……. बारभन्दा उतातिर कुनातिर लाग्यौं । पारस शाह चाँही म्यूजिक बढाउनेकि भन्ने तर्फ लागिबक्सेको थियो । ……. गफ हुदै थियो । युवराजधिराज सरकार सवारी भएको पनि मैले देखिन । किनभने एल सेपमा ……. देखिन्न । एकैचोटी पर्रर आवाज आयो । …. भन्ने हिसाव भयो । हल्लाखल्ला भयो । हल्ला हुँदाखेरी पनि …… भन्ने हिसाव थियो । एकै चोटी महाराजाधिराज सरकारालाई गोली लाग्यो भन्ने मैले सुनें । भन्ने वित्तिकै महाराजाधिराज सरकार त्यतिसम्म भूइमा पल्टिसकिबक्सेको थियो । मैले कोट झिकेर …… दाइने घाँटीतर्फ प्रेस गरें । सरकारले राजीव, मेरो पेटमा पनि लागेको छ भन्ने हुकुम भयो । अनि मैले शाह पेटको कुरा चाँही ….. जाहेर गरें । त्यतिवेलासम्म मैले युवराजाधिराजको दर्शन पाएको थिइन । किनभने दौडेर वाहिर सवारी भइबक्सेको थियो । त्यसपछि भित्र सवारी भयो । भित्र सवारी हुँदाखेरी धिरेन्द्र शाहले बाबा के गरिबक्स्यो भनेर …. गरिबक्स्यो । धीरेन्द्र शाहको स्वर पनि अलि ….. गोली हानी बक्स्यो । त्यस बेला नै अरु गोली हानीबक्स्यो । ठ्याक्क कति वेला को गयो भन्न गाह्रो छ । सोचेर पनि आउँदैन । जहाँसम्म लाग्छ, खड्ग शाहजी, शारदा शाह र गोरखदाइलाई त्यतिखेर लागे जस्तो लाग्छ, अरु को कोलाई लाग्यो, फेरी बाहिर सवारी भयो । त्यतिखेर गोरखदाइले राजीव मलाई लाग्यो, लाग्यो हुकुम भयो । गोरख दाइ ….. पल्टिबक्स्यो । ….. बाबालाई के भयो के भयो? बाबालाई के भयो के भयो हुकुम भयो । …… मसँगै होइबक्सन्थ्यो …… फेरी सवारी भयो सवारी भयो युवराज सरकार अनि त्यसमा शोभा …… लाग्यो …… महाराजाधिराजलाई पनि लाग्यो, अनि त्यो लागेपछि म जम्प गरेर ……. गएँ । त्यतिखेरी हाल बडामहारानी सरकार, जयन्ती शाह, केतुकी शाहलाई कतिखेर लाग्यो? एक्ज्याक्टली म भन्न सक्तिन । …… फेरी बाहिर सवारी भयो । बाहिर सवारी हुँदाखेरी म अलिकति यतापट्टी आएर ……. रोकिएँ, अनि सवारी हुँदा ….. पारस शाहले दा हामी नाइ नाइ हुकुम भयो । ………… पारश शहले नै महेश …… रवी शाहजीलाई ……. म त झ्यालबाट भागें बाहिर एडिसीहरुलाई बाहिर गेटमा ….. ट्याक्सी लिएर हस्पिटलमा आर्मि हस्पिटल गयौं । त्यही बेला महाराजाधिराजलाई हस्पिटल ल्याइसकेको थियो । …… अलि अलि मैले सकिने हेर्न बडामहारानी शाहेव ………… धीरेन्द्र शाहलाई गरें मैले …….. गोरखदाइलाई गरें त्यो गरेपछि अरु डाक्टरहरु आउन थाले, ……… अनि आर्मीको जीप लिएर टिचिङ्ग हप्टिल गएँ, टिचिङ्ग हस्पिटल गएपछि …… फोन विग्रेको हुनाले डा० गोविन्द शर्मालाई कुरा गरें । वहाँलाई भी भी आइ पी भएछ । डा० हरु चाहियो भन्ने हिसावको कुरा गरें । पहिले नै मैले पेज गरेर ….. अनि म भन्ने वित्तिकै म हस्पिटल आउदा झण्डै झण्डै …… त्यसपछि त डाक्टरहरु …..

*समिति:* कोठामा जे घट्यो ……. त्यस बाहेक वाहिरतिरको केही घटना ?

*जवाफ:* बाहिर तिरको मलाई केही थाहा भएन । भनसुनको कुरा मात्रै हो । अनुमानको कुरा मात्रै हो । किन बाहिरतिर छिन छिनमा बाहिरतिर सवारी हुन्थ्यो, त्यसपछि वहाँ कहाँ सवारी हुन्थ्यो, के गरिबक्सन्थ्यो, मलाई थाहा भएन । एकैछिनमा जाने, एकैछिनमा फर्कने …… एक मिनेट २ मिनेट म्याक्सिमम् कुरा हो । त्यो नसम्झिने कुरा भएर पनि समयको पनि ख्याल भएन । एक्ज्याक्ट त्यो ……… जतिसम्म म सम्झन्छु

*समिति:* धन्यवाद ।

## (ख) शाही पार्श्ववर्ती र ड्यूटीमा खटिएका अन्य व्यक्तिहरुसंग सोधपुछ

**महासेनानी सुन्दरप्रताप रानासंग**

*समिति:* घटनाको दिन यहाँलाई कुन कामको जिम्मेवारी दिइएको थियो ?
*जवाफ:* सात बजेपछि महाराजाधिराजको ड्यूटीमा खटिएको थिएँ ।

*समिति:* जमघट भएको स्थल, घटना घटेको घटनास्थलभन्दा टाढा वा नजिक के हुनुहुन्थ्यो ?
*जवाफ:* घटना भएको ठाउँ भन्दा ४०/५० मिटर पर थिएँ ।

*समिति:* यहाँको सोझै आँखाले देख्न सक्ने अवस्था थियो वा थिएन ?
*जवाफ:* थिएन; सक्ने अवस्था थिएन ।

*समिति:* घटनास्थलको बारेमा के जानकारी छ यहाँलाई ? सविस्तार नछुट्ने गरी बताउनुहोस् । टेप गरेका छौं; लिपिवद्ध गरेका छौं । यहाँलाई जे जे थाहा छ....

*जवाफ:* महाराजाधिराज सरकारको अफिस मंगल सदन भन्ने ठाउँमा छ; त्यहाँ चाहिने अँ मैले घडी त एक्ज्याक्ट हेरिन, ८:३५ या ८:३० त्यस्तै भएको, त्यो सकिएर महाराजाधिराज पैदल सवारी भयो । पैदल सवारी मैले चाहिं त्रिभुवन सदनमा ...... मुमा सरकार राज भएको ठाउँमा भित्र्याएर आएँ, बसें । त्यतिबेला मलाई २ वटा काम जरुरी थियो । एउटा चाहिने यो आइतबार अँ ..... यो पाँचौं राष्ट्रिय खेलकुदको .......... गर्ने, को-अर्डिनेट गर्नुपर्ने, अर्कोचाहिं २४ गतेको दिन चाहिने यो रारा सवारी हुने, को-अर्डिनेशन गर्न बाँकी नै थियो । आइतबार मेरो जाहेरी हुने हुनाले मैले त्यो को-अर्डिनेट गर्नलाई सुदन सचिवज्यूसंग टेलिफोनमा वार्ता गरेर बसिराखेको थिएँ । त्यसपछि हेलिकप्टर को-अर्डिनेट गर्न मिलाउनलाई बसिराखेको थिएँ । मलाई चाहिं कस्तो महसूस भयो भन्देखि चाहिने कुनै दराजहरु हल्लाएजस्तो अ .. मतलव, दराजहरु हल्लाएजस्तो बोल्ड साउण्डले मलाई फिल गरायो ।

*समिति:* कति बजेतिर यो ?
*जवाफ:* टाइम चाहिं म ८:०० बजेभित्र आएको, त्यो भन्दा पछि; After 9, After 9 . अनि त्यो दराजहरु हल्लाएको आवाज आयो । अनि मैले के हो के हो भन्दाखेरी, अनि एकजना उ गजेन्द्र मेजर साहेब बाहिर निस्कनुभयो । त्यो निस्कनु र त्यो फायरको आवाज र बडामहारानी सरकार, आइमाई मान्छे एकजना डाक्टर बोलाऊ भन्ने आवाज सुनें । अनि सुनेपछि म संग मोवाइल थियो । मैले मोवाईलमा फष्टमैं चाहिं हाम्रो डाक्टर बोलाउन मोवाइल ट्राई गरें, सकिन । अनि मैले सेक्युरिटीलाई alarm गर्ने सिष्टम छ, one talk system, बाट फाइटिङ्ग पठाउ भनेर चिच्याएर म अगाडि बढें । अनि त्यहाँबाट के भयो भन्दा फायरिङ्ग भयो । अनि म अगाडि सुरुसुरु बढें । मैले त्यो हलमा हेर्दाखेरी मान्छेहरु लडेका थिए तर मैले चाहिने ठम्याउन सकिन, को कहाँ लडेका थिए भन्ने कुरा बाहिरबाट ।

*समिति:* बाहिरबाट हेर्दाखेरी ?
*जवाफ:* बाहिरबाट हेर्दै म दौड्दै छु, त्यसपछि पनि ठम्याउन सकिन । म उताबाट भित्र पस्दाखेरि अ.. चाहिने फायरले डिस्टर्व भाथ्यो ।

*समिति:* पूर्वपट्टिको गेटबाट ?
*जवाफ:* पूर्वपट्टिको मूल गेटबाट । भित्रपट्टि चाहिने मलाई एउटा कन्फ्युज भयो, महाराजाधिराज कहाँ राज भएको छ भनेर, मैले अर्कै कोठामा छोडेर आएको तर मैले यसो हेर्दाखेरी चाहिने त्यो ग्रुपमा फेला पारें, मलाई चाहिने के पर्‍यो भने सरकारलाई म एक्लैले त्यो बोकेर ल्याएर त्यही बाटो घुमेर आयो भने जुन मान्छेले फायर गरेको हो, त्यो मान्छेले त्यहीं एट्याक गर्ने सम्भावना भएको हुँदा म त्यहाँ कुँदेर फर्केर जुन ढोका हामीले फोडेका छौं त्यो ढोका आएर फोड्न लाग्यौं, फोड्यौं । अनि हामी भित्र पसेर चाहिने एउटा हाम्रो सिष्टम छ विरामी फेला पर्‍यो भने जेनेरल चेक गर्ने चलन छ । ABC भन्छ । Airways, bleeding and circulation system. His Majesty चाहिने Survive the attack हामीले बाहिर थुत्यौं । अनि चाहिने बाहिर मोटरमा हालेर अ... क्याप्टेन पवन, पछाडी महाराजाधिराजलाई राख्यौं । अगाडी मैले ड्राइभ गरें । मोटरमा बायाँपट्टि अर्को क्याप्टेन प्रफुल्ल हुनुहुन्थ्यो, लिएर हामी हिड्यौं ।

*समिति:* टाइम कति लाग्यो ?
*जवाफ:* टाइम कति लाग्यो त थाहा भएन ।

*समिति:* घटनास्थलमा महाराजाधिराजलाई शरीरलाई ABC system बाट के देख्नुभयो ?

*जवाफ:* होइन, हामीले ब्लिडिङ्ग छ कि छैन भनेर हेऱ्यौं । हजुर ब्लिडिङ्ग थियो । मैले ड्राइभ गरें, मैले त ए तिमी Air way क्लियर गर है भनी हेर्दै कराएको पनि छु । डाक्टरहरुलाई खवर गरेको पनि छु । ऊ प्रोसेसमा गइराखेको छु । त्यसपछि चाहिं मैले हस्पिटल पुऱ्याएँ । हस्पिटल पुऱ्याउने बेलामा वास्तवमा हस्पिटलले खवर पाए नपाएको थाहा भएन तर एउटा स्ट्रेचर त्यहाँ रहेछ । हामीले ट्रमा सेन्टरमा लगेर राख्यौं; डाक्टर पनि आए, चेक गरे । गरीसकेपछि चाहिने म पनि त्यहीं थिएँ तर वहाँको टाउकोमा घाउ भएको देखेको थिइन । घाउलाई देखेपछि म अलिकति डराएँ, केही भयो कि भनेर नि । त्यसपछि चाहिं एकछिनपछि डाक्टर साहेव आउनुभयो । खगेन्द्रबहादुर श्रेष्ठ । जाँचेपछि चाहिने, वहाँले पनि Hope गर्नुभएन, त्यसै त भन्नुभएन ।

*समिति:* अस्पतालको घटना त्यहाँ अगाडि देखेको होइन ?

*जवाफ:* हजुर, होइन !

*समिति:* गोली यसले चलायो भन्ने देखिएन ?

*जवाफ:* अ.... एक्चुएल्ली म दौडिरहेको हुँदा मैले चाहिने देखिन ।

*समिति:* यहाँचाहिं आफ्नो मुलगेट भन्दा नजिकै मूल गेटबाट प्रवेश गरी दाहिनेपट्टिको अफिसमा बस्नुभएको थियो ?

*जवाफ:* हजूर । मूल गेटको दाहिनेपट्टिको अफिसमा बसिराखेको थिएँ । दरवारभित्रकै भित्र अफिस भएको हामीहरु चाहिने हुँदा हाम्रो अफिस नै हो । आरामसाथ बस्ने चलन छ । अनि, त्यो जुन ढोका छ नि, हामीले फोडेको, त्यो ढोकासम्म महाराजाधिराजलाई पुऱ्याउने हो ।

*समिति:* तपाईहरु अफिसमा बस्दा त्यो ढोका बन्द थियो कि ?

*जवाफ:* थिएन । त्यो ढोका बन्द हुँदैन । आज त्यो भन्दा भित्र सरकार गयो भने हामी जान पाउँदैनौं । चियाउन पनि पाउँदैनौं । अनि सरकार सवारी हुने टाइम भने चाही खबर त्यही हुन्छ ।

*समिति:* ए.डी.सी. त्यहीं बस्छ ?

*जवाफ:* अ.... मोटर जहाँ छ, मोटर मिलाउनु जाने बेला भयो खवर त्यहीं आउँछ । अनि हामी चाहीं मोटर मिलाएर सरकारकहाँ सवारी हुने हो लिएर जान्छौं ।

*समिति:* तपाईले अस्पतालमा घाउ कहाँ देख्नुभयो सरकारको ?

*जवाफ:* टाउकोमा, हतारमा चाहिं हामीले ब्लिडिङ्ग चेक गऱ्यौं । हो; मैले ड्राइभ गर्नुपर्ने भएकोले मैले देखिन । पछाडिको मान्छेलाई चाहिं मैले केही मान्छेलाई हाम्रो Airways, Bleeding र Circulation system मिलाई दिने भन्ने हुन्छ, त्यो चाहिं गरेर हामीले पुऱ्याइदियौं । उसले भने अनुसार चाहिने मोटरबाट बाहिर निकाल्ने बेलासम्म हात हल्लाईवक्सेको थियो भन्थ्यो ।

*समिति:* लैजाँदाखेरी सरकारले कुन लुगा, कोट लगाइवक्सेको थियो ?

*जवाफ:* सरकारको चाहिने कमिज, शुरुवाल र वेष्टकोट, अब टोपी हुने त भर्दैभएन ।

*समिति:* अब यहाँलाई अरु यस बाहेक सम्झेर भन्नु केही छ ?

*जवाफ:* खासै छैन । अब भित्रबाट आएको एट्याक्ट भएको हुँदा अब हामीले इमिडिएट्ली सरकारको त्यो गोली रोक्न सक्ने अवस्था थिएन । हामीले चाहिं as soon as possible विचार गरेर सरकारलाई चाहिने रेस्क्यू गर्नुपर्ने पट्टि लाग्नुपऱ्यो । घटना भइसकेपछि गर्ने काम त्यही हो सेक्युरिटीहरुको । लक्किली, सेक्युरिटी Alarm गर्नुभ्याको हुँदा त्यो हामीलाई Support गर्ने System पनि चाँडै आइपुगेकोछ । त्यसको कारणले गर्दाखेरी अरु घाइतेलाई उद्धार गर्न सजिलो भयो । साथसाथै मोटर पनि सबै आइपुग्यो । अरु घाइतेहरुलाई तुरुन्त लैजान सजिलो भयो ।

*समिति:* त्यो मोटरमा त सरकारमात्र सवारी भयो ?

*जवाफ:* हजुर, मोटरमा सरकारमात्र होइवक्सन्थ्यो ।

*समिति:* त्यसरी डरर डरर फायर हुँदा कोही भागेको, गएको केही देख्नुभयो ?

*जवाफ:* मैले चाहिं भागेको देखिन । मैले देखिन ।

*समिति:* कोहि दौडादौड भयो ?

जवाफ: मैले देखिन भागेको ।

समिति: सबै ढलेपछि ?
जवाफ: ढलेको, गोली लागेर ढलेको मलाई एकिन भएन । मान्छे चाहिं कोइ लडिराखेका थिए र आड लिएको पनि हुनसक्छ । गोली लाग्छ भनेर । अनि फायरिङ्ग भै राखेको थियो । म जब कोरिडोरबाट छिरें त्यो फायरिङ्ग गर्ने मान्छे चाहिं थिएन ।

समिति: यहाँको ध्यान चाहिं सरकार पट्टी मात्र गयो ?
जवाफ: म चाहिं कसरी सरकारलाई रेस्क्यु गरेर लैजाने भन्ने ध्यान बढी भयो ।

समिति: अनि त्यहाँ पुगेर सरकारलाई उठाएर ?
जवाफ: होइन, म त्यहाँ पुगेर म यहाँ धेरैवेर एक्सपोज भएँभने त्यो फायर फेरि यहीं आउँछ भन्ने हिसावले त्यही बाटो आएर फोडेको जुन ढोका छ, त्यहाँबाट फायर आयो भने त आड लिने ठाउँ छ । सरकारलाई तान्न पनि सकिन्छ. भनेर मैले त्यहाँबाट रेस्क्यू गरें.....

समिति: अनि पूर्वबाट पस्दा चाहिं ठाउँ लोकेट गर्नुभयो, सरकारलाई ?
जवाफ: उताबाट गएर हतारमा गइहालें । त्यहाँ पुगेर फिल गरें अब यहाँ एट्याक हुनेछ । सरकारलाई लैजान बाटो पनि लामो पर्ने भयो भनेर I came back । त्यहाँ आएर मेरो sub-ordinate एउटाले मलाई खवर गरेको थियो, यो फोड भनेर फोडेको ।

समिति: अनि आफैले बोकेको ?
जवाफ: हजूर ।

समिति: अनि त्यो एक्लैले ?
जवाफ: एक्लैले होइन, हामी ३/४ जनाले ।

समिति: अनि त्यो ब्लड लागेको सरकारको .......... त्यहाँ ब्लड छ नि ?
जवाफ: त्यो बाटोमा ।

समिति: बाटोमा !
जवाफ: कस कसको लाग्यो थाहा भएन, अब यो चाहिं सबैको ब्लड थियो ।

समिति: रेक्स्यू गर्ने बाटो एउटै पर्‍यो ?
जवाफ: अँ । त्यसपछि चाहिने हस्पिटलतिर पर्‍याइयो ।

समिति: हष्पिटल बस्दा बस्दै अरु पनि ल्यायो ?
जवाफ: अँ । त्यसको ५/१० मिनेटभित्र पछि अरु पनि आउन थाल्यो । टायम त्यस्तो याद भएन । आउँदै लडाउँदै राखेको मैले देखें । सरकारप्रति ध्यान दिएको थिएँ । अनि श्रुती सरकार चाहिं सरभाइभ त्यत्तिबेलासम्म कराउँदै हुनुहुन्थ्यो मैले देख्या । कुमार खड्गविक्रमलाई चाहिं आर्टिफिसियल रेसपिरेशन दिइराथ्यो अब सरभाइभ हो होइन मैले सोच्न पनि पाइने ।

समिति: अस्पतालको कुरा भयो यो ?
जवाफ: हजूर ।

समिति: चश्मा, टोपी, कोट महाराजाधिराजको हो ?
जवाफ: हो । कोट होइन, कोट त्यो डाक्टरको हो ।

समिति: अरु बाँकी छ भने ? मुख्य कुरा ८:३० मा महाराजाधिराजको प्रवेश, होइन, ९:०० बजे भित्रमा निकालिसक्नु भयो ।
जवाफ: अटोमेटिक फायर छोटो चाहिने समयसम्म थियो, डरर डरर गरिरहेको थियो । लाग्छ, त्यस फायरले सेक्युरिटी आएको हेर्दै फायर गरेको जस्तो लाग्छ मलाई ।

समिति:: यहाँहरुले महाराजाधिराजलाई रेस्क्यू गर्दाखेरी कुन अवस्थामा फेला पार्नुभयो ? महाराजाधिराज सरकारको जिउ देख्नुभएन ?
जवाफ: मलाई त केही थाहा थिएन । सरकार अचेत होइवक्सन्थ्यो । हामीले चेक गर्दाखेरी चाहिने ......

*समिति:* यहाँले आफैले ड्राइभ गरेर महाराजाधिराज सरकारलाई अस्पताल पुर्‍याउनुभयो ? गाडीको नम्वर ?
*जवाफ:* नम्वर मलाई थाहा भएन । गाडीको नाम चाहिने जेगुअर ब्रिटिश गाडी, अटोमेटिक गाडी हो । कार हो । बालाजु वनस्थली स्कूलको लेफ्ट हुँदै लगेको थिएँ । सानो बाटो थियो । ट्रक अगाडि थियो । ट्रकले अवरोध गर्न खोजेको थियो ।

*समिति:* हडवडले ढिलो गरायो ?
*जवाफ:* होइन, ट्रकले ढिलो गराएन । बाटो सानो थियो । हामी हडवडको स्थितिमा थियौं । त्यही पेनिक स्थितिमा ड्राइभ गर्दा लेट भयो भने सरकारको स्वास्थ्यमा सुधार आउला भनेर ती सबै चीज मोटरमा पनि गर्दैथियौं ड्राइभ पनि गर्दैथियौं । वाकिटकि थियो, मोवाइलले काम गरेन, कहाँ ठोक्किएछ हतारको बेलामा । .

*समिति:* ३/४ जना भएर सरकारलाई बाहिर ल्याउने को को हुन् ?
*जवाफ:* मैले चाहिं त्यो बेलामा कप्तान प्रफुल्ल, स.से. पवन खत्री र अरु ए.डि.सी.को थिए, मेजर अनन्त । यसमा के हुन्छ भने हाम्रो सेक्युरिटी प्रिन्सिपल अनुसार कोही मान्छे घाइते हुँदा सबैभन्दा बढी राजालाई सिनियर मष्टलाई रेस्क्यू गर्नुपर्ने हुँदा हिज मेजेष्टीलाई प्राथमिकता दियौं । हिज मेजेष्टीलाई बचाउन पाए त अरु त हुँदैछ । हस्पिटल पुर्‍याउन सकें भने चाहिं म बचाउँछु भन्ने धारणा चाहिं मलाई थियो ।

***सेनानी अनन्त केशर सिंहसंग***

*समिति:* घटना हुँदाको दिन कुन जिम्मेवारी दिइएको थियो ?
*जवाफ:* सर, जिम्मेवारी त हाम्रो एउटै हुन्छ । हाम्रो ड्यूटीमा कमाण्डरको चाहि महाराजाधिराजको हुन्छ । टु आई सि को चाहिं वडा महारानी सरकार हुन्छ । त्यसो भएको हुनाले चाहिं मेरो ड्यूटी बडा महारानी सरकारको थियो ।

*समिति:* घटना हुँदा कहाँ हुनुहुन्थ्यो ?
*जवाफ:* हामी त्यही अफिसमा थियौं ।

*समिति:* मूल गेटको दाहिनेपट्टि ?
*जवाफ:* हजूर ।

*समिति:* घटना भएको बारेमा कसरी थाहा पाउनु भयो ?
*जवाफ:* सर, अब त्यो फायरिङ्गको आवाज आयो, फायरिङ्गको आवाज आउने बित्तिकै डाक्टर बोला भन्ने आवाज आयो; त्यही अनुसार म डाक्टर बोलाउन टेलिफाने गर्न लागें ।

*समिति:* टाढाबाट आवाज सुन्नु भएको थियो ?
*जवाफ:* हजूर, टाढाबाट ।

*समिति:* त्यसपछि तपाई घटना स्थलतिर जानुभयो भएन ? घटनामा भएको जानकारी सबै बताइदिनुहोस् ।
*जवाफ:* फायरिङ्गको आवाज र डाक्टर बोला भन्ने आवाज आएको छ ।

*समिति:* यो कसको आवाज ?
*जवाफ:* डाक्टर बोला भन्ने आवाज आइमाइको छ, मलाई चाहि आइमाईको आवाज श्रुती वा बडामहारानीको आवाज लाग्यो । त्यसपछि डाक्टर बोलाउनपट्टि गएँ । अफिसभित्र टेलिफोन गर्न लागें । टेलिफोन आर्मी हष्पिटल गरें, डाक्टरलाई गर्दा पनि टेलिफोन नलागेपछि म उतैतिर- भनेपछि फायरिङ्ग जताबाट आयो, त्यतैतिर घटनास्थलतिर लागें । म पुग्दा मेरो कर्साव र अन्यले ढोका ब्रेकिङ्ग गर्न लाग्नु भएको थियो । र त्यही ढोका ब्रेकिङ्ग गरी भित्र गयौं र अरु एडिसि साहेब र म मिलेर महाराजाधिराजलाई त्यही ढोकाबाट ल्याई मोटरमा हाली हस्पिटलतर्फ सवारी चलाएपछि म चाहि डाक्टरलाई सम्पर्क नभएकोले पुनः सम्पर्क भएपछि तुरुन्त आर्मि हष्पिटल जान भने र त्यसपछि चाहिं यो शाही एम.टी.मा मोटरहरु राखेको ठाउँबाट सबै मोटर यहाँ पठा भनेर म भित्र फोडिएको ढोकाबाट घटनास्थलतिर गएँ ।

भित्र गएर हेर्दा सबै भुईमा थिए, त्यत्ति बेला सै.प्र. अर्थात फाइटिङ्ग टिम आई सकेको थियो र फाइटिङ्ग टिमले लिएर मोटरमा हालेर दौडाउने कुरा भयो । त्यसपछि त्यस कोठामा मान्छे क्लियर भएपछि मैले हेर्दाखेरी बडामहारानी सरकारलाई भेटिन र बडामहारानी सरकारलाई नभेटेपछि फर्किएर आएँ र बाहिर ए.डि.सी. कोठामा आएर भित्र बडामहारानी सरकारको खोपीमा नानीहरु बसेको हुन्छ । नानीलाई फोन गरें, बडामहारानी सरकार सवारी भयो त्यहाँ भनें । त्यसमा नानीले सवारी भएको छैन भनेपछि यसपछि त्यो रुमबाट बाहिर भित्री बगैचातिर जाने क्रममा हाम्रो गजेन्द्र मेजर साव भेटभयो र गजेन्द्र मेजर साहेव र म भित्र जाँदै थियौं, जाँदा जाँदा बगैंचाको मोडमा मान्छे लडेको एकजना देखें र आवाज आइरहेको, घ्वार घ्वार आवाज आएपछि मैले नजिक गएपछि युवराजधिराज सरकार रहेको कुरा चिनेपछि म संग भएका मान्छेलाई लैजान भनें र लगेपछि पछाडी फर्किदा निराजन सरकार फ्ल्याट यसरी चाहिने ग्राउण्डमा डाउन भएको र वहाँलाई पनि अस्पताल पठाएँ र बडामहारानी सरकार अभ्र फेला परेको नहुँदा भित्र गएँ । भित्र जाँदाखेरी ढोकाको साइडमा रातो चीज देखें, माथि भऱ्याङ्गमा दौडेर हेर्न जाँदा बडामहारानी सरकार होइवक्सँदो रहेछ र म एक्लैले बोक्न नसकेर सै.प्र.को केटाहरु डाकेर बडामहारानी सरकारलाई मोटरमा हालेर म र अर्को एकजना साथीले अस्पताल पुऱ्यायौं ।

*समिति:* भऱ्याङ्गमा बडामहारानी सरकारलाई देख्दा कुन अवस्थामा ढलेको होइवक्सन्थ्यो ?
*जवाफ:* उत्तानो परेर भऱ्याङ्गको च्यापमा ढलिवक्सेको रहेछ । एउटा आँखा खुल्ला थियो; पछि हेर्दा अर्को आँखा भित्र गएको रहेछ । त्यसपछि बोकेर चाहिं हामी हस्पिटल गयौं ।

*समिति:* त्यो भन्दा पहिले यहाँले युवराजधिराज सरकारको बाहिर कहाँनेर भन्नुभयो ?
*जवाफ:* बाहिर बगैंचामा, बाहिर बगैंचामा त्यो पुलनिर ।

*समिति:* कुन अवस्थामा ?
*जवाफ:* उत्तानो, कोल्टे परेको अवस्थामा देखेको ।

*समिति:* टाउको कता थियो ?
*जवाफ:* सर, अन्धकार भएकोले मैले देखिन ।

*समिति:* शरीरमा चोट केही थियो ?
*जवाफ:* त्यो क्यामोप्लेजड्रेस मात्र देखें । मैले त युवराजाधिराज सरकार देख्ने बित्तिकै बोकेर लगिहाल भनेर मोटरमा हालेर पठाइ हालें । थाहा भएन ।

*समिति:* आफूचाहिं मास्तिर जानुभयो ?
*जवाफ:* अँ म चाहिं त्यहीं बसेर बडामहारानी सरकारलाई देखेको थिइन । म त बडामहारानी सरकारलाई खोज्नुपर्‍यो, त्यही भएर चाहिने म निस्केको होइन । सर, युवराजाधिराजसंग अरु अरु गएको । त्यसपछि निराजन सरकार देखें । निराजन सरकारलाई पनि त्यसैगरी पठाएँ ।

*समिति:* खाली बडामहारानी सरकारलाई लिएर आउनुभयो ?
*जवाफ:* बडामहारानी सरकारलाई लिएर आएँ ।

*समिति:* Break गरेर कोठामा जाँदा कति शवहरु एकै ठाउँमा तपाईले देख्नुभयो ?
*जवाफ:* त्यो त म भन्न सक्दिन । अन्दाज पनि भएन । भन्न सक्दिन । किनभने हामी त Breaking गरेर महाराजाधिराज सरकारलाई उठाएर लग्यौं ।

*समिति:* महाराजाधिराजको नजिक को थियो ?
*जवाफ:* त्यो पनि त उ गर्न सक्दिन ।

*समिति:* महाराजाधिराजको त्यस बेलाको शारीरिक अवस्था उत्तानो वा घोप्टो कुन अवस्थामा थियो ?
*जवाफ:* उत्तानो परेको थियो । उत्तानो परेको अवस्थामा बोक्यौं ।

*समिति:* केहीले छोपिएको, यताउता ?
*जवाफ:* छोपिएको थिएन सर ।

*समिति:* महाराजाधिराजको शरीर पल्टिएको ठाउँमा एउटा कोट पनि देखिन्छ, त्यो कुन प्रयोजनको लागि रहेको जस्तो लाग्छ ?
*जवाफ:* खै सर, त्यो त थाहा भएन ।

*समिति:* अरु केही सम्झना छ कि ?

*समिति:* त्यसपछि बडामहारानीलाई लगेपछि बाहिरको बाहिरै हिड्नुभयो ?
*जवाफ:* हजूर । त्यसपछि बाहिर गएपछि बाहिरको बाहिरै भएँ ।

*समिति:* यहाँ बडामहारानी सरकार संगै जानुभयो ?
*जवाफ:* गाडी मैले हाँकेको हो, हाम्रो ए.डी.सी. को ब्याकअप थियो त्यो । जीपमा पछाडी राखी, एक अधिकृतलाई राखी लगेको हो । बडामहारानी सरकार संगै गएको हो ।

*समिति:* त्यस अवस्थामा बडामहारानी सरकारको स्थिति कस्तो थियो ? केही होस् ?
*जवाफ:* त्यो चाहिने सर, अँ, थिएन, केही पनि थिएन । On the spot death .

*समिति:* अरु यहाँलाई सम्झना छ कि ? भन्नुपर्ने बाँकी केही छ कि ?
*जवाफ:* छैन सर ।

**सेनानी गजेन्द्र बोहोरासंग**

*समिति:* तपाईको परिचय ?
*जवाफ:* म सेनानी गजेन्द्र बोहोरा ।

*समिति:* कहिलेदेखि दरवारमा कार्यरत हुनुहुन्छ ?
*जवाफ:* ९ वर्ष पूरा भएर १० वर्ष लाग्यो ।

*समिति:* दरवारमा तपाईलाई के जिम्मेवारी दिइएको छ ?
*जवाफ:* मेरो जिम्मेवारी श्री ५ युवराजाधिराजको शाही पार्श्ववर्तीको रुपमा कार्यरत ।

*समिति:* घटना घटेको समयमा तपाई कहाँ हुनुहुन्थ्यो ? के गर्दै हुनुहुन्थ्यो ? र को को पाहुनालाई देख्नु भयो ? र के के घटना देख्नुभयो ?
*जवाफ:* मेरो ड्यूटी दिउँसो २:०० बजेदेखि शुरुभयो । २:०० बजे म गएपछि मैले मेरो साथीलाई बदलिएँ । अनि श्री ५ युवराजाधिराज सरकार दिउँसो २:३० बजेतिर लञ्चबाट फिर्ता सवारी होइवक्स्यो । लञ्च बुवामुमा संगै गरिवक्सेको थियो । दिउँसो ४:०० बजे नेशनल गेम्सको लागि सातदोवाटो सवारी होइवक्स्यो । सो पछि बुवामुमासंग सवारी हुनुपर्ने भएकाले त्यहाँबाट केही समयमैं फिर्ती सवारी होइवक्स्यो । ५:३० बजे बुवामुमासंग 'टी' को लागि सवारी हुनुपर्ने थियो । महाराजाधिराज सरकार, बडामहारानी सरकार र युवराजाधिराज सरकार सबैजना डिल्लीबजार बडागुरुज्यू नयनराज पाण्डेज्यूकोमा सवारी होइवक्स्यो । त्यहाँबाट १ घण्टापछि फिर्ती सवारी होइवक्स्यो । दरवार फिर्ती सवारी पछि अन्नपूर्ण ( गणेश हिमाल) बाट महाराजाधिराज सरकार आफ्नो अफिसतिर र बडामहारानी सरकार आफ्नो बङ्गलातर्फ सवारी होइवक्स्यो । युवराजधिराज सरकार त्यहींबाट विदा होइवक्स्यो । Normally, त्यसरी विदा हुने चलन छ । त्यहाँबाट हामी फर्केर त्रिभुवन सदनमा आयौं । त्रिभुवन सदनमा आइपुगेपछि विलियर्ड बैठकमा सवारी होइवक्स्यो र मलाई पनि बोलाइवक्स्यो । म पोशाकमा थिएन, ट्यूनिक लगाएको थिएँ, त्यसैले मैले ट्यूनिक चेञ्ज गरेर आउँछु भनें । तर सरकारबाट पर्दैन भनिवक्स्यो ।

त्यसपछि सरकार एक्लै विलियर्ड खेलिवक्स्यो । म बल मिलाइदिन्थें ।

*समिति:* त्यो बेला कति बजेको थियो ?
*जवाफ:* त्यो बेला करिव ७:००/७:०५ तिरको कुरा हो । त्यसपछि करिव ७:१५ बजेतिर अब पार्टी शुरु हुने समय भयो, ७:३० बाट पाहुना आउन शुरु गर्दछन्, त्यसैले पाहुनाहरुको मोटर राख्ने ठाउँ मिलाएर म जान्छु भनेर मैले भनें । तर सरकारबाट एकछिन बस भनिवक्स्यो । पुन: ७:२५ मा मैले बिन्ति चढाएँ, सरकारले ए अब त टाइम भयो, मुमा सवारी हुन्छ होला, अब जाउ भनिवक्स्यो र म आफ्नो अफिसमा आएँ ।

*समिति:* त्यो बीचमा ड्रिङ्कस आदि केही सर्व भएन ?
*जवाफ:* त्यो बीचमा मलाई कुनै हुकुम भएन । आफैं एक्लै खेलिवक्स्यो । माथिबाट एउटा ड्रिङ्कस झिकाउन हुकुम भयो र मैले अर्दलीलाई झिकाएँ र एक पेग राख्न हुकुम भए अनुसार एक पेग फेमस ग्राउस ह्वीस्की राखेर म निस्कें र म आएर आफ्नो अफिसमा बसें ।

त्यसबेलासम्म पाहुनाहरु आउन शुरु भैसकेको थियो । कोही पहिला, कोही पछि गर्दै पौने आठ बजेसम्म पाहुनाहरु आउँदै हुनुहुन्थ्यो । पाहुनाहरु आइसकेपछि हामी ए.डी.सी.हरु भित्र बस्यौं । करिव ८:०० बजेतिर युवराजधिराज सरकार त्यहाँ सवारी होइवक्स्यो, मुमा बडामहारानी सरकारको सवारी लिन जान्छु, को जाने हो भनेर हुकुम भयो, म जानुपर्ने हुँदा म उठें र मुमा बडामहारानी सरकारको सवारी लिन सरकार र म गाडीबाट मुमा बडामहारानी सरकार राज हुने महेन्द्र मन्जील गयौं । त्यसपछि मुमा बडामहारानी सरकारकै बेञ्चमा सवारी चलाएर फिर्ती सवारी होइवक्स्यो, ड्राइभर र म युवराज सरकारको मोटरमा पछि पछि लागेर फर्क्यौं र हामी अफिसमा बस्यौं । त्यसपछि बीचमा करिव ८:३५ या ८:३० तिर निराजन सरकार सवारी होइवक्स्यो । हामीसंग सि.डी. के के छ ? भनेर हुकुम भयो, मैले राम्रो सि.डी. त त्यस्तो केही छैन भनेर गाडीबाट झिकेर एउटा सि.डी चढाएँ । त्यसपछि सरकार सि.डी. लिएर भित्र सवारी भयो । त्यसपछि हामी अफिसमा नै बस्यौं । केही समयपछि महाराजाधिराज सरकार सिधै भित्र सवारी होइवक्स्यो । महाराजाधिराज सरकारको ए.डी.सी. पनि हामीसंगै भित्र बसिवक्स्यो । त्यहाँ हामी आ-आफ्नै हिसावले बसेका थियौं ।

म कम्प्युटरमा काम गर्दैथिएँ, त्यही बेला सुन्दर प्रसादले ए के भो हँ भनिवक्स्यो । त्यत्तिनै बेला मैले ढोका खोलेर बाहिर निस्कें । बाहिर निस्केपछि त्यहीबेला फायरिङ्गको आवाज सुनें, ए, सर गोली चल्यो भनेर मैले भनें । म नफर्किकन अगाडि बढें र त्यो ब्रेक भएको डोरमा पुगें । त्यहाँ पुगेपछि मेरो आँखा इन्ट्रान्स डोरमा पुग्यो । त्यहाँ मैले युवराजाधिराज सरकारलाई अलिकता कम्प्याटबाट बाहिर निस्केको देखें र म दौडिएर ढोका घच्घच्याएँ । ढोका भित्रबाट लक हुन्छ भन्ने मलाई थाहा थियो । त्यसपछि म दौडेर अगाडिको मोडसम्म आएँ । त्यहाँबाट चियाएँ, तर केही पनि देखिन । त्यसपछि म फर्कें । त्यहीबेला अर्को एकजना ए.डी.सी. पनि आउँदै गरेको देखें, म अगाडि बढें- विस्तारै । किनभने मैले फायर आर्मस् देखेको छु । मेरो Aim भनेको Crown Prince सरकारलाई प्रोटेक्ट गर्नु थियो । म हल-वे मा के भएको छ भन्ने जान्न चाहन्थें । तर मैले केही पनि देखिन, म फर्कें । त्यसबेलासम्म कर साहेवहरु भित्र पसिसक्नु भएको थियो, भित्र

सबैलाई ढलेको देखें र म फर्केर पुनः सैनिक प्रहरीको मान्छेहरुसंग म भित्र छिरें । त्यतिबेलासम्म डोर-वे फोरीसकेको थियो । डोर फोडेर त्यहाँबाट सबैलाई बाहिर निकाल्दै थिए, म पनि अगाडि नगएर घाइतेहरुलाई तान्दै बाहिर निकाल्ने कार्यमा सहयोग गरें । त्यसपछि म अगाडि बढें र त्यसबेला मैले डाक्टर साहेव (डा. राजिव) लाई दौड्दै गरेको देखें, तर वहाँ कहाँबाट निस्केको भन्ने मैले देखिन । वहाँ पनि घाइते हुनुहोला भनेर म वहाँको पछि दौडें । वहाँलाई हाम्रो सेन्ट्रीले पनि देखेको हुँदा वहाँलाई केही भएको रहेनछ भनेर म फर्कें । त्यत्रो घटना घटिसक्यो; सबैजना ढलिसके; तर त्यतिबेला मैले Crown Prince ले आफैलाई हानिवक्स्यो होला भनेर मैले सोच्दै सोचिन, मेरो दिमागमा वहाँलाई कसरी नियन्त्रणमा लिने भन्ने कुरा मात्रै आयो; यदि वहाँलाई केही भएको रहेनछ भने त वहाँलाई नियन्त्रणमा लिन बढी समय लाग्नसक्छ, त्यसैले हामी विस्तारै हेर्दै थियौं । विलियर्ड बैठकको गार्डेनमा झर्ने भऱ्याङ्गमा आवाज सुन्यौं । ध्यार ध्यारको आवाज जुन ठूलै आवाज थियो । त्यो आवाज हष्पिटल पुऱ्याउँदासम्म थियो । त्यही आवाजको आधारमा हामीले Crown Prince लाई देख्यौं । वहाँलाई लिएर हामी बाहिर आयौं । बाहिर आउँदाखेरी त्यहाँ पारस सरकार पनि होइवक्सन्थ्यो । युवराजधिराज सरकारलाई हामीले गाडीमा हाल्यौं । त्यहीबेला निराजन सरकारलाई पनि बोकेर ल्याइपुऱ्याए; निराजन सरकारलाई पनि त्यसैमा राख्यौं । पारस सरकार पनि त्यही गाडिमा बसिवक्स्यो र गाडीको साइरन अन गरेर कुदाएर हस्पिटल पुऱ्याइयो । हस्पिटल पुऱ्याएपछि डाक्टरहरुले आफ्नो कार्य प्रारम्भ गरे ।

*समिति:* युवराजाधिराज सरकारको शरीर कहाँनेर ढलिरहेको थियो ?
*जवाफ:* त्यो पुल छ नि, दुईवटा पोखरीको बीचमा भएको पुलको साउद-इष्ट कर्नरमा थियो । बडी उत्तानो थियो ।

*समिति:* त्यहाँ हतियार पनि थियो कि ?
*जवाफ:* कुनै हतियार थिएन, मैले टिप भनेर भनें, बोकेर ल्याउनेले देख्यो होला, मैले देखिन ।

*समिति:* तपाईले आवाज सुनेर जाँदा युवराजाधिराज सरकारलाई वगैंचातिर देखेको कुरा भन्नुभयो, त्यसपछि गोली चलेको पछि सुन्नुभयो कि भएन ?
*जवाफ:* गोलि चल्दैथियो, म पछि फर्केर डोर-वेमा आइपुग्दासम्म पनि गोलि चल्दै थियो ।

*समिति:* डा. राजीव शाही र पारस सरकारलाई कहाँ कहाँ देख्नु भएको थियो ?
*जवाफ:* पारस सरकारलाई त लाष्टमा मात्रै देखेको थिएँ, गाडी राख्ने ठाउँमा । डा. राजीवलाई पानीपोखरीको वगैंचाको गेटमा दौडदै गरेको देखेको हुँ । लकेट भेट्टाएको ठाउँमा ।

*समिति:* युवराजाधिराज सरकारको टाउको कतातिर थियो ?
*जवाफ:* वगैंचातिर, South–East ।

*समिति:* यस्तो अवस्थामा भित्र जान पाउने इजाजत हुन्छ कि हुँदैन ? सुरक्षाका दृष्टिले युवराजाधिराज संगसैगै जानु पर्थ्यो कि भन्ने सम्बन्धमा तपाई के भन्नुहुन्छ ?
*जवाफ:* भित्र पार्टी भएको समयमा हामी भित्र जाँदैनौं । तर गोली चलिसकेपछि त हामी जान्छौं । तर जुनबेला म डोर-वेसम्म पुगें, त्यतिबेला गोली चलेन । त्यसपछि म फर्कदा कर साहेवहरु भित्र छिरिवक्स्यो । त्यतिबेला मेरो Aim भनेको Crown Prince लाई नियन्त्रणमा लिने नै थियो । किनकि मैले Automatic Weapon देखेको थिएँ । त्यसैले नियन्त्रणमा लिन स्ट्याण्ड-वाई रहेको सेक्युरिटी फोर्सको मद्धत लिनुपर्ने भएकोले म बाहिर निस्कें । तर जब म डोर नजिक पुगेको थिएँ, त्यसबेला पुनः गोली चल्यो, त्यही बेला हुनुपर्छ Crown Prince ले आफैलाई गोली हानिवक्सेको ।

*समिति:* कस्तो आवाज आएको थियो ?
*जवाफ:* Brust कै आएको थियो ।

*समिति:* माथि भएको Incident को बारेमा केही जानकारी छ कि ?
*जवाफ:* केही जानकारी भएन, आवाज मात्रै सुनियो ।

*समिति:* पछिल्लो पटक तपाईले सुनेको आवाज त्रिभुवन सदनको जस्तो लाग्छ कि अन्त कतैको ?
*जवाफ:* त्यो आवाज अरु बेलाको फायरिङ्गको आवाज जस्तो सुनिएको थियो । यो ठाउँबाट आएको भन्ने यकिन गर्न नै सकिन । UnExpected थियो ।

*समिति:* युवराजाधिराज Violence तिर लागेको बेलामा कसरी नियन्त्रण गर्ने भन्ने तिर के सोचाई गर्नुभयो ?

*जवाफ:* म एक्लैले केही गर्न सक्ने अवस्था थिएन, त्यसैले सैनिक प्रहरीको सहयोग लिनुपर्ने हुन्थ्यो ।

*समिति:* Fire Arm बोकेको देख्नुभएको थियो कि थिएन ?
*जवाफ:* Fire Arms बोकेको देखेको हुँ, एउटा मात्र थियो- M16⁄ पिस्तोल संगै थियो होला, तर देखिन । तर राम्रोसंग View देख्ने मौका मैले पाइन ।

*समिति:* वगैंचामा रहेको दुईवटा मध्ये कुन चाहिं हुन सक्छ ?
*जवाफ:* M16 राइफल थियो । आवाजले पनि थाहा हुन्छ रिभल्वर र M16 को आवाज फरक हुन्छ । ................

**सेनानी गजेन्द्र बोहोरासंग पुनः सोधपुछ**

*समिति:* त्यो पारिवारिक जमघट थियो । त्यो पारिवारिक जमघट भइरहेको बेलाको २० बजेर १९ मिनेट जाँदा, बेलुका ८ बजेर १९ मिनेट जाँदा तपाईको कन्फर्म भएको ९८१०२१५०९ को मोवाइल टेलिफोनबाट बाहिर कुरा भएको देखिन्छ ।
*जवाफ:* कति बजे भन्नु भयो ?

*समिति:* ८ बजेर १९ मिनेट जाँदा । र त्यो १८ सेकेण्ड कुरा भएको देखिन्छ । सम्झना छ कहाँ कसलाई गरेको हो भनेर ?
*जवाफ:* ८ बजेर १९ मिनेट जाँदा ।

*समिति:* कुन मोवाइलबाट भने ? करेक्सन गरेर गरेको हुनाले म तपाईलाई म के सोध्न चाहन्छु भने फोन नं. ९८१०२१५१३ युवराजधिराज सरकारको हो भन्ने कुरा कन्फर्म भयो । यो फोनबाट त्यो घट्ना भएको राती ८ बजेर १९ मिनेट जाँदा तपाईलाई तपाईको मोवाइल फोन ९८०१२१५०९ मा कुरा भएको देखिन्छ १८ सेकेण्ड । संझना छ के के कुरा भयो भन्ने ?
*जवाफ:* छ हजुर । त्यो बेलामा युवराजधिराज सरकारले मेरो अर्दलीलाई पठाइदेउ । म यहाँ बैठकमा छु कुनातिर हुन्छु, मलाई अर्दलीलाई भेट्न पठाइदेउ । चुरोटको लागि हुकुम भएको थियो । अरु केही पनि भएन ।

*समिति:* तपाईको बैठकमा भएको साथी ...
*जवाफ:* त्यो त मलाई थाहा भएन । बैठकमा छु कुनामा पठाइदेउ भन्नुभयो । अनि अर्दली ... ले ... भन्नुभयो ए त्यहाँ जाउ भन्दाखेरी अर्दली त्यही अगाडि नै थियो । म यही छु सर भनेर आयो । ए त्यसो भए भित्र खोज कहाँ होइसिन्छ, टक्र्याउ भनेर भने ।

*समिति:* यहाँको मोवाइल ८ बजेर २५ मिनेट जाँदाखेरी । त्यही समयमा ... गएको देखिन्छ त्यही समयमा । यो कन्फरेन्सी कल छ कि ?
*जवाफ:* हैन हजुर । कन्फरेन्स कल त हाम्रो त्यहाँ छँदैछैन । मैले अस्ति पनि हजुरलाई जाहेर गरेको थिएँ । कल डाइभर्ट हुन्छ यो सरकारकोमा उठेन भने हाम्रोमा डाइभर्ट हुन्छ । तर त्यो बेलामा छैन । छैन हजुर ४१९१४० मा

*समिति:* ४ मिनेट १४ सेकेण्ड कुरा भएको छ ।
*जवाफ:* हैन हजुर । ४ मिनेट १४ सेकेण्ड ... लामो कुरा ...

*समिति:* बाहिरबाट आएको ... युवराजाधिराज सरकारको फोनलाई वोलाइ ... बाहिरको .... बाट युवराजाधिराज सरकारको मोवाइलमा आयो बाहिर कहाँबाट आयो भने ४२३०५१ बाट । ४२३०५१ नम्बरको फोनबाट युवराजाधिराज सरकारको मोवाइल नम्बरमा ४ मिनेट १४ सेकेण्ड कुरा भएको देखिन्छ युवराजाधिराज सरकारसंग । तर तपाईको मोवाइलमा पनि त्यही बेला त्यही देखियो । त्यही ...
*जवाफ:* त्यो त संभवै छैन हजुर । त्यो भएकै छैन हजुर । हाम्रो फोनबाट त डाइभर्ट हाम्रो अर्को ए.डि.सी. अफिसकै नम्बरमा आउँछ ।

*समितिः* जुनवेला तपाईलाई चुरोट युवराजाधिराजबाट मागिबक्स्यो त्यो वेला को अर्दलीले कहाँ लगेको थियो ? तपाईलाई थाहा होला ।

*जवाफः* मलाई चुरोट मागिवक्सेपछि मैले अर्दलीलाई बोलाएँ सेटबाट । सेटबाट बोलाएपछि उ मेरै नजिकै रहेछ । म यहीं छु सर भन्यो । त्यसपछि उसलाई ल भित्र बैठकमा लगेर टक्र्याउ । भित्र बैठकमा कुनातिर होइवक्सिन्छ ।

*समितिः* होइन, भित्र बैठकमा हामीले निरीक्षण गर्दा के देख्यौं भने हरेक टेवुलमा चुरोटहरु राखेको देखिन्छ अलरेडी । विलियार्ड हलमा पनि चुरोट राखेको छ । हरेक सोफाको पकेटमा चुरोट देखियो । त्यही चुरोट किन मागिबक्सियो ?

*जवाफः* त्यो त वहाँले मागिबक्सेको मैले टक्र्याउन परिहाल्यो नि ।

*समितिः* वहाँको चुरोट शिखर हो ?

*जवाफः* वहाँको सिगरेट केश वेग्लै छ ? छैन सर त्यो चुरोटको बट्टै थियो । सानो चुरोटको बट्टा शिखरको ।

*समितिः* त्यो पकेटहरुमा कुन चाहीं चुरोट थियो ?

*जवाफः* त्यो त हेरेको छैन, त्यो चुरोटमा गाँजा भरेको चुरोट थियो । त्यो ... बसेर

*समितिः* साधारण चुरोटले हुँदैनथ्यो ? ...... सेवन गर्ने ... त्यही दिन मात्रै हो ?

*जवाफः* सधैं सेवन गर्ने भन्नाले सधैं सेवन गरेको त हामीलाई थाहा भएन । अब कहिलेकाँही सेवन गरिवक्सिदाखेरी मागिवक्सिन्थ्यो । ....... त्यस्तै पार्टीहरुमा यही प्रकृतिको चुरोट ।

*समितिः* त्यो चुरोट ... कसरी तयार हुन्थ्यो ? ... शिखरमा त हुँदैनथ्यो ?

*जवाफः* होइन सर, त्यो वहाँलाई राख्न दिइबक्सिन्थ्यो होला ।

*समितिः* त्यो अर्दलीले पछिबाट ... अर्दलीले बनाएर दिने ?

*जवाफः* उसले टक्र्याउने सर । उसले बनाउने त उनीहरुलाई नै थाहा होला ।

*समितिः* त्यो अर्दलीको नाम के ? तपाई के भन्न सक्नुहुन्छ ?

*जवाफः* रामकृष्ण के.सी. ।

*समितिः* तपाई कन्फर्म हुनुहुन्छ यसमा ?

*जवाफः* कन्फर्म छु ।

*समितिः* अनि बोहराजी, अर्को कुरा के छ भने नि, यो जमुना अधिकारी र रामकृष्ण के.सी. भन्ने द्वारे र शाही अर्दली यो हामीलाई माथि खोपीमा जाऊ भनेर भनेपछि हामी खोपीमा गयौं भनेर भन्ने गरेकोछ । यो तपाईहरुले जाऊ भन्यो कि कसले जाऊ भनेर त्यो खोपीतिर गयो ?

*जवाफः* त्यो द्वारेलाई त मैले भनेको होइन । अर्दलीलाई मैले सेटमा माथि जाऊ, माथि नै बस, सरकारलाई सञ्चो छैन भनेर त्यो अर्दलीले पनि मलाई इन्फर्म गऱ्यो । सरकारलाई सञ्चो छैन भनेपछि तिमी माथि गएर बस मैले भनेर भनेको ।

**सह-सेनानी चक्र शाहसंग**

*समितिः* घटना घटेको दिन मुमा वडामहारानी सरकारको सवारी चलाएपछि वहाँसंगै बसिरहनु भयो कि के गर्नुभयो ? त्यसपछिको जे घटना छ जानकारी भएसम्म बताइदिनुस् न ।

*जवाफः* ८:०० बजे मुमा सरकारले रात्री भोजमा सवारी हुने कुरा हुकुम भएको हो । युवराज सरकार सवारी चलाउन मुमा सरकार राज होइवक्सेका खोपी सवारी होइवक्स्यो । युवराज सरकारले ड्राइभ गरिवक्स्यो, म साइडमा बसें, मुमा सरकार

युवराज सरकारसंग भित्र सवारी होइवक्स्यो; म बाहिर अन्य ए.डी.सी. साथीहरुसंग बसें । त्यसपछि महाराजाधिराज सरकार सवारी होइवक्स्यो । एकछिनपछि एक्कासी आवाज आएको सुन्यौं, आवाज आउनासाथ आत्तिएर हामी निस्केर अगाडि बढ्यौं, उताबाट डाक्टर बोलाऊ भन्ने लेडिजहरुको आवाज सुन्यौं । डाक्टर डाक्टर भन्नु र हामी उठ्नु पनि फेरी फायरिङ्ग भएको छ । केही सेकेन्ड फायरीङ्ग रोकियो ।

त्यसपछि फेरि डाक्टर बोलाऊ, डाक्टर बोलाऊ भन्ने सुनेर हामी त्यतातिर दौड्यौं । त्यो स्थानतिर म ड्यूटीको सिलसिलामा फष्ट टाइम गएको थिएँ । त्यसैले इन्ट्रान्स कता हो भन्ने त्यति अवगत छैन । सबै ए.डी.सी.हरु त्यतैतिर दौडिरहेका थिए । म चाहिं ढोका खोल्नतिर लागें । अरु साथीहरुले ढोका फोडेर भित्र छिरे । पछि म पनि भित्र छिरें । भित्र छिरेपछि वहाँहरुले महाराजाधिराज सरकारलाई कभर गरीसकेको थियो; मेरो जिम्मेवारी मुमा सरकार भएकोले मुमा सरकारको खोजिमा लागें । त्यो बेलासम्म लाशहरु सबै पल्टिसकेको थियो । मैले लेडिजहरुको लाशतिर मुमा सरकारलाई खोजें । तर फेला पारिन । मेरो जिम्मेवारी मुमा सरकार भएकाले म मुमा सरकारको खोजिमा लागें । त्यतिबेलासम्म महाराजाधिराज सरकारलाई बाहिर निकालिसकेको थियो । त्यसपछि म अर्को झ्यालबाट बाहिर निस्कें । त्यति हुँदा कताबाट सवारी होइवक्सेको थियो मुमा सरकार मलाई थाहा भएन । उताबाट आएर मलाई चक्र भनेर हुकुम भयो, सरकारबाट ।

*समिति:* कुन ठाउँमा भेट भयो, पानी झरिरहेको ठाउँमा कि कहाँ ?

*जवाफ:* जहाँ घटनास्थलको पछि मैले यसो हेर्दा भित्र जाने इन्ट्रान्स मेनगेट छ, विलियर्ड रुमको बाहिर आउने काठको ढोकाबाट अलि यतातिरबाट चक्र भन्ने हुकुम भयो । के भो, कसलाई के भयो ? भन्ने हुकुम भयो; मैले केही पनि भाछैन भनेर डोऱ्याउँदै बाहिर ल्याएँ । त्यहाँ सरकारको मोटर थिएन । मुमा सरकारको मोटरमा महाराजाधिराज सरकारलाई हष्पिटल लगिसकेको रहेछ । अनि कुन मोटरमा जाने भन्नुभयो । हेलेन सरकार, सानु रानी साहेब (सरला शाह) र मुमा सरकार ३ जना भित्रबाट सवारी भयो संगसंगै, मोटर कसैको फेला परेन । रवि शम्शेर ज.ब.रा.को मोटर फेला पऱ्यो, ल यो मोटरमा जाने भन्ने भयो । रवि शम्शेर भित्र हनुहुन्थ्यो, त्यो बेला, भित्र हुँदा आफै बरबराई रहनु भएको थियो, शायद त्यो दृश्यले होला, मैले वहाँलाई घच्घच्याएर बाहिर मुमा सरकारले हुकुम भएको छ बाहिर सवारी होस् भनें र रवि शम्शेरलाई डोऱ्याएर बाहिर ल्याएँ । त्यसपछि हामी सिधै हष्पिटलतिर लाग्यौं ।

*समिति:* अरु विशेष जानकारी ?

*जवाफ:* अरु विशेष जानकारी छैन । पहिला मैले Observe गरेको चाहिं मुमा सरकारलाई सवारी चलाउन महेन्द्र मन्जीलमा आउँदा युवराज सरकार कालो पहिरनमा होइवक्सन्थ्यो । छालाको जुत्ता लगाएको, पछि देख्दा कम्व्याट ड्रेसमा आर्मीको ड्रेसमा, तर मैले युवराज सरकारको लाश देखिन, पछाडि जाने प्रयास गर्दागर्दै मुमा सरकारलाई भेटिहालें । मुमा सरकारले हस्पिटल जान हुकुम भयो ।

*समिति:* हस्पिटल के को लागि ? चोट लागेको थियो कि ?

*जवाफ:* होइन, केही पनि छैन, महाराजाधिराज सरकार हस्पिटल लगेको हुनाले त्यहीं गएर आउने, महाराजाधिराज सरकारलाई हेर्न ।

*समिति:* डाक्टरहरुले हेर्न दिए कि दिएनन् ?

*जवाफ:* हेर्न सबै दिए, सबै खुला थियो ।

*समिति:* युवराजाधिराज सरकारको पहिले सिभिल ड्रेसमा र पछि कम्व्याट ड्रेसमा भन्ने कुरा आइरहेको छ, सिभिल ड्रेसमा या कस्तो ड्रेसमा होइवक्सन्थ्यो ?

*जवाफ:* कालो ड्रेसमा, डिङ्गो बुटमा ।

*समिति:* मुमा बडामहारानी सरकारलाई सवारी चलाउन आफै खोपीसम्म पुगेको ?

*जवाफ:* त्यहाँ प्रोसेस नै त्यस्तै कि महाराजाधिराज सरकार कि युवराज सरकारले नै सवारी चलाउने परम्परा छ । ८:०० बजे भनेको थियो, Exact ८:०० बज्न १/२ मिनेट त्यो News को अगाडिको Music आउँछ नि, त्यो Music आउँदा गाडी त्यहाँ पुगेको थियो ।

*समिति:* लिन जाँदा युवराज सरकारले कुनै ड्रिङ्क्स गरेजस्तो वा केही थियो कि ?

*जवाफ:* केही पनि थिएन; गाडीमा गफ गरिवक्सेको थियो- मुमा सरकारसंग ।

*समिति:* ड्राइभ वहाँले नै गरिवक्सेको ?

*जवाफ:* ड्राइभ वहाले नै गरिवक्सेको थियो; म साइडमा, पछाडि मुमा सरकार, हामी ३ जना मात्र थियौं ।

***शाही पाशर्ववर्ती क्या. पवन खत्रीसंग***

*समिति:* कति वर्ष भयो दरवार सेवा गर्न लागेको ?
*जवाफ:* १७ गते १ महिना पुग्यो ।

*समिति:* कुन ड्युटीमा ?
*जवाफ:* म त्यो दिनमा महाराजाधिराज सरकारको ड्युटीमा थिएँ ।

*समिति:* त्यो दिनमा के घटना भयो ? कस्तो कस्तो घटना भयो ? कसरी भयो ? सबै बताउनुहोस् ।
*जवाफ:* त्रिभुवन सदनको रात्री भोजका दिनमा म सबैभन्दा लाष्टमा पुगेको थिएँ; महाराजाधिराज सरकार त्यतिखेर पहिला अफिसमा सवारी होइवक्सेको थियो । अफिसमा मेरो ड्युटी थियो । अफिसबाट सरकार भोजका लागि सवारी होइवक्स्यो । त्यसपछि म महाराजाधिराज सरकारको सिगार लिन भनेर गएँ; म जाँदाखेरी ९:०० बजिसकेको थियो, भित्र गएर सिगार सिनियर ए.डि.सि.लाई दिएँ र ड्युटी रुममा बसिरहेको थिएँ । कुरा हुँदाहुँदै बाहिर डङ्ग डङ्गको आवाज आयो । त्यसपछि बाहिर गएर उठेको मात्र के थियो, एकैचोटी फायरिङ्गको ठूलो आवाज आयो । त्यसपछि भित्र डाक्टर बोला भन्ने आवाज आयो । कर साहेव फोनतिर लागिवक्स्यो, मैले सेटबाट सैनिक प्रहरी बोला भनेर कराएँ, त्यसपछि म अगाडि दौडिएँ । अरु मेरो पछि आइरहेका थिए । मेरो अगाडि एकजना ए.डि.सी. पनि थिए जसलाई मैले ठम्याउन सकिन । जब म त्यहाँनेर पुगें; टाटेपाटे लुगा, आर्मीको लुगा लगाएको मान्छेलाई पछाडिपट्टिको ढोकाबाट बाहिर गएको देखें । वगैंचापट्टिको ढोकामा गन लिएर गनको लाइट बलिरहेको छ; गन यतातिर फेस गरिरहेको छ; मान्छे टर्न गर्न लागेको छ । गनमा फिट गरेको लाइट बलिरहेको थियो । म बाहिर उभिएँ; मैले पेस्तोल बाहिर निकालिसकेको थिएँ । म पेस्तोल लिएर दौडिरहेको थिएँ । त्यति नै बेला (सुन्दर प्रताप राणा) कर सावको पछि म सपोर्ट लिएर बसें । कर साव फर्किवक्स्यो-तुरुन्तै । शुरुमा म जाँदा ढोका खोल्न ट्राई गरेको थिएँ, तर खुलेन; फर्केर आउँदा कर सावले ढोका फुटाऊँ भनेकोले लात्तिले हानेर ढोका फुटायौं । त्यसपछि महाराजाधिराज सरकार छटपटाएको देखें । त्यसपछि अरु कोही पनि देखिन र सरकारको टाउको पट्टि समात्न गएँ, अरुले खुट्टातिर समाते, फुटालेको ढोकाबाट बाहिर निकाल्यौं । त्यतिनै बेला बाहिर आवाज आयो फायरिङ्गको, गार्डेन साइडबाट । हामीलाई नै हो कि भनेर म झस्कें ।

*समिति:* त्यो बेला अगाडि दक्षिणपट्टि वा उत्तरपट्टि कुनै लाश देख्नुभएको थियो कि ?
*जवाफ:* त्यतिबेला मेरो माइण्ड यति कन्सर्नटेट भयो कि महाराजाधिराजको फेस बाहेक अरु केही पनि देखिन । महाराजाधिराज सरकारको शुरुमैं थियो । त्यो देखें । पछि मैले प्रभु, के भो नि भनेर म अगाडि गएँ । त्यति नै बेला बाहिर आवाज आयो फायरिङ्गको- हामीलाई नै हो कि भनेर म झस्कें ।

*समिति:* त्यो टाटेपाटे लुगा लगाएको देखें भनेपछाडि अरु कसैलाई देख्नुभयो ?
*जवाफ:* कोही पनि थिएन, भित्र उभिएको भन्ने मान्छे कोही पनि थिएन । त्यसपछि महाराजाधिराज सरकारलाई ल्यायौं, कर साहेव अगाडि गएर गाडी स्टार्ट गरिवक्स्यो । म महाराजाधिराज सरकारलाई बोकेर भित्र छिरें- टाउकोपट्टिबाट र मैले खुट्टा भित्र छिराएर काखमा राखें । टाउकोमा ब्लिडिङ्ग भैरहेको थियो; त्यसैले होल होला भन्ठानेर समातें । हष्पिटलसम्म जाँदा आँखा हेरिवक्सेको थियो । पल्स चेक गरें, ठीक थियो । अलिअलि ब्लिडिङ्ग भैरहेको थियो, मैले कराएँ- 'सरकार ज्यूदै होइवक्सन्छ, छिटो गरिवक्स्योस्' भनेर । हष्पिटल पुगेपछि ड्युटीमा कोही थिएन, हो-हल्ला गरेपछि ड्युटीको डाक्टर आए । ............ जब शुरुमा भित्र छिर्दा महाराजाधिराज सरकारको टाउकोनिर कोही अडेस लागेर बसिरहेको थियो । जब म भित्र छिरेर बाहिर फर्कदाखेरी छेउको झ्यालबाट कोही मान्छे भागेको देखें, को हो भन्ने मैले चिनिनँ, पछि थाहा हुँदाखेरी राजीव डाक्टर साहेव बाहिर गइवक्स्यो भन्ने थाहा भयो । त्यसपछि मलाई थाहा भयो, झ्याल पनि खुला रहेछ ।

**सह-सेनानी प्रफुल्ल विक्रम शाह**

*समिति:* तपाईलाई घटना भएको दिन के जिम्मेवारी दिइएको थियो ? र त्यो घटनाको सम्बन्धमा तपाईले के के जानकारी पाउनु भयो ? हामीलाई बताइदिनुहोला ।

जवाफ: मलाई श्री ५ को ए.डि.सी.को काम जिम्मा दिइएको थियो। दरवारको ड्युटीमा नयाँ थिएँ। ए.डि.सी.को कोठामा गर्मी भएकोले fresh air खान बाहिर आएका थियौं। भित्र फायरिङ्गको आवाज आएकोले दौडेर त्रिभुवन सदनभित्र जाँदा हाम्रो कर साहेवसंग भेट भयो र रेस्क्यूको लागि दक्षिणपट्टिको शिशाको झ्याल फोड्यौं। डा. राजीव घटनास्थलबाट फत्त बाहिर निस्केर भागेको देखें। झ्याल फोडी सोही झ्यालबाट सरकारलाई बाहिर निकाली गाडीमा लगी अस्पताल पुगेपछि स्ट्रेचरबाट भित्र लगी Trauma room मा राखिएको थियो।

कसले फायरिङ्ग गऱ्यो त्यो त मैले देखिन; त्यहाँ पुग्दाखेरी श्रुति सरकारले लगाएको कपडाको रङ्ग डार्क जस्तो लागेको थियो। मैले देखेको यत्ति नै हो।

**प्यूट रामकृष्ण के.सी.**

*समिति:* कति वर्ष भयो काम गरेको ?
*जवाफ:* तीन वर्ष भयो ।

*समिति:* के जिम्मेवारी दिएको थियो ?
*जवाफ:* म पोशाकहरु खोल्दिने, लगाइदिने.........

*समिति:* युवराजाधिराजको पोशाक लगाईदिने, खोलिदिने, ए त्यस्तो भएपछि खोपीमा आउन जान पाइरहने, त्यो घटना हुँदा तपाई कहाँ हुनुहन्थ्यो ?
*जवाफ:* म किचेनमा थिए, माथि सवारी होइबक्स्यो भनेर आमाले भनेपछि माथि आई साहेव ढलिबक्सिरहेछ, हामी आएपछि उठिबक्स्यो, अनि पोशाक खोल्न लाइबक्स्यो । पोशाक खोल्दैथ्यौं । अनी वाथरुम सवारी भयो, हामी वाहिर बसिरह्यौं एक छिनपछि वाहिर सवारी भयो, अनि तिमीहरु जाओ भन्नु भयो हामी पछाडी गयौं । पछाडि गएपछि ज्यूनारको सामान आयो, किचेनको साँचो आमासँग हुन्थ्यो । अनि म साँचो माग्न आमाकहाँ आएँ ।

*समिति:* तपाईले आमा भनेर कसलाई भनको ?
*जवाफ:* जमुना अधिकारीलाई हामी आमा भन्छौं, द्वारे आमा भएको हुँदा । ......म आफैं जान्छु भनी आमा जानुभयो । म त्यहाँ उभिइराखेको समयमा साहेव पोशाक लगाएर हतियार भिरेर सवारी भयो । सवारी भएपछि बाहिर सवारी हुन लागेछ......

*समिति:* तपाईले हतियार भिरेको देख्नुभयो ? कसरी भिरेको रे ?
*जवाफ:* पछाडीबाट भिर्नु भएको, पछाडिबाट, त्यहाँबाट बाहिर सवारी भयो की भनि इमर्जेन्सी ब्याग चाहिन्छ कि भनी सोध्दा चाहिदैन हुकुम भयो र म ए.डि.सि.लाई खवर गर्न दौडेको मात्र थिएँ पड्कीन शुरु भई हाल्यो । अनि भागेर पछाडी गएँ ।

*समिति:* अनि त्यो लडेपछि वाथरुममा जादाखेरी वाकवाक पनि लागेको थियो ?
*जवाफ:* वाकवाक चाही अलि अलि गरिबक्सेको थियो ।

*समिति* वान्ता नै भएको थियो ?
*जवाफ:* त्यो त हामीले हेरेनौं ।

*समिति:* अनि के तपाईले हतियारले लैष भएको देख्नुभयो ? कपडा चेन्ज गरेर
*जवाफ:* हजुर ।

*समिति:* तपाइले देख्दा कतिवटा हतियार थियो ?
*जवाफ:* दुइटा तीनवटा होला, त्यत्ति याद छैन ।

*समिति:* हतियार छ भनेर कसरी थाहा पाउनु भयो ?
*जवाफ:* हतियार भिरिवक्सेर ।

*समिति:* त्यसपछि हतियार भिरेपछि तपाई सँगसँगै जानु भयो ?
*जवाफ:* इमरजेन्सी ब्याग सोधें मैले, बाहिर सवारी हुँदा सरकारको सामान गाडीमा हाल्ने गरेको र बेलुका खोपिमा लाने गरीन्थ्यो । इमरजेन्सी ब्याग पर्दैन भनेर भन्नुभयो । ए.डि.सी.लाई खवर गर्न म आउनु र त्यहाँ पड्कनु एकैसाथ भयो र म पछाडि आएँ ।

*समिति:* ए.डि.सी.लाई तपाइले खवर गर्नु भो ?
*जवाफ:* खवर गर्न पाइन, पड्की हाल्यो ।

*समिति:* जाँदा जाँदै ?
*जवाफ:* हजूर ।

*समिति:* त्यो पड्कदा तपाई कहाँनीर हुनुहुन्थ्यो ?
*जवाफ:* म खोपीतिर माथि नै थिए पड्कीए पछाडि भागें ।

*समिति:* ए, तपाई माथि नै ?
*जवाफ:* हजूर ।

*समिति:* खोपीदेखी कता हुनुहुन्थ्यो ?
*जवाफ:* म एता वरै थिए ।

*समिति:* त्यो भऱ्याङ्गभन्दा माथि ?
*जवाफ:* त्यो टेबुल छ नी हजुर, त्यहीनिर । ढोकामा उभिइराखेको थिएँ ।

*समिति:* ढलेको अवस्थामा चिन्तामा वा मादक पदार्थ के मा ढलेको जस्तो लाग्यो ?
*जवाफ:* खोइ त्यो त, ढलिबक्सेको रहेछ, जुरुक्क उठिबक्स्यो । त्यत्ति उ नै भएन ।

*समिति:* बेडिङ्गको नजिकैमा कि वलि वरै ढलेको ?
*जवाफ:* वेड नजिकै ढलेको ।

*समिति:* अरु केही सम्भना छ ?
*जवाफ:* छैन । त्यहाँबाट भागियो ।

*समिति:* शरिरमा त हतियार भिरेको देख्नुभयो, हातमा केही थियो कि थिएन ?
*जवाफ:* हातमा याद भएन । देखिन ।

*समिति:* भऱ्याङ्गबाट तपाई कता जानु भयो ?
*जवाफ:* पछाडी उतैबाट फर्कें ।

*समिति:* पड्केपछि सरकार फर्के नफर्केको केही थाहा पाउनु भयो ?
*जवाफ:* म भागिहालें थाहा पाइन । पछाडि भागिहालें ।

*समिति:* अनि कुनवेला आउनु भयो ?
*जवाफ:* म त पछि आइन, पछि आउँदै आइन । पछाडि पछाडि भइहाल्यो । सैनिकहरु आइहाले होलान् भनी आउँदै आइन । पछि धेरै लाष्टमा ए.डि.सी. अफिसमा बोलाएपछि आयौं ।

*समिति:* ए.डि.सी. अफिसमा बोलाएर सोध्यो ?
*जवाफ:* केही पनि सोधेन ।

*समिति:* अरु केही सम्भना छ भन्नु पर्ने ?
*जवाफ:* केही पनि छैन ।

**रामकृष्ण के.सी. (शाही अर्दली) संग पुन सोधपुछ**

*समिति:* रामकृष्ण के.सी. जी, तपाईलाई हामीले किन बोलाएको भने अलिकति केही कुरा बाँकी भयो । ८ बजेर १९ मिनेट जाँदा तपाईलाई युवराजाधिराज सरकारलाई चुरोट लगिदिनका लागि अह्राइएको थियो । त्यो चुरोट त बैठकमा पनि देखिन्छ त, किन चुरोट लान पऱ्यो ? चुरोट किन लानु पर्थ्यो र चुरोट लिएर कहाँ जानुभयो ?
*जवाफ:* म चुरोट अब त्यसमा खास ... माल भएको चुरोट ।

*समिति:* माल भनेको के ?
*जवाफ:* गाँजा । गाँजा भरेको चुरोट ल्याऊ भन्नुभएको रहेछ । अनि म विलियर्ड हलको त्यो मेन ढोकामा पुगेपछि पारस सरकारलाई टक्र्याएँ । भित्रचाहीं म छिरिन ।

*समितिः* कुनचाहीं ढोका ? पूर्वपट्टीको ढोका ? कतिवटा लगिदिनुभयो ?

*जवाफः* त्यही ठूलो ढोका । त्यसमा ५/६ वटा जति थियो ।

*समितिः* कसले गराउने गर्थ्यो ? के के हाल्ने गर्थ्यो त्यसमा ?

*जवाफः* त्यो हामीहरुले नै बनाउने हो । त्यो गाँजा र सुर्ती मिसाएर बनाउने हो ।

*समितिः* त्यो ५/६ वटा पारस सरकारलाई बुझाइयो ? अनि ... के भनेर ... ?

*जवाफः* सरकारले हुकुम भएको भनेर ... सावले भनिबक्सियो । अनि त्यहाँ गएको, पारस सरकार सवारी भयो । त्यहाँ टक्र्याएँ । ... पारस सरकार हाँस्दै सवारी भयो । अनि म हातमा लिएर गएको थिएँ । मैले दिएँ । टक्र्याइबक्सियो ।

*समितिः* त्यो चुरोटमा गाँजामात्रै भरिएको थियो भन्ने तपाईलाई एकिन छ ?

*जवाफः* त्यसमा गाँजा र अर्को कालो के हुन्थ्यो त्यो ल्याउँथें, त्यो मिसाएर भरिदिनु पर्थ्यो ।

*समितिः* कहाँबाट कसले ल्याउँथ्यो ?

*जवाफः* त्यहीं नै हुन्थ्यो अब भर ...

*समितिः* त्यहीं भनेको खोपीमैं हुन्थ्यो कि ?

*जवाफः* त्यहीं नै हुन्थ्यो, खोपीमैं हुन्थ्यो ।

*समितिः* गाँजा तपाईले चिन्नुहुन्थ्यो ? कालो तपाईले चिनिदैनथ्यो, कालो कति राख्नुपर्दथ्यो ?

*जवाफः* त्यो अब हेरेर, त्यस्तै चुरोट हेरेर ।

*समितिः* एउटा चुरोटको खिलीमा गाँजा कति, त्यो कालो कति राखिन्थ्यो ?

*जवाफः* त्यो त अब .... बक्सेको थियो पहिलाचाहीं । ... त्यो सुर्ती र उ सबै एउटामा मिलाएर हालिदिने ।

*समितिः* त्यो कालोको रंग अहिले देख्यो भने चिनिन्छ ? पूरा कालो थियो कि अलिअलि कलेजी कलेजी थियो ?

*जवाफः* पूरा उ त थाहा छैन । त्यो त्यहीं पनि सधैं होइन; कहिंलेकाहीं त्यस्तै उ भएको बेलामा ।

*समितिः* त्यो दिन कुन पर्‍यो ? कालो मिसिएको उ पर्‍यो कि अर्को परेको थियो ?

*जवाफः* त्यसमा कालो मिसिएको र अर्को दुवैथरी थियो ।

*समितिः* लगेर पारस सरकारलाई दिनुभयो । पारस सरकारलाई बुझाउँदा युवराजाधिराज सरकारले मागिबक्सेको हुनाले लिएर आएको । वहाँ पुर्‍याइदिने तपाईले भनेको हो कि होइन ?

*जवाफः* मैले त्यो जाहेर गर्न मिल्दैन । म त्यो उसमा गएर बसें । म सरासर जान लागेको थिएँ, पारस सरकार हाँस्दै सवारी भयो । मैले हातमा लिएको थिएँ । मैले टक्र्याएँ । अनि पारस सरकारले लिएर सवारी भयो ।

*समितिः* अनि के खवर गरेर माथि खोपीमा पुग्नुभएको थियो त ? चुरोट ... पछि युवराजाधिराज सरकार माथि ... मा पुगिसकेको, कहाँबाट के खवर आएर ?

*जवाफः* सरकार सवारी भएको थियो । ... सवारी भएको छ ... जानु भनेर अनि ...

*समितिः* त्यो कहाँ छ, त्यो खोपीमा ?

*जवाफः* त्यो खोपीमा हुन्थ्यो । सरकारले ल बनाउ भनेर बक्सिन्थ्यो अनि...

*समितिः* त्यसदिन तपाईले कहाँबाट बनाएर ल्याउनु भयो ?
*जवाफः* सरकारले बक्सेको थियो ।

*समितिः* त्यही दिन कि बिहान ?
*जवाफः* त्यो सरकारले बक्सेर पहिले बनाएर राख भन्नुभएको थियो, बनाएर राखेको थिएँ ।

*समितिः* बनाएर खोपीमा राख्नुभएको थियो ?
*जवाफः* बनाएर आफ्नै साथमा थियो ।

*समितिः* त्यो बनाउन दिएको कति बेला हो ?
*जवाफः* दिउँसो २/३ बजेतिर ।

*समितिः* होइन, त्यो ... जान भन्दा पहिले कि ?
*जवाफः* पहिले नै ।

*समितिः* त्यो दिन कति खिली बनाउनु भनिबक्सेको थियो ?
*जवाफः* त्यो बक्सेको थियो ५/६ बनाइदिने हुकुम भएको थियो । ५, ६ वटा ...

*समितिः* कुन चुरोट ?
*जवाफः* शिखर चुरोट ।

*समितिः* त्यो खाने कसले खाए भन्ने देख्नु भएन ? त्यो चिज तपाईसंग छैन ?
*जवाफः* छैन, जति बक्सिन्छ त्यही बनाएर टक्र्याउने हो ।

*समितिः* जति बक्स्यो ५/६ वटा बनाएर दिइहाल्नुहुन्थ्यो ? त्यो भन्दा अगाडि अगाडि पनि ... कति चोटी भएको थियो ? कहिले एकवर्षदेखि, ६ महिनादेखि चुरोट गाँजा हालेर बनाउनुस् भनेर ... कहिले शुरु गर्नुभएको थियो ?
*जवाफः* मैले त त्यस्तै हाम्रोचाहीं अल्टरनेट ड्युटी हुन्छ । कहिलेकाँही आफ्नो ड्युटी परेको बेलामा मैले त्यस्तै २/३ पटक बनाएँ होला ।

*समितिः* .... कति पटक ?
*जवाफः* महिना भन्दापनि झण्डै एकवर्ष जति भयोहोला । एक वर्षदेखि पहिला बनाएको थिएँ । अहिले तीनपाली जति बनाएँ मैले, आफ्नो ड्युटीमा ।

*समितिः* कस्तो बेलामा माग्ने गरिबक्सिन्थ्यो ?
*जवाफः* त्यही पार्टी भएको बेलामा बनाउँ भनिबक्सिन्थ्यो ।

*समितिः* अस्ति तपाईले हामीलाई जानकारी दिंदाखेरी सरकार खोपीबाट निस्केपछि मैले इमर्जेन्सी व्याग पनि लानपर्छ कि सरकार भनेर भनें भन्नुभयो तपाईले । त्यो इमर्जेन्सी व्यागमा के के हुन्छ ?
*जवाफः* त्यसमा अब सरकार बाहिर सवारी हुँदा त्यो वेदरप्रुफ ज्याकेट, ... चिपिस्टिक, ... स्प्रे, अनि त्यो एक्स्ट्रा व्याट्रीहरु त्यस्तै नै हुन्छ । पानी ज्युनार हुन्छ ।

*समितिः* अनि तपाई त्यो खोपीमा जाँदाखेरी युवराजधिराज सरकार तल उभिइरहेको देख्नुभयो कि बसिरहेको देख्नुभयो ?
*जवाफः* ढलेको अवस्थामा ।

*समितिः* त्यो वेला त्यस्तो किसिमले तपाईले बनाइसकेको ...

*जवाफः* केही पनि देखिन ।

_

*समितिः* के मा राखेको थियो ?

*जवाफः* त्यो सरकारको बट्टामा, चुरोटको ...

*समितिः* तपाईलाई बट्टाको रंग याद छ, कलर ?

*जवाफः* त्यो चाहीं याद भएन । त्यो दिन त मैले त्यही चुरोटको बट्टामा नै टक्र्याएको हो । तर सरकारले अर्कै बोकिवक्सेको हो बट्टा । अब कालो पोशाक भएको बेलामा कालै बट्टा, खैरो भएको बेलामा खैरो बट्टा लिइबक्सिन्थ्यो चुरोटको ।

*समितिः* अब फेरि चाहियो भने बोलाउँला है !

**व्वाइज शान्तबहादुर खड्कासंग**

*समितिः* घटनाको दिन तपाईलाई के जिम्मेवारी सुम्पिएको थियो ?

*जवाफः* खाना सम्बन्धी, यही पार्टी सम्बन्धी हामीले नै काम गर्नु पर्थ्यो । व्वाइज ।

*समितिः* यस घटना सम्बन्धी जे चीज तपाईसँग छ सम्झी सम्झी सबै विवरणहरु प्रस्तुत गर्नुहोस् ।

*जवाफः* अन्दाजी ७:३० बजे सम्पूर्ण सरकारहरु सवारी भयो । त्यहाँबाट अनि हामी आफैं उ अनुसार सरकारबाट के हुकुम हुन्छ, त्यही गर्छौं । पाहुनाहरु सवारी हुँदा हामी गेटमा बस्छौं । अनि सरकारले बेल हुकुम भएपछि आउँछौं । हामी किचेनमा बस्छौं, बोलाइवक्सेको खण्डमा सरकारबाट के निगाह हुन्छ, अनि बैठकमा लैजान्छौं । १० बजे डिनर सेट गर्न म डाइनिङ्ग हलमा बसिराखेको थिएँ, प्लेटहरु सेट गरेर ।

*समितिः* मान्छेहरु सबै एकैचोटी आए कि भिन्दा भिन्दै गरेर आए ?

*जवाफः* भिन्ना भिन्नै समयमा आइबक्स्यो । सबैभन्दा पहिला कुमार शाह सरकार आइबक्स्यो ।

*समितिः* कुन कुमार ?

*जवाफः* अँ, कुमार साहेब भनेको त्रिभुवन सरकारको ज्वाई हो । वहाँ अलि अगाडि सवारी होइवक्स्यो । सो समयमा युवराज सरकार ग्रेट बैठकमा विलियार्ड खेलिवक्सेको थियो ।

*समितिः* घटना हुँदा गोली कताबाट कसरी चल्यो ? देख्नु भयो देख्नु भएन ?

*जवाफः* डाइनिङ्ग सेट गर्न १० बजेको लागि तयार गर्दै थिए, सेट गर्न अगाडि थिएँ । एकै पटक आवाज आयो, के आवाज आयो हाम्रो सरकारहरुले केही ढल्यो, पोख्यो भने बोलाई बक्सन्छ । के ढल्यो भनेर व्वाइजहरु मात्र जान्छौं । अर्दली जान्छन् । ए.डी.सी.हरु आफ्नो आफ्नो ठाउँमा जान्छन् । यसो हेरें हाम्रो हाल युवराजधिराज सरकारलाई देखें । अलि अगाडी हामीले अर्कै ड्रेसमा देखेको थियो आर्मी ड्रेसमा देख्यौं । पाइण्टमा देखेको थिए । झटक्क के आवाज आयो भनेर हेर्दा यूवराज सरकार आर्मी ड्रेसका कम्व्याटमा होइबक्सेकोरहेछ । अलि अगाडी विलियार्ड खेल्दा अर्कै ड्रेसमा, हातमा गन देख्यौं, आवाज आएको देखेपछि हामी आत्तियौं । पछाडि पछाडि रातो लुगा व्याक साइटबाट खोपी फर्केर जान लाग्दा दुवैपट्टी हातमा यस्तो गन, व्याक यस्तो साइडबाट देख्यौं र पछाडीबाट एउटा रातो लुगा लगाउने आइमाई त्यसको त ढाडमात्र देखे मैले, के भयो भनेर वाहिर हेर्दै वित्तिकै म मा अर्कै फिलिङ्ग भयो अनि त्याहाबाट हामी भाग्यौं ।

*समितिः* भागेर कहाँ जानु भयो ?

*जवाफः* हामी आफ्नो क्वाटरमा पछाडिपट्टि क्वाटरमा गयौं । धेरै पछि फेरि त्यहि घटनामा आउन सकेनौं ।

*समितिः* युवराजाधिराज कतातिर गएको देख्नु भयो ? र त्यो रातो पोशाक लगाएको स्वास्नीमान्छे कतातिर गएको देख्नु भयो ?

*जवाफः* सँगसँगै, लखेट्दै, लखेट्दै भनेको मतलव अघि अघि यो पोजिशनमा युवराज सरकार, युवराजधिराजको यो फेस देखियो । उता पट्टीको ढाड देखियो ढोकाबाट ।

*समितिः* युवराजधिराज अगाडी मोहडा गरेको कि पछाडी मोहडा गरेर हिडेको ?

*जवाफ:* पछाडी मोहडा गरेर । पछाडी मोहडा गरेर यसरी दुई हातमा गन देखियो । पछि पछि सर्दै अगाडी रातो लुगा लगाउनेले उ गरेको, त्यो पनि हामीले को हो चिनेनौं, एकछिनपछि हामी क्वाटरमा पुग्यौं, गोली रोकियो, त्यसपछि चियाउँदै आउँदा आर्मी आइसकेको रहेछ । हामी जान पनि सकेनौं । आर्मी आएर डिउटी बसी सक्यो । मैले देखेको त्यति हो ।

*समिति:* ड्याङ्ग आवाज आयो तपाई डाइनिङ्ग रुममा हुँदा खेरी तपाइ ढोकामा ठ्याक्क निस्कँदाखेरी युवराजधिराज सरकार निस्केको देख्नु भयो हैन ?

*जवाफ:* अलि तल पुगिसकेपछि देखें मैले ।

*समिति:* ड्याङ्ग गऱ्यो, अनि निस्किहाल्नुभयो तपाई ?

*जवाफ:* ड्याङ्ग हैन, भुटुटुटु आवाज आयो पर पुगेको देखेको, गिलास फुट्यो, ऐना फुट्यो, त्यो त यादै भएन ।

*समिति:* तुरुन्त बाहिर निस्केर जानु भएन ?

*जवाफ:* भुटुटुटु आवाज आयो फेरि भुटुटुटु आवाज आयो के भएछ त भनी हेर्दा त बाहिरको त्यो देखेपछि होसले छाडी आत्म थरर काम्यो ।

*समिति:* त्यो बेला धेरै समय भइसकेको थियो ? आवाज आएको कति मिनेट भएको थियो

*जवाफ:* त्यस्तै एक मिनेट, डेढ मिनेट अनुमान, मेरो आफ्नो अनुमान ।

*समिति:* युवराजधिराज चाहि तपाईले प्रष्टै अनुहार चिनेको ?

*जवाफ:* अँ यो साइडबाट देखेको आर्मी लुगा कम्ब्याट, दुईपट्टि हातमा त्यो देखें मैले ।

*समिति:* हातमा त्यो देखेको पछाडि सर्दै हिडेको ? यो साइडबाट हिडेको ?

*जवाफ:* यो साइड होइन कि यो साइड ।

*समिति:* यसरी हिडेको कि के ?

*जवाफ:* रातो आकृतितिर हेरेर पछि सरेको देखेको हो त्यत्ति नै हो त्यसपछि हामी आउँदै आएनौं ।

*समिति:* अर्को एउटा लोग्ने मानिस आयो ?

*जवाफ:* त्यो छैन । मैले युवराजधिराजको त्यो हातमा देखेर होसले ठाउँ छोडेको । म के भएँ भने, म पछाडि पुगेपछि कसरी पुग्यौ भन्ने पछाडी मात्र याद आउँछ, हामी आत्तियौं ।

*समिति:* अरु कोहि सम्झना छ ?

*जवाफ:* अरु केही छैन, त्यहाँबाट हामी क्वाटर गयौं ।

*समिति:* अनी पछि आउनु भयो ?

*जवाफ:* धेरै पछि आएको । आर्मी आइसकेकोले हामीहरु गएनौं । ढोकाबाट हेऱ्यौं । हामीले त्यता गएनौं ।

*समिति:* खाना त्यसै रह्यो ?

*जवाफ:* त्यसै रह्यो ।

*समिति:* ड्रिङ्स कति चल्यो ?

*जवाफ:* ड्रिङ्स पनि धेरै चलेन । सबै हामीले सर्व गर्ने होइन ।

*समिति:* युवराजधिराजलाई विलियार्ड खेल्दा ड्रिक्स कसले सर्व गऱ्यो ?

*जवाफ:* वार छ, त्यो वारमा के के राख्ने सबै दिउँसोदेखि सेट गरेर मिलाई दिन्छौं । विलियार्ड खेलेपछि युवराजधिराज सरकारले पाहुनालाई आफैंले हाली बक्सेको, हामीले पाहुनाहरु कुन बैठकमा जाने हामी देखाउने, सरकार आफैंले ड्रिंक्स दिइबक्स्यो । ठूला ठूला पार्टीमा हामी सर्व गर्दछौं ।Royal Family पार्टीमा सरकारहरु आफैं सर्व गर्नुहुन्छ । डाकेको खण्डमा मात्र जान्छौं ।सरकारहरुको के गफ हुन्छ हामी जाँदैनौं । हामी डाइनिङ्ग हलमा पनि बस्दैनौं; किचेनमा नै बस्दछौं । डिनरको १० बजेको तयारी अघिदेखि नै गर्छौं । हामी ३ जना ब्वाएज छौं ।

*समिति:* तपाइले काम गरेको कति भयो ?

*जवाफ:* १७ बर्ष ।

*समिति:* त्यो दिन श्री ५ कतिखेर सवारी होइबक्स्यो तपाइलाई जानकारी छ ?
*जवाफ:* को श्री ५ ? महाराजाधिराज ?
महाराजाधिराज, म किचनपट्टी थिएँ, अगीपछि पनि पछाडी नै सवारी होइबक्सन्छ, अफिस सकेर आफ्नै तालमा महिनाको १ शुक्रवार पार्टी भइरहन्छ । Royal Family मात्र हुनुहुन्छ, वाहिरको कोही हुनुहुदैन । ग्रेट बैठकमा घटना भएको ठाउँमा म एघार वर्ष काम गरेको छु ।

*समिति:* सो बाटो बाहिर निस्कन्छ होइन ?
*जवाफ:* हजूर ! त्यो बाट पछाडिपट्टि छ । त्यहाँबाट यसो यसो बाटो छ ।

*समिति:* जमुना अधिकारी बस्ने ठाउँ कहाँनिर ?
*जवाफ:* त्यो सरकारको खोपी भन्दा तलतिर ।

*समिति:* तल जाने ठाउँ कताबाट ?
*जवाफ:* त्यो जतातिरबाट पनि भऱ्याङ्ग छ, पछाडी पनि छ ।

*समिति:* तपाईले चियाएर हेर्दा ?
*जवाफ:* चियाएको होइन, यसो हेर्दा ।

*समिति:* तपाइले चिहाएर हेर्दा तपाइले देखेको महिला र युवराजाधिराज बीच कुनै बाचचित भएको छ ?
*जवाफ:* बातचित भएको छैन, भागाभाग, कराएका छन्, चिच्याएका छन् । को ले बोल्यो त्यो थाहा भएन ।

*समिति:* पछाडि पछाडि हिड्ने महिलाले ?
*जवाफ:* होइन, अरु महिलाले । त्यो कोठामा नजिक नजिक पर्दछ, डायनिङ्ग हल र त्यो जोडिएको छ नि ।

*समिति:* ति दुई आकृतिबीच कुनै बोलचाल भयो ?
*जवाफ:* बोलचाल त भयो होला । हामी आत्तियौं, सुन्न सकेनौं; भाग्नेमा लाष्टमा परें । म कुनापट्टि चेपमा बसें ।

*समिति:* तपाईले हेर्दा ड्याङ्ग ड्याङ्ग आवाज आइरहेको थियो ?
*जवाफ:* हजूर, थियो । युवराजाधिराज खोपीतर्फ लागी बक्सेको थियो ।

*समिति:* तपाई भाग्दा बच्चुराम भागी सकेको हो ?
*जवाफ:* म भाग्नुभन्दा एकछिन अगाडी उ के लिएर great बैठकमा गएको छ । उ भागेको र म आफ्नै सुरले भाग्दा बाटोमा भेटेको ।

*समिति:* तपाई भित्र हुनुहुन्थ्यो, ऊ बाहिर भयो ?
*जवाफ:* सलादहरु नबिग्रने हुँदा मिलाइराखेको छु । यौटै जना छौं, त्यत्रो जिम्मेवारी छ । किचेन पर छ, त्यही अनुसार मिलाउँदैथ्यौं । टेबेलुम्याट मिलाउनु पऱ्यो । प्लेट मिलाई राखेको थिएँ ।

**व्वाइज बच्चुराम के.सी.**

*समिति:* यहाँको नाम के हो ?
*जवाफ:* मेरो नाम बच्चुराम हो, म त्रिभुवन सदनमा काम ....... गर्छु ।

*समिति:* त्यहाँ काम गरेको कति वर्ष भयो ?
*जवाफ:* म त्यहाँ काम गरेको ५ वर्ष भयो । दरवार छिरेको ९ वर्ष भयो ।

*समिति:* जुन घटना घट्यो, त्यसबेला तपाईलाई कुन काममा खटाइएको थियो ?
*जवाफ:* ज्यूनार तयार गर्ने काममा ।

*समिति:* तपाईलाई सम्झना भएसम्म त्यस दिनको घटना के के भयो ? बताउनुस् ।

*जवाफ:* सबैभन्दा पहिला युवराजधिराज सवारी होइवक्सेको थियो, बैठकमा । त्यसपछि महेश कुमार सिंह साहेवज्यू सवारी भयो । त्यसपछि अरु साहेवहरु सवारी होइवक्स्यो । घटना घट्नु भन्दा दुई मिनेट अगाडि म कोल्डड्रिङ्क्स लिएर गएको थिएँ । त्यहाँबाट फर्केर अलि वर बैठकको ढोकाको १० मिटर जति उत्तर साइडमा पुग्दा युवराज सरकार आर्मीको चुस्ता (ड्रेस) मा सवारी होइवक्स्यो । अगाडि गन भिरिवक्सेको थियो । त्यसबेलासम्म मैले उभिएर हेरिरहेको थिएँ । कतै सवारी हुनलाग्यो भन्ठानें मैले । त्यसपछि ढोकाबाट छिर्ने बित्तिकै फायरिङ्ग गर्न शुरु गरिवक्स्यो, त्यसपछि मलाई डर लाग्यो; मेरो मुटु काम्यो । म दौडेर भागें ।

*समिति:* अरु कुरा केही देख्नु भएन ?
*जवाफ:* अरु केही पनि थाहा छैन ।

*समिति:* युवराजलाई तपाईले देख्दा (आर्मी ड्रेसमा) हतियार सहित नै देख्नुभएको थियो ? कतिवटा हतियार थिए ?
*जवाफ:* दुईवटा त हातमा तेर्स्याएकै देखेको थिएँ, एउटा ठूलै थियो, अर्को अलिकति सानो थियो ।

*समिति:* दुईवटा उस्तै उस्तै साइजको झुण्ड्याएको देख्नुभयो कि कस्तो थियो ?
*जवाफ:* एउटा त लामै थियो, अर्को झोलिएको थियो ।

*समिति:* पोजिशन कस्तो थियो ?
*जवाफ:* चुस्तामा अलि डरलाग्दो पोजिशनमा होइवक्सन्थ्यो ।

*समिति:* यसो यसो गरेर (हाउभाउ देखाउँदै) आउनु भएको थियो कि, के थियो ?
*जवाफ:* होइन, तेर्स्याएरै आउनु भएको थियो ।

*समिति:* तपाईलाई सम्झना छ ? लामो हतियार कुन हातमा र सानो हतियार कुन हातमा थियो ?
*जवाफ:* हतियार सहित देख्दैमा म तर्सें, मुटु चस्क्यो, तैपनि कतातिर सवारी हुन्छ भनेर उभिइरहें, हेरिरहें । तर भित्र छिर्ने बित्तिकै फायरिङ्ग शुरु भएपछि ठूलो आवाज सुनेपछि म त्यहाँ बस्ने कुरै भएन ।

*समिति:* पोजिशन कस्तो थियो ?
*जवाफ:* एकदम स्ट्रेटमा थियो ।

*समिति:* तपाई उभिएको ठाउँ र युवराज कोठाभित्र छिरेको ठाउँको दूरी कति फरक थियो ? कहाँनेर उभिएर देख्नुभयो ?
*जवाफ:* त्यही १० मिटर जति फरक थियो । डाइनिङ्ग भन्दा अगाडि गोलो यतापट्टि गेट छ, ढोका छैन, यस्तो कर्नरमा बसेको थिएँ, ताकि त्यो बैठकको ढोका ...........

*समिति:* युवराजलाई ढोकाबाट छिर्ने बेलामा मात्र देखेको कि अलि अगाडि देखिनै देखेको ?
*जवाफ:* अलि अगाडि वगैंचादेखि नै देखेको हुँ, चन्द्रमा बत्तिवाला खुला ठाउँ छ । त्यहाँबाट खुला देखिन्छ, अलिकति देखिन्छ; अनि त्यसपछि प्यासेजबाट देखिन्छ ।

*समिति:* भित्र छिरेको मात्र देखेको कि बाहिर निस्केको पनि देखेको हो ?
*जवाफ:* भित्र छिर्ने बित्तिकै फायरिङ्ग शुरु भयो । त्यसपछि म भागिहालें । त्यसपछि म त्यहाँ आउँदै आइन ।

*समिति:* फायरिङ्ग कसलाई भएको देख्नुभयो ?
*जवाफ:* त्यहाँबाट भित्र देखिंदैन; म बसेको ठाउँबाट फायरिङ्ग भएको मात्र देखिन्थ्यो, कसमाथि फायरिङ्ग भयो देखिएन । मलाई सानु प्रभुले (निराजन साहेव) ले, कोल्ड ड्रिङ्क्स ल्याऊ भन्ने हुकुम भएकोले कोल्ड ड्रिङ्क्स लिएर गएको थिएँ ।

*समिति:* तपाई २ मिनेट अघि कोल्ड ड्रिङ्क्स लिएर जाँदा महाराजाधिराज सरकार कहाँ होइवक्सन्थ्यो ?
*जवाफ:* विलियार्डकै आसपासमा होइवक्सन्थ्यो । म त्यहाँ डाइरेक्ट गएँ । कोल्ड ड्रिङ्क्स त्यहाँ राखें; त्यहाँ बस्नुपर्ने थिएन; त्यस्तो आवश्यक परेमा घण्टी बजाईवक्सन्छ वा कहिलेकाहीं आफै किचेनमा सवारी होइवक्सन्छ । यो चीज लेऊ भन्ने हुकुम हुन्छ, त्यही अनुसार जान्छौं । त्यहाँ कुनै फिर्ता ल्याउनुपर्ने चीज भए ल्याउँछौं, फर्किहाल्छौं ।

*समिति:* तपाईलाई थाहा छ तपाई त्यहाँ कुन समयमा जानुभएको थियो ?

*जवाफ:* मैले घडी त हेरिन । तर अन्दाजी त्यही ९:०० बजेको थियो कि जस्तो लाग्छ । त्यसबेला हामी ३ जना मात्र थियौं काम गर्ने । ३ जनाले सबै भ्याउनुपर्ने हुन्छ, टेन्सन हुनछ, त्यसैले ओहोर दोहोर गरिराख्नु पर्ने हुन्छ । समय हेर्ने मौका समेत मिल्दैन ।

**द्वारे आमा *जमुना अधिकारी***

*समिति:* दरवारमा काम गर्नुहुन्छ ? कुन चाहिं जिम्मेवारी दिइएको छ ?
*जवाफ:* मेरो जिम्मा भण्डारतर्फ ।

*समिति:* जमघट भएको घटना हुँदाको दिन कहाँ हुनुहुन्थ्यो ?
*जवाफ:* पार्टीको जिम्मा भएको दिन ....... मेरो हातबाट दिनुपर्थ्यो ।

*समिति:* अर्दली को थियो ?
*जवाफ:* रामकृष्ण थियो ।

*समिति:* रामकृष्णको सुकला हुने कोठीमा गइवक्स्यो ?
*जवाफ:* हजूर खोपीमा ।
हामी गएपछि उठिवक्स्यो । ............ यसो यसो गरेर ऊ गर्छन् ....... हामीले नै खोलिदियौं । बाथरुम गइवक्स्यो । बाथरुमको लक नलगाई बक्स्योस् भन्यौं । लगाई बक्स्यो । बाथरुम बाहिर बस्यौं । के गरिवक्सन्छ भनेर बस्दा वाथरुममा वा-वा गरिबक्सियो । ढोका लगाईवक्सेको थियो । लक लगाएको थियो भित्रबाट । बाथरुम बाहिर बस्यौं, के गरी बक्सन्छ भनेर हेर्दा निस्केपछि तिमीहरु सुत्न जाओ जाओ भन्नुभयो । भनेपछि त्यहाँ बस्ने कुरा भएन । अनि म तल कोठामा आफ्नो सामान थियो । सुत्न जाओ भन्दैमा आफ्नो ड्यूटी भएकोले कोठामा पसी सामान लिएर जान लागेको थिएँ । ...................... रामकृष्ण आई किचेनको साँचो माग्यो । ल भनेर दिएँ । उ कता गयो, किचेनमा गएर बात गर्न थाल्यो । म यताउति काम गरिराखेको थिएँ । पछि त उनीहरु कराउँदै ऐ के भयो भन्दै भागें, कुन्नी के भयो, मलाई थाहा भएन ।

*समिति:* वाकवाक आएको जस्तो देख्नुभयो, तिमीहरु जाओ भनेपछि तपाई जानुभयो होइन ?
*जवाफ:* सामान चाहियो भनेपछि गएँ । त्यसपछि किचेनमा यताउती गर्न गएँ । एक्कासी केटाहरु कराउँदै आए । अरु थाहा भएन ।

*समिति:* बन्दुकहरु कोही बोकेर भागेको देख्नुभयो ?
*जवाफ:* देखिन । देखिन हजूर, मैले देखिन ।

*समिति:* सामान लिएर तल किचेनमा आएर यताउती काम गर्दा एक्कसी केटाहरु कराउँदै आएपछि के भयो कसो भयो ? थाहा भएन । नआत्तिएर देखेको कुरा भन्नुहोस् न ।
माथि (खोपीमा) कसैले बोलाएर वा किन जानुभयो ?
*जवाफ:* सरकारबाट बोलाएर गएको ।

*समिति:* बारम्बार ड्यूटीमा जाँदाखेरी युवराजधिराज सरकारले हतियारहरु कोठामा त्यसै जथाभावी फाल्नु हुन्थ्यो कि कहीं राख्नु हुन्थ्यो ?
*जवाफ:* हतियारहरुको सम्बन्धमा मलाई केही थाहा छैन । मलाई भनेको पनि छैन, गर्नु पनि पर्दैन । वास्ता पनि गर्दिन । कहाँ के भनेर थाहा छैन ।

*समिति:* त्यो लुगाहरु लगाएर फर्केर गएको पनि देख्नु भएन ?
*जवाफ::* देखिन ।

*समिति:* युवराजधिराजको कोठा कस्तो थियो ? यता आउनुहोस् त, पालै पालो भन्नुहोस् । किचेनबाट मूल कोठा जहाँ जमघट थियो, त्यहाँ आउनु भयो कि आउनु भएन ?
*जवाफ:* आइन, मेरो काम थिएन । अरु केटाहरुले गरिराखेका थिए ।

*समिति:* त्यत्रो मान्छेहरु गोली चल्यो, उद्धार कार्य गर्दै लगे । हाँ, हुँ भयो । तैपनि आउनु भएन ?
*जवाफ:* आइन, अनावश्यक भनिन्छ भनेर आइन । जे भएपनि आउनै हुँदैन । कामदार केटालाई पनि आउन दिदैनथे । मान्छे चाहियो भने बोलाउँदथे । त्यसमा म आइमाई जान्नथें ।

*समिति:* खोपीबाट निस्केपछि कताबाट बाहिर निस्कनुभयो ? भऱ्याङ्गबाट निस्कनु भयो कि ?
*जवाफ:* मेरो कोठामा जानको लागि ? त्यो भऱ्याङ्ग मेरो होइन ।

*समिति:* अँ । बडामहारानीको अहिलेको अवस्था भयो नि !
*जवाफ:* त्यो पनि मैले सुने देखेको केही छैन हजुर । मलाई थाहा छैन ।

*समिति:* त्यसपछि तपाई माथि जानु भएन ?
*जवाफ:* अन्धाधुन्ध भयो मलाई केही थाहा भएन ।

*समिति:* माथि खोपीबाट तपाई तल जाने कुन बाटो ?
*जवाफ:* खोपीबाट तल जाने लक लगाएको होला नि हजूर । हजूरहरु सवारी भएको छ ।

*समिति:* तपाई जाने बाटो कताबाट भनेको ? भऱ्याङ्ग झर्ने ठाउँ मुखमैं छ नि । त्यहाँबाट कता लाग्नुभयो ?
*जवाफ:* मेरो कोठामा जाँदाखेरिमा अगाडिको भऱ्याङ्ग होइन, पछाडीको पूजा कोठाबाट । मेरो कोठाबाट पछाडी निस्कने ठाउँ चौर छ ।

*समिति:* बाथरुमबाट निस्कँदासम्म तपाई हुनुहुन्छ त्यसपछि तपाई जा भने पछि त्यस पछि तपाँईलाई केहीपनि थाहा छैन ?
*जवाफ:* छैन । त्यसपछि दर्शन भएको पनि होइन । माथि ओर्लेको पनि छैन । त्यसपछि भागदौड भइहाल्यो ।

*समिति:* पहिले कोठामा हुँदा कुन पोशाकमा हुनुहुन्थ्यो ?
*जवाफ:* म साविककै पोशाकमा थिएँ ।

*समिति:* हैन दिपेन्द्र सरकार ?
*जवाफ:* त्यो बेलामा कुनै पोशाक पनि पहिरिवक्सेको थिएन । खाली भित्री पाइन्ट थियो । बाथरुम जाने बेलामा अघि माथिको फुकालिदिएका थियौ । तल पाइन्ट थियो । माथि कुनै लुगा कुनै पनि थिएन ।

*समिति* अरु केही सम्झना वा भन्नुपर्ने जस्तो केही छ ?
*जवाफ:* त्यसपछि मलाई केही पनि थाहा छैन । लुगै लगाइवक्सेको थिएन । मैले दर्शन पाउँदा थिएन । माथिको लुगा फुकालेर बाथरुम जानुभयो । बाथरुमबाट बाहिर निस्केपछि वहाँहरुलाई जानु भन्नुभयो । त्यसपछि सरकारको दर्शन पाएको पनि छैन । माथि उक्लँदा पनि ........

*समिति:* जुनबेला तपाईहरुलाई कोठामा जानु भन्नु भएको थियो त्यो बेलाका कस्तो अवस्थामा, त्यो दिन अलि पिएको केहि थियो कि ?

*जवाफ:* छैन, त्यत्तिकै ढलिलबक्स्यो भन्ने हुकुम भयो ।

*समिति:* ए ! कोठामा ढलेको ?
*जवाफ:* हजूर, कोठामा कार्पेटमा । खोपीको कार्पेट हो । माझको यस्तोमा परेको थियो । त्यो बेलामा चाहि हामी गएपछि उठेर यसो गर्नु भयो, सरकारलाई के भयो लागिवक्सिन्छ कि भन्यौं । त्यसपछि वाथरुम सवारी भयो । त्यसपछि दर्शन पाएको छैन ।

**अ.म. गोपाल देवकोटा (भान्से बाजे)**

*समिति:* दरवारमा काम गर्न थालेको कति वर्ष भयो ?
*जवाफ:* ७ वर्ष ।

*समिति:* तपाईलाई के जिम्मेवारी सुम्पिइएको छ दरवारमा ?
*जवाफ:* म कुकमा काम गर्छु ।

*समिति:* कहिलेदेखि कुकमा काम गर्दै हुनुहुन्छ ?
*जवाफ:* ६ वर्ष अघिदेखि कुकमैं काम गर्दै आएको छु ।

*समिति:* घटना हुँदा तपाई कहाँ हुनुहुन्थ्यो र के गर्दै हुनुहुन्थ्यो ? के के देख्नुभयो ? कसले के गरेको देख्नुभयो ?
*जवाफ:* हामी पछाडिपट्टि किचेनमा थियौं, अनि गोलीको आवाज आयो । अरु साथीहरु भागेको देखेर हामी पनि भाग्यौं । अरु केही पनि देखिएन । घटना भएको हलतिर जान हामीलाई अनुमति थिएन । त्यसैले त्यता गएनौं ।

*समिति:* कस्तो आवाज ?
*जवाफ:* ढ्वाङ्ग गरेको आवाज मात्रै सुनियो ।

*समिति:* गोली चलेको त सुनियो ?
*जवाफ:* गोली चलेको सुनियो ।

*समिति:* पछि फर्केर आएर पनि हेरियो कि ?
*जवाफ:* पछि फर्केर आइन ।

व्वाइज कृष्णबहादुर कार्कीसंग

*समिति:* तपाई दरवारमा काम गर्न थालेको कति वर्ष भयो ?
*जवाफ:* ५ वर्ष ।

*समिति:* घटना भएको दिनमा तपाई के गर्दै हुनुहुन्थ्यो ? के के भयो, सबै बताउनुहोस् ।
*जवाफ:* म किचेनमा काम गरिरहेको थिएँ । साथीहरु दौडेर आए, म पनि संगै पछाडि गएँ । मैले आवाज मात्र सुनें । किचेनमा भएको बेलामा आवाज आयो, त्यहींबाट भागें ।

*समिति:* कसले गोली पड्कायो थाहा भएन ?
*जवाफ:* थाहा भएन ।

*समिति:* किचेनमा सबैभन्दा पहिले दौडिएर आउने को थियो ? बच्चुराम कि शान्तबहादुर ?
*जवाफ:* पहिला बच्चुराम आए, अनि शान्तबहादुर आए ।

***<u>हुद्धा खेमराज आचार्यसंग</u>***

*समिति:* तपाईले दरवारमा काम गर्न थालेको कति वर्ष भयो ?
*जवाफ:* दरवारमा काम गर्न थालेको १२ वर्ष भयो ।

*समिति:* तपाईको नाम ?
*जवाफ:* हुद्धा खेमराज आचार्य ।

*समिति:* अहिलेको जिम्मेवारी के छ ?
*जवाफ:* अहिलेको जिम्मेवारी भि.भि.आइ.पी.हरुको सेक्युरिटी गर्नु, सुरक्षा प्रदान गर्नु ।

*समिति:* घटना हुँदाको दिन तपाई त्यहाँ के मा खटिनु भएको थियो ? र के काम हेर्नु पर्थ्यो ? के के थाहा छ ? त्यो सबै बताइदिनुस् न ।
*जवाफ:* घटना हुँदाको दिनमा म MP Duty भन्ने हुन्छ त्यहाँ, ट्राफिक नियन्त्रण गर्नु पर्ने, म त्यहाँ सवारीमा आएका गाडीहरुलाई मैले पोरटिकामा ल्याएर रोकिदिनु पर्ने थियो । म त्यसरी खटिएको थिएँ, गेटदेखि बाहिर ।

*समिति:* भित्र के के घटना भयो भन्ने कुरा केही थाहा छ ?
*जवाफ:* गेटदेखि बाहिरै खटिएपछि, बाहिरबाट आउने सवारीहरु .......... । त्यतिखेर त्यस्तै पौने आठतिर बाहिर आउनुपर्ने....... । त्यसपछि बडामहारानी सरकार सवारी भयो, त्यसपछि मुमा बडामहारानी सरकार । मुमा बडामहारानी सरकारलाई युवराज सरकारले त्यहाँ महेन्द्र मन्जीलबाट ल्याइवक्स्यो । त्यसपछि भित्र गइवक्स्यो । त्यसको धेरैपछि महाराजाधिराज सरकार अफिसबाट गाडीमा होइन, वाकिङ्ग, सुन्दरप्रसाद होइवक्सन्थ्यो, सुन्दरप्रसाद र महाराजाधिराज सरकार वाकिङ्ग सवारी भयो । त्रिभुवन सदन भन्ने ठाउँमा । भित्र कहाँ पार्टी हुन्छ, त्यो हामीलाई थाहा

छैन । त्यहाँ हामी पस्न पाइदैन । हामी बाहिरकै कामहरु गर्ने हो । म बाहिरनै बसिरहेको थिएँ । सरकार सवारी भएपछि म बीच बाटोमा बस्न मिल्दैन, साइडमा बसेको थिएँ ।

त्यही ९ बजेर १०/११ मिनेट जाँदा (घडी त एकिन भएन) एक्कासी झ्याम झुरुम सिसाको आवाज सुनें । गोली नै हो भन्ने एकिन भएन । त्यसपछि ए.डी.सी. साहेवहरु जर्‍याकजुरुक उठेर तल आउनु भयो । भित्र जानुभयो । कताकता जानुभयो । म पनि के भयो भनेर हतोत्साही भएँ । मलाई कस्तो कस्तो भयो । त्यसपछि त्यतातिरको के भो भन्ने सुन्नपट्टि लागें । शुरुमा एउटा अलिकति ब्रष्ट भयो, त्यसपछि एकछिन रोकियो, त्यसपछि कन्टिन्यू भयो- फायरिङ्ग चाहिं, त्यति भैसक्यो । बाहिरबाट पहिलो शुरुको मात्र सुनेको, चिच्याएको आवाज सुनिन । गोलिको आवाज पछि मात्र सुनेको । तर गोलिको आवाज त्यहींको हो भन्ने यकिन भएन । कता कता अर्कोतिर टाढा जस्तो सुनेको थिएँ । म त ढोकाको साइडमा बसेको थिएँ । त्यसपछि मलाई पनि उत्सुकता भयो, चियाएर हेर्न पाइदैन, अप्ठ्यारो छ । के के न हो भनेर यसो हेर्न लागेको थिएँ, महिलाको आवाज सुनें- 'ओ माइ गड, डाक्टर बोलाऊ, एम्बुलेन्स बोलाउ' भनेको सुनें । तर प्रत्यक्ष कसले भन्यो मैले थाहा पाइन । पहिले गोली चल्नेबित्तिकै त्यस्तो सुनें ।

त्यति नै खेर एउटा व्यक्ति फुत्त निस्केर भाग्यो, खैरो खैरो दौरा सुरुवाल लगाएको, जुत्ता पनि नलगाएको मान्छे, त्यसको पछि पछि गजेन्द्र ए.डि.सी. साहेव दौडिनु भयो, मलाई पनि को दौड्यो भन्ने चिन्नु पर्ने हुँदा अगाडि गएर चिन्ने प्रयास गरें, जुन व्यक्तिले म पट्टि फर्केर हेर्दा पनि हेरेन, निकै पर पुगेपछि पल्याक पुलुक गरेर हेर्‍यो,त्यताबाट फर्केर हेर्दा मात्र मैले चिनें, जुन व्यक्ति राजीव डाक्टर साहेव हुनुहुँदोरहेछ । फायरिङ्ग खनटिन्यू भै राखेको छ र बढिमा २०-२२ सेकेण्डमा स्टप भयो । केही छिनपछि ए.डि.सी हरुले महाराजाधिराज सरकारलाई निकालिबक्स्यो र सरकारलाई महारानी सरकारको गाडी Jaguar मा राखेर…… महिलाको आवाज आउने बित्तिकै अनन्त मेजर साहेवले सैनिकको स्ट्याण्ड वाई फोर्स लाई तुरुन्त आउने भनेर आदेश भएको थियो । त्यसको ३ मिनेट भित्र फोर्स आइपुगेको थियो । त्यसपछि अनन्त मेजर साहेवले मुभ भनिवक्स्यो; त्यतिखेर भित्र मुभ भनिसकेपछि पारस सरकार बाहिर निस्किवक्स्यो, त्यतिबेरै महेश्वर बहादुर सिंह निस्किवक्स्यो, स.र. रविशम्शेर पनि निस्कनु भयो । त्यसपछाडि को को ल्याउन लागे, मलाई थाहा भएन । मलाई जुन जुन गाडी हुन्छ ल्याउनू भनेर आदेश भयो ।

**<u>सि. लिलाबहादुर गुरुङ्ग</u>**

*समितिः* दरवार बसेको कति वर्ष भयो ?
*जवाफः* २ वर्ष ।

*समितिः* के काम गर्नुपर्छ त्यहाँ ?
*जवाफः* ड्यूटी गर्नुपर्ने काम ।

*समितिः* भित्र कि बाहिर ?
*जवाफः* बाहिर ।

*समितिः* घटना घटेको दिन के के ड्यूटी गर्नु भयो ? के के देख्नुभयो ? के के सुन्नुभयो ?
*जवाफः* म ड्यूटी बसेको केही छिनपछि शाही परिवार बाहिरबाट भित्र सवारी भयो ।

*समितिः* तपाईको ड्यूटी कहाँनेर त्रिभुवन सदन भित्र कि बाहिर ?
*जवाफः* बाहिर, त्रिभुवन सदनको ढोका भन्दा केही साइडमा पर्छ ।

*समितिः* घटनाको विषयमा तपाईलाई के थाहा छ ?
*जवाफः* शाही परिवार पहिल्यै सवारी भैसकेको थियो । लाष्टमा महाराजाधिराज सरकार, समय मलाई याद भएन; पैदल यात्रा सवारी होइवक्स्यो । कुनामा पर्ने हुँदा भित्रको आवाज बाहिर आउँदैन । केही छिनपछि एकैचोटी भित्रबाट गोलीको आवाज आयो, त्यहीबेला एकजना महिलाको आवाज आयो; त्यसपछि एकजना मान्छे भित्रबाट निस्केर गाडीको पार्किङ्गबाट अगाडि भाग्यो । त्यो मान्छे मलाई याद भएन ।

*समितिः* कस्तो मान्छे ?
*जवाफः* लोग्ने मान्छे, होंचो होंचो टाइपको, गाडीको साइडबाट बाहिर निस्केको देखियो; एकछिनपछि गोली रोकिएपछि, ए.डि.सी. साहेवहरु कुनामा होइवक्सन्थ्यो । कोही भित्र जाने, कोही बाहिर जाने, हतार गरेको देखियो ।

*समितिः* बाहिर दौडेको मान्छे को थियो ?

*जवाफ:* चिनिएन, लुगा खैरो खैरो टाइपको यही लुगा भन्ने चिनिएन । ..................

***शाही रक्षक (ए.डि.सी) विभागका सेनानी श्री राजुकुमार कार्की***

*समिति* : यहाँको नाम ? राजदरवार सेवामा रहेको कति वर्ष भयो ?
*जवाफ* : मेरो नाम सेनानी राजुकुमार कार्की । ११ बर्ष चानचुन भयो राजदरवार सेवामा रहेको ।

*समिति* : अहिले के जिम्मेवारीमा हुनुहुन्छ ?
*जवाफ* : अहिले म श्री ५ युवराजाधिराज सरकारको ए.डि.सी. ।

*समिति* : राजदरवारमा गत १९ गते भएको घट्ना त यहाँलाई थाहा हुने भइहाल्यो, त्यसमा यहाँको जानकारी, कसरी त्यो घट्ना घट्यो । कतिखेर यहाँले थाहा पाउनु भयो ? त्यहाँ भित्र यहाँ पहिलेदेखि नै त्यहाँ उपस्थित हुनुहुन्थ्यो कि ? उपस्थित भएको भए के के गर्नु भयो ? पहिले उपस्थित नभएको भए कतिखेर पुग्नु भयो र के के काम गर्नु भयो त्यो सारा समेत आफूलाई जानकारी भएको कुरा वताईदिनुस् ।

*जवाफ* : त्यो दिन म चाहीं छुट्टीमा थिएँ । अगाडिदेखि नै म किनभने आइतवार ३ तारीख म अमेरिका जाँदै थिएँ कोर्षको लागि म चाहीं छुट्टीमा थिएँ । त्यो दिन दिउँसो मेरो अमेरिकन एम्वेसीबाट त्यो ट्राभल अर्डर त्यो लिन भनेर जानुभन्दा अगाडि, युवराजाधिराज सरकारसंग अब अन्तिम दर्शन भेट गरेर जाउँ भनेर त्यो बेलाको ड्यूटी ए.डि.सी.लाई मैले सरकारलाई जाहेर गरिदेऊ भनें । त्यही क्लासमा होइवक्सन्थयो । म चाहीं विदा हुनलाई उ गरौं भनेर किनभने सनिवार सरकारसंग भेट हुँदैन भनेर मैले त्यो सोचिकन त्यसपछि साहवले भित्र बोलाइबक्सियो । राखिवक्सीयो- ल राम्रोसंग जाऊ उ गर । म संग इमेलमा कन्ट्याक्ट राखि राख । अब एक बर्षपछि आउनू भन्ने किसिमको कुरा भएको हो । शुक्रवार दिउँसोको घट्ना हजुर । उता युवराजाधिराजको दर्शन गरेपछि भनेपछि about after 11:30, before 12:00 .

*समिति* : कुन ठाउँ ?
*जवाफ* : युवराजधिराज सरकारकै अफिसमा । त्यहाँ दर्शन गरें । त्यसपछि म हिडें । त्यसपछि म हेड क्वार्टर गएँ । अनि हेडक्वाटरमा पनि विदा भएँ । त्यसपछि अमेरिकन एम्वेसी आएँ । त्यसपछि आ.डि. लिए । सवैथोक प्रेजेन्टहरु पनि जम्मा गरें । सवै प्याकिङ्ग स्याकिङ्ग सवै गरेर एउटा वाकस उता घर लिएर फेरी प्याकिङ्ग गर्नलाई अरु सामानहरु, त्यसपछि म एउटा मेरो साथीकहाँ त्यो चाही मेरो अमेरिकामा कन्ट्री प्रेजेन्टेसन गर्नुपर्छ । नेपालको बारेमा हामीले उ गर्नु पर्छ । त्यसको लागि सि.डि. रोममा हालि राखेको थियो । अनि गएर उ संगै म वसीराखेको थियो बेलुका पनि त्यसपछि हाल्यो अनि उसले सि.डि. रोम भोली स्यार्टडे मात्रै दिन सक्छु अहिले दिन सक्दीन भनेर भन्यो । त्यसपछि म घर गए । घर गएर वसें घर गएर वसें छोरीको, फेरी चिफ साहवको आर्मि चिफ सावको नातीनीले मेरो छोरीको साथी भएको हुनाले उसले फेयर वेल दिएको थियो । फेयरवेलमा उनीहरुले गएर त्यो बुके उनीहरुले पाएको थियो । २ वटा वुके, पापा यो पनि राम्रो छ । यता उता भनेर म काखमा राखेर गफ गरीराखेको थियो । त्यसपछि उसले देवयानीको फोन आयो । टाइम मैले उ गरिन । उनले के भनिन् भने सरकारलाई अलि जाड लागेको जस्तो छ अफिस गइकन एकचोटी हेर्न भन्नु भयो । मैले के भनेभने म त डिउटीमा हैन ? म कसरी जान मिल्छ र ?

*समिति:* कति बजे ?
*जवाफ:* मैले टाइमलाई उ गरिन, हैन कस्तो भने त्यो एक्ज्याक्ट त्यो अहिले उसमा गर्दाखेरी अव गए घरमा पसें फोन आयो । घरमा पसेको एवाउट ५, ७ मिनेट जति भएको थियो । चिया मगाई राखेको थिए । चिया पनि उ भएको थिएन । अनि एकचोटी गइदेउन भनेर भन्यो । सरकारलाई अलि जाड लागेको जस्तो छ । हिज नट फिलिङ्ग वेल । मैले, म त जान मिल्दैन हजुर कसरी त्यहाँ जाने म डिउटीमा पनि हैन । तर म डिउटीमा भएकोलाई म बुझ्छु भनेर भने त्यसपछि फोन राख्यो । फोन राखेपछि डिउटीमा भएको गजेन्द्र मेजरलाई फोन गरें । के छ गजेन्द्र भनेर साधारण हिसावमा, त्यो पार्टीमा कहिले कही ड्रिङ्गत भइहाल्छ भनेर साधारण हिसावले के छ गजेन्द्र भनेर भने ? ठिकै छ सर भनेर भन्यो । साहवलाई के उ भएको छ के ? केही गरी माथि खोपीमा सवारी भएको छ ? म रामलाललाई पठाई दिइ सके भनेर भन्यो । म आउनु पर्छ त भनेर भन्यो । आइस्योनत के भयो र ? अव हजुर पर्सि जाने आइस्योन त । यहाँ ए.डि.सी.हरु पनि वसीराखेको छ भनेर भन्यो ल भनेर भन्यो । त्यसपछि अनि त्यसपछि म उठे । मेरो वाइफफेरी उता अर्को कोठामा थियो । अनि भर्खर घर आएको, वाईफलाई भनेर त जानु पर्‍यो म अफिस जादैछु उसले फेरी कहाँ हिड्यो भनेर भन्ला भनेर, अनि एकैछिन कुरेर म वसे हजुर । त्यसपछि छोरीले अव फेरी त्यही हो राती आएपछि जान दिन खुट्टामा झुण्डिएर, अ पापा कहाँ जान लागेको तिमि भनेर भन्यो हैन म एकैछिन अफिस गएर आउछु भनेर भने । त्यतिकैमा वाइफ पनि आयो । वाइफ आएपछि म एकछिन अफिस जान्छु है भनेर भने, ओके भनेर उसले भनि म विदा पनि भएर आउछु त्यहाँ ए.डि.सी.हरु पनि त्यही रहेछ सवै भन्यो ल हुन्छ भनेर भन्यो त्यसपछि म अफिस गए । विस्तारै अव त्यही एवाउट । त्यही टाइम चाही

एक्ज्याक्ट्ली यो टाईम भनेर किनभने त्यो घडि हेरेकै उ नै अन्दाजै भएन । कतैजानु पर्ने केही भइदिएको भए म घडि हेर्थे । त्यसपछि हेरीन अफीस आएँ ।

*समितिः* डे्रसमा आउनु भयो कि सिभिलमा ?
*जवाफः* म सिभिलमा । ड्रेस त मेरो सवै प्याकिङ्ग भएर उ भइसकेको थियो । यो ड्रेस चाहि मैले पछि लगाएको यो ड्रेस भित्र गएर यो ड्रेस लगाए । त्यसपछि आए आएपछि मोटरको अगाडि पट्टि राखें । मोटर अगाडि राख्दाखेरी त्यहाँ केही पनि उ थिएन ।

*समितिः* लगभग कति भइसकेको थियो होला ?
*जवाफः* त्यही हजुर मैले भनीहाले नी मैले सुरुदेखिको टाइमको हिसाव नरहेको हुनाले मलाई एवाउट त्यहाँबाट अफीस आउनलाई ८, ९ मिनेट फ्राइडेको उसमा ।

*समितिः* तपाई त्यहाँ आए पछिको घट्ना भएको समय कति समय पछि भयो जस्तो लाग्छ ? तपाई त्यहाँ आए पछि घट्ना घट्यो जस्तो लाग्छ ?
*जवाफः* हैन म आउँदाखेरी घट्ना घटिसकेको थियो ? म आए हजुर विस्तारै आए । त्यसपछि अफिस भित्र छिरें । अनि ………… लुगा कहाँ छ भनेर यसो हेरें कोही पनि छैन त्यहाँ मान्छेहरु, अनि भित्र गएर लुगा लगाएर निक्लने बेलामा गजेन्द्रले अनि त्यो जाँदाखेरी गजेन्द्रले उ भएको थियो । ए सर आइस्योन भनेर भन्यो ।

*समितिः* रेस्क्यू सुरु भएर धेरै पछि ?
*जवाफः* धेरै पछि हजुर, त्यसपछि हतार हतार टोपी पनि थिएन । त्यत्तिकै युवराज सरकारको गाडिमा युवराज सरकारलाई हालीसकेको रहेछ । सर हजुर वसीसियोन छिटो भनेर भन्यो । अनि पारस सरकार पनि वसीवक्सेको थियो । गजेन्द्रले हाकि राखेको थियो मोटर म पछाडि ढोका खोलें हजुर । पछाडि वस्नलाई ढोका खोल्दाखेरी त्यो अध्यारोमा त्यो सिट अकुपाई भइराखेको रहेछ । अनि म पछाडि गएर हाचबाट भित्र छिरें । त्यो वेला के भयो भनेर भने युवराज सरकार भनेर भन्यो । म चाही के सोचे भने युवराज सरकार त्यो एउटा मान्छे यसरी वसीराखेको थियो । त्यो होला युवराज सरकार भन्ठाने । तर युवराजसरकार चाही उसको काखमा रहेछ हजुर । त्यसपछि त्यति गर्दा गर्दै निराजन सरकारलाई पनि मान्छेले वोकेर लेर आयो । त्यसपछि म चाही भित्रबाट मैले हेल्प गरेर ताने । अनि सरकारको पाउ पनि यसरी मिलाए । ढोका लगाए । त्यसपछि हस्पीटल लिएर आएको ।

*समितिः* अनि त्यो गाडिमा दुवै निराजनबाट पनि दिपेन्द्रबाट पनि कराएको केही ।
*जवाफः* हैन युवराजधिराज सरकार चाही, निराजन सरकार त केही पनि वोलीवक्सेको थिएन । केही पनि वोलीवक्सेको थिएन । त्यो फेरी अध्यारोमा कहाँ उ भएको भन्ने पनि भएन हजुर । अनि युवराज सरकारचाही हाँ हाँ गरिवक्सेको थियो । सास फेरी वक्सेको थियो । अनि त्यहाँबाट पारस सरकार अगाडि होइसिन्थ्यो । ए गोली कहाँ कहाँ लाग्यो कहाँ लाग्यो भनेर सोधि वक्सेको थियो अनि मैले चाही त्यो विचको वत्ती मलाई त अव के गर्ने भनेर त्यो विचको वत्ति वालेर यसो हेरें यस्तैमा लागीरहेको रहेछ । टाउकोमा ।

*समितिः* युवराज सरकार कस्तो ड्रेसमा होइवक्सन्थ्यो ?
*जवाफः* कम्व्याक्टमै होइवक्सन्थ्यो ।

*समितिः* अव एक दुई कुरा गरौं । अव धेरै युवराजधिराजको उ भएको कारणले यो हात हतियारको कुराहरु चाही युवराजाधिराजमा सामान्य दिने प्रचलन पहिलेदेखि नै थियो कि केही समय अघि भएको ? केस पर्खि राखेको भए के हुन्थ्यो ।
*जवाफः* युवराजधिराज सरकारको हतियार कसैले लिने भन्ने भन्नु भएको ?

*समितिः* हैन हात हतियार चाहि कही डिपोजीट हुन्थ्यो कि वहाँकहाँ पुग्ने वहाँकहाँ आर्मस् कसरी पुगेको हो ?
*जवाफः* अव युवराजधिराज सरकारको चाहि के थियो भने, अव हतियारमा सोख, वच्चादेखि नै अब मैले सरकारसंग ११ बर्ष चानचुन, मंसीर १ गते मेरो १२ बर्ष कप्लीट हुन्थ्यो । अब मैले पनि सरकारलाई राम्रोसंग तर हात हतियारको चाहि अब कहिले यो लिइवक्सने कहिले उ लिई वक्सने, अब स्यानेटरीमा आफै सवारी हुन्थ्यो । नयाँ हतियारहरु आएको आफै लिएर आइवक्सीन्थ्यो । अनि फलाना फलाना हतियार मगाउ टेष्ट फाएरिङ्ग एसो कहिले कहि टेस्ट गर्छु भनेर हुनुहुन्थ्यो अव त्यो चाही अव वहाँले जे भनेपनि आउथ्यो । त्यो चाहीने प्रहरीमा हुन्थ्यो ।

*समितिः* भित्र खोपीमा लैजानलाई दिन के कस्तो त्यहाँको पद्दतिहरु थियो ?
*जवाफः* पद्दतिहरु केही पनि थिएन । वहाँले आफै यो म राख्छु । यो म संग छ भनेर हुकुम पनि हुथ्यो ।

*समितिः* यसमा रोक्नु पर्ने ............ के हुन्थ्यो ? हुकुम भएपछि त्यो जान ........ ?
*जवाफः* हैन त्यसमा आफैमा ...... अव कसले सायद अव कसले मलाई यो हतियार, अव त्यही बेलाको M-16 जुन चारवटा छ हजुर त्यो त आफैले गएर लिएर आइवक्सन्थ्यो । अव कहिले म डिउटी परेको बेला हुन्थ्यो कहिले को डिउटी परेको बेला हुन्थ्यो कहिले को डिउटी अव ३ जनाको डिउटीमा भनौन हजुर अव आफ्नो पालो पालोमा को को ले उनीहरुले लिएर जान्थ्यो ।

*समितिः* अहिलेको जुन हात हतियार छ । त्यो चाहि धेरै पहिले देखि नै भित्रै राखेको हो कि भर्खरै सम्मीलीत भएको ........... ?
*जवाफः* अव यो पेस्टलमा त्यो ग्लक चाही एकैचोटी सवैलाई आएको जस्तै मेरो विचारमा, महाराजा सरकारको पनि थियो । निराजन सरकारको पनि थियो । त्यो एवाउट ३, ४ एयर जति हजुर मलाई एक्ज्याक्ट उ त थाहा छैन तर इट्स् विथ देम फर क्वाइट लङ्ग टाइम, ....... त्यो जुन स्यानो त्यो चाही कहिले आउथ्यो । कहिले वुझाई वक्सीन्थ्यो । कहिले राखिवक्सन्थ्यो । अहिले भएको चाही अलि टाइमै भइसक्यो ।

*समितिः* त्यो राईफल जुन छ नी स्यानो........... ग्लक चाही
*जवाफः* हैन मैले भन्न खोजेको त्यो सानो चाही, त्यो चाही हजुरको व्रिफकेसमा हाल्ने, हैन ग्लक चाही हजुर पेस्तोल चाही, त्यो अर्को एउटा स्यानो यत्रो छ नि ।

*समितिः* त्यसको नाउ के रे ?
*जवाफः* HK को वान अफ द उ हजुर त्यो चाही व्रिफकेसमा राख्ने हतियार हो । व्रिफकेसमा राख्यो । व्रिफकेसबाटै फाएर गर्न मिल्छ । अनि त्यो राखिबक्सेको पनि भइसक्यो । २ बर्ष, ३ बर्ष जस्तै हजुर, त्यो M-16 हरु सवै एकैताली, त्यो सर्ट ठूलो छ नि हजुर त्यो १२ बोर, त्यो पनि सरकार संग भएको २, ३ बर्षै भइसकेको थियो । अव त्यसमा अव नयाँ चाही आएको छैन ।

*समितिः* M 16 भएको पनि २, ३ बर्ष नै भयो ?
*जवाफः* भयो हजुर २ बर्ष चानचुन यस्तो ३ बर्ष त्यो,

*समितिः* उही खोपीमै रहन्थ्यो ति सवै कुरा ?
*जवाफः* अँ खोपीमै रहन्थ्यो हजुर त्यो जहिले पनि उ गन क्याविनेट जस्तै थियो हजुर, त्यहाँ राखिवक्सन्थ्यो, त्यसपछि गोलीहरु चाहि छुट्टै राखिवक्सन्थ्यो । हजुर ।

*समितिः* अनि एउटा अव त मैले पनि संझे यहाँले विचमा एकजना त्यो देवयानीको खवर गरेको मलाई भनेर भन्नु भयो । देवयानी भनेको को ?
*जवाफः* देवयानी भनेको सरकारको गलफ्रेण्ड हजुर ।

*समितिः* गलफ्रेन्ड, उ संग सम्बन्ध कहीले देखिन थियो । यहाँलाई थाहा छ ?
*जवाफः* थाहा छ हजुर थाहा त ? हैन हैन भन्नलाई त के भयो हजुर, भयो होला ८ बर्ष चानचुन या ९ बर्षको त्यो रेन्जमा भएको छ । भनौन यो हिजो आजको कुरा होइन, ७, ८ बर्षै भयो होला, ७ देखिन ८, साढे ८ त्यस्तो, एक्ज्याक्ट डेट त अव मलाई पनि थाहा भएन ।

*समितिः* वहाँहरुको भेटघाट चाही वारंवार भइरहने । आवत जावत पनि हुन्थ्यो कि ?
*जवाफः* आवत जावत पहिला हुँदैन थियो हजुर । आवत जावत अव सरकारले आफैले लिएर आइवक्सीन्थ्यो । आफैले कहिले कहीले कहि लिएर आइवक्सन्थ्यो ।

*समितिः* फस्ट टाईम कहिले लिएर आइवक्सेको हो ?
*जवाफः* खोइ हजुर यो अव नौ बर्ष अगाडि ८ बर्ष अगाडि उ, भनौन त्यो सुरु भएको हजुरको प्रोव्याब्ली भयो होला त्यही २ बर्ष जस्तो । २ बर्ष साढे २ बर्ष त्यस्तै भयो होला ।

*समितिः* त्यो विचमा नी यो हप्ता र त्यो दिन पर्टिकुर्लली त्यो दिन पनि वहाँहरुको बीचमा केही भेटघाट भएको यहाँलाई संझना थियो कि ?
*जवाफः* हैन न म विदामा थिए हजुर म सवै विदा लिएर खाली दर्शन गर्न मात्रै, अफिसमा त आउथे हजुर म ।

*समितिः* अनि युवराजाधिराज सरकारसंग यहाँको सहवासका कारणले के यो चुरोटहरु पिउने आदत थियो वहाँको ?

*जवाफ:* चुरोट त पहिला देखि नै खानु हुथ्यो । चुरोट त मैले सरकारको उ गर्दाखेरी नै, मैले डिउटी लिंदाखेरी नै चुरोट त त्यो बेला देखि नै खानुहुन्थ्यो ।

*समिति:* अनि चुरोटको विशेष प्रकारको चुरोटहरु ?
*जवाफ:* हैन त्यही हजुरको उ गाजा साजा कहिले कहि यसो पार्टी सार्टीमा यस्तोमा लिइवक्सन्थ्यो ।

*समिति:* गाँजा वाहेक अरु कुनै, ?
*जवाफ:* त्यो कालो कालो के हजुर अव चरेस हो कि के हो हजुर त्यो पनि कहिले काहिं पहिला चाहिँ कहिले काहिं गाजा लिइवक्सन्थ्यो । अव हामी चाहीं अब ए.डि.सी.को नाताले संझाउथ्यौं- सरकार यस्तो चिज चाहिं गरिवक्सनु हुँदैनथ्यो भनेर । हैन अब हामीलाई नै सल्लाह दिइवक्सन्थ्यो हजुर चुरोट भन्दा यो राम्रो हो । किनभने एउटा त्यो उ आएको थियो हजुर के रे एउटा त्यो टाइम्समा पनि त्यसको फोटो आएको थियो । डाक्टर एउटा ठूलै डाक्टर हजुर, जसले मंगल सदनमा त्यो मंगलसदनमा महाराजाधिराज सरकारहरुसंग पनि दर्शन भेट गरेर उसले त्यो एक्सर साइजहरु के के सिकाएको जस्तो लाग्छ हजुर त्यो बेलामा । किनभने म्याटहरु पनि राखिराखेको थियो २, ३ बर्ष अगाडि कै कुरा हो यो पनि खै मलाई त्यसले भनेको यो त चुरोट भन्दा पनि यो त उ छ भनेर, यो चुरोट खानु भन्दा यो राम्रो हो भनेर हुकुम हुन्थ्यो । अनि पहिला मैले डिउटी गर्दाखेरी चाही एक दुईवटा कहिले कहि हजुर, अनि म चाहि जहिले पनि तर्सिन्थे । सरकार यो यस्तो चिज त गरिवक्सनु भएन नि यो त, किनभने हामी हुर्केको त त्यो खानु हुँदैन भन्ने इन्भाइरोनमेन्टमा हुर्केको । फेरी आर्मिको जागिर हजुर त्यो त छुनु पनि हुन्न किनभने हामीले त एकचोटी युज गऱ्यो भने त हामी त जागिर बाटै आउट हुन्छ । हामी त त्यो हिसावमा हुर्केको । अनि हामी त काम त संझाउने त्यो बेलामा । त्यो गर्दाखेरी हैन यो त राम्रो हो भन्ने किसिमको जहिले पनि । त्यो गरीवक्सन्थ्यो । अनि पछि चाहि अलि अलिकति वढ्दै गएको थियो ।

*समिति:* कति महिना देखि वढ्दै गरेको क्रमः छ ?
*जवाफ:* त हजुर त्यो पनि एक डेढ वर्षै भयो । अनि पछि चाहि कस्तो नराम्रो हुँदै गयो भने मान्छेको अगाडि नै ज्यूनार हुने । अरु अरु मान्छेको अगाडि नै । सोसल ग्यादरिङ्गमै ज्यूनार भइदिने । अनि हामी चाहि, मान्छेको अगाडि चाहि नगरी वक्स्योस् सरकार यो त तिनिहरुले के भन्ठान्छ । जस्तो आर्मिको क्लवमा भन्यो । उ भन्यो राम्रो देखिदैन सरकार भनेर भन्यो अव हामीले भनेको । त्यो चिजै राम्रो होइन ।

*समिति:* कुन चुरोट पिउनु हुन्थ्यो ?
*जवाफ:* शिखर हजुर, वहाँको फेवरेटै शिखर थियो हजुर ।

*समिति:* त्यो नमिसाएको बेलामा ………… शिखरै खाइवक्सन्थ्यो ?
*जवाफ:* शिखरै हजुर । वहाँको व्राण्ड नै शिखर हजुर ।

*समिति:* अनि त्यो कसले तयार गरिदिन्थ्यो ? मिसाइदिन्थ्यो । त्यो चिज कसले कहाँबाट मगाउने के ?
*जवाफ:* खोइ त्यो अव हैन त्यो मगाउन त हामीलाई थाहा हुँदैन । त्यो अफै अव कता कता उ गरेर…

*समिति:* जस्तो भनौन यहाँहरु त त्यहाँ नजिकै भएको हुनाले कहिन कहिबाट चिज त मगाउनु पऱ्यो नि, त्यो चिज मगाउँदाखेरी कुनै ठाउँबाट लिएर आउने कुनै ठाउँ थियो कि ? कसरी त्यहाँ आइपुग्थ्यो ?
*जवाफ:* एक्ज्याक्ट्ली ठाउँ त मलाई पनि थाहा भएन हजुर, त्यो चिज त कालो कालो ढिक्का झिकेर हाम्रै अगाडि अर्दलीहरुलाई ल यो वनाइदे भनेर ल २ वटा वनाइ दे ३ वटा वनाई दे भनेर आफै त्यो त्यसबाट त्यो भाचेर । जस्तो वहाँलाई अव त्यो खादा खादा ।

*समिति:* अर्दलीले ? त्यो हैन यत्रो सामिप्यमा वसेको हुनाले कुनै ठाउँबाट युवराजाधिराज आफै सवारी हुने स्थितिमा, अथवा कुन प्रकृयाबाट त्यहाँ आउने, केही न केही जानकारी हुन सक्थ्यो होला नि ?
*जवाफ:* हैन अव जानकारी भन्दा पनि हामीले सोचेको चै हजुर, मे वि प्रोब्याव्ली अव दाजुभाईको सर्कल होला अव हामीले चाहि त्यही भन्ठान्थ्यौं । अव वहाँले पनि फलानोले ल्याउछ भन्ने थाहा पायो भने यसले रिर्पोट गरिदिएला ? केही भनिदिएला भनेर त्यो चिज चाहि हामीलाई सकेसम्म चाही त्यसमा ज्यूनार त हाम्रै अगाडि मजाले ज्यूनार हुन्थ्यो हजुर । अनि तर ल्याउने बारेमा चाहि यिनीहरुले पनि थाहा पाउला कहाँबाट आयो सोर्स उ होला भनेर सकेसम्म तर अरु बेला त हामी भइहाल्थ्यौं हजुर ।

*समिति:* तपाईको विचारमा कसै न कसैलाई थाहा हुन सक्ने सम्भव मान्छेहरु कोही छ कि ? यो मान्छेलाई थाहा हुन सक्छ कुनै ?
*जवाफ:* सर अव मैले त त्यही हो अव यस्तो पार्टी सार्टीमा सरकारहरुको गेट टुगेदरहरु हुन्थ्यो । आफ्नो क्लोज रिलेटिभहरुको ।

*समितिः* कुन ठाउँबाट लेर आउने कसले ल्याउने भन्ने कुराको एउटा सम्भाव्य मान्छेहरु यो व्यक्तिसंग सम्पर्क ……… भनेर ?

*जवाफः* सरकारले जब हामीलाई थाहा नहोस् भनेर भनेपछि हामीले कसैलाई दोष त दिन मिलेन हजुर फलानो स्पेशिफिक त भन्न मिलेन तर मेरो विचारमा चाही के होला भने यो फ्यामिली सर्कलै हुनुपर्छ । दाजुभाई यता उता हजुर किनभने साथीसंग भेट्दाखेरी हामी हुन्थ्यौं । अक्सरै हुन्थ्यौं हजुर । जस्तै साथीभाईहरु संग भेट्दाखेरी तर अब जस्तै सरकारको कोठामा भएपछि चाही, साथी भाइहरु भएपछि चाही छोडिदिन्थ्यौं । छोडिदिन्थ्यौं भनेको कोठा भित्र हामी वाहिर मोटरमा वसीरहन्थ्यौं ।

*समितिः* कोठा भनेको …….. कोठा ?

*जवाफः* हैन हजुर जस्तै पार्टीमा, कतै सवारी भएर जादाँखेरी चाहि ?

*समितिः* यो कुरो देवयानीलाई पनि थाहा थियो वहाँ यस्तो चिजहरु खाइबक्सिन्छ भनेर ?

*जवाफः* थाहा थियो होला, किनभने होला भन्नु पर्‍यो किनभने हाम्रो अगाडि त त्यो खाएको त त्यो भएन । वाहिर सरकार धुम्न जाँदाखेरी । कुनै बेला भनौं न २ जना वसेको बेलामा त हामीहरु त त्यहाँ जानु पनि भएन । कतै धुम्न गएको बेलामा हामी यसो रेष्टुरेन्ट गयो भने हामी अलिक परै हजुर उसमा वस्थ्यौं । त्यही हुनाले उनीहरु २ जना संगै वसेर खाएको चाही मैले देखेको छैन ।

*समितिः* बीचमा यहाँ अचानक फोन आयो नि देवयानीबाट युवराजधिराज चाहि लागेको भन्ने, त्यो कसरी थाहा पायो के गरी त्यो अभिव्यक्त भयो देवयानीबाट यहाँलाई, देवयानी वाहिर, युवराजधिराज भित्र त्यो कसरी थाहा पाएको केही त्यहाँ ?

*जवाफः* छैन हजुर, अव कुरा भयोहोला उनीहरुको, अव उनीहरुको त जहिले पनि मोवाईलबाट जहिले पनि कुरा हुन्थ्यो हजुर, होला भन्छु हजुर, त्यो त अव । अनि मलाई फोन गरेको यस्तो अव हिज लिटील ड्रक, एक चोटी अफिस गइदेउन भनेको

*समितिः* आत्तिएको हो कि ? सवै सामान्य अवस्थामा ?

*जवाफः* हैन एकदम नर्मलमा, छैन त्यस्तो आत्तिएर केही कुरा गरेको छैन ।

**महासेनानी केशवराज महत (मुख्य सुरक्षा अधिकृत, शाही रक्षक सैनिक)**

त्यो बेलामा हामी आन्टी रुममा, अफिसरहरु आन्टी रुममा टि.भी. हेरेर बसिराखेका थियौं । र टि.भी. हेर्दाहेर्दै अचानक सेटमा खबर आयो कि तुरुन्त फाइटिङ्ग सामेल गरेर त्रिभुवन सदनमा पठाउने । त्यसपछि हामी एकदमै अचम्म भयौं । सबैजना जराक जुरुक उठेर हाम्रो एकजना मेजर साहेब हुनुहुन्थ्यो । विष्णु मेजर साहेब । वहाले सेट लिन ………. । वहाले अब फाइटिङ्ग सामेल, फाइटिङ्ग सामेल भनेर सब कराउँदै सबजना दौडेर सामेल गर्न तर्फ लाग्यौं । फाइटिङ्ग टोलीहरु सामेल भयो । यसपछि हामी फाइटिङ्ग सामेल भएको ठाउंमा गयौं । फाइटिङ्ग ड्युटी परेको ………. वहाले फाइटिङ्ग लिएर तुरुन्त दौडेर जाने भनेर वहालाई हामीले पठायौं । त्यसपछि हामी के हो भनेर हामी टेलिफोन कोठामा गयौं । टेलिफोन कोठामा जांदाजादै त्यहां हस्पिटलमा सबै डाक्टरहरु बोलाउने, हस्पिटलमा सबै स्टायण्ड बाई गर्ने र तुरुन्त माथि आउने भन्ने खबर आयो । र हामीहरु त्यो भएर टेलिफोन गर्दै थियौं । त्यसपछि त्यहां भएको हाम्रा मुख्य कमाण्डर ……. साहेब हुनुहुन्थ्यो, टेलिफोन गर्नतिर लाग्यौं अरु मान्छेहरु । टीका जरसाबले टेलिफोन गर्नतिर लाग्नु भयो । र हामीहरु त्यहांबाट निस्केर, म त्यहांबाट निस्केर मैले सिभिल ड्रेस लगाएको थिएं । म तुरुन्त आफ्नो उर्दीको पोशाक लगाउन गएं । त्यसकारण त्यो ………. लगाएं । र त्यो …………. ड्रेस लगाएर म आएं । मैले हतियार झिकेको थिएन । त्यसको पनि हतियार झिकें । रेडियोसेट लिएं । त्यसपछि हामी त्यहांबाट गाडीमा बसेर दौडेर त्रिभुवन सदनतिर लाग्यौं । त्रिभुवन सदनमा म पुगेपछि त्यहां मान्छेहरु एकदम बेहोश भैराखेका थिए । हामी त्यो डिप्लेटबाट भित्र पस्नासाथ उताबाट त्यो क्यासल्टी भएको मान्छेहरु आइराखेको थियो । म ठ्याक्क ढोकामा पुगें । ढोकामा पुग्दाखेरी ढोकाको एउटा ऐना, ढोका मात्र खुलिराखेको थियो । र उताबाट एउटा ……………… भएको, घाइते भएको मान्छेहरु …… .. यताबाट अरु मान्छेहरुले धकेलिराखेको थियो । म त्यहां पुग्नासाथ मैले ……. हेरें । अरु मान्छेहरु मैले कोही पनि देखेन । त्यसपछि मैले नै त्यो घाइते उसलाई बच्चाको जस्तो गरी यसरी आफ्नो हातमासमातेर बाहिर ल्याएं । बाहिर आएर वरिपरि हेरें । वरिपरि अरु मान्छेहरु पनि देखेन । त्यो त्यतिखेरसम्म मलाई थाहा भएन । बाटोमा जांदाखेरी शोभा सरकार होइबक्सिंदो रहेछ । त्यसपछि मैले गाडीमा, हुण्डाई कार थियो, कालो कार, त्यहां हालें । त्यसपछि म भित्र हालेर म पनि भित्रैं बसें र यताउता हेरें र अरु मान्छे नेदेखेको हुनाले म त्यहिं बसें । यसपछि म हस्पिटल गएँ । र बाटोमा मैले दुई ठाउंमा फोन गरें । मेरो मोबाइल थियो । मोबाइलबाट विवेक जरसाहेबलाई फोन गरें । र विवेक जरसाहेबलाई फेला पार्न सकेन । खबर छोडेर तुरुन्त दरबार आउनु भनेर भनें । अर्को, चिरन शम्शेर सचिवज्यूलाई फोन गरें । वहालाई पनि तुरुन्त दरवार आउनु भनें । त्यसपछि म हस्पिटल गएं । हस्पिटल पुगेपछि ……

*समितिः* गाडीमा ? गाडीमा त्यो तपाईले उद्धार गरेको ? विरामीको केही सास फेरेको जस्तो, बोलेजस्तो,

*जवाफः* बोलीबक्सेको थियो ।

*समितिः* केही भनेको थियो । केही थाहा थियो ?

*जवाफः* बोल्दाखेरी मलाई दुख्यो, मलाई ऐया मलाई गाह्रो भयो मलाई गाह्रो भयो भनेर भनिबक्सेको थियो । त्यसपछि जाडो भयो मलाई । साह्रै जाडो भयो मलाई कारको त्यो झ्याल बन्द गर न, त्यो ऐना लगाइदेउन, मलाई जाडो भयो भनिबक्सेपछि अनि हामीले सबै त्यो ऐनाहरु बन्द गऱ्यौं ।

*समितिः* घटना सम्बन्धमा ?

*जवाफः* घटना सम्बन्धमा मैले सोध्दा पनि सोधिन । वहाले खाली मलाई दुख्यो, मलाई गाह्रो भयो, ऐया ऐया भनेर कराई बक्सेको थियो ।

**मेजर विष्णु खड्का (सेनानी, शाही रक्षक सैनिक प्रहरी)**

उक्त दिन मेरो ड्युटी पहिलो स्टायण्ड वाई अधिकृत थियो । उक्त समयमा म टि.भी. रुममा टि.भी. हेरेर बसिरहेको थिएं । सेटमा स्टायण्ड बाई टोली तुरुन्त पठाउने भन्ने खबर आएपछि म बाहिर निस्केर फाइटिङ्ग सामेल भनेर फाइटिङ्गलाई सामेल हुने आदेश दिएं । र मोटरहरु निकाल भनेर मोटर निकाल्ने आदेश दिएं । त्यति नै बेला फोन ड्युटीले हस्पिटल स्टायण्ड बाई गर्ने भन्ने खबर आएछ । चिफ ए.डि.सी.लाई पनि फोन गर्ने भन्ने खबर आएछ भने अनुसार मैले टिका धमला जरसाबलाई फोन कोठाबाट फोन गरें । त्यति नै बेला म सिभिल ड्रेसमा भएको हुनाले दौडेर गएर क्यामो फ्लाउज ड्रेस लगाएं । त्यति बेलासम्ममा हाम्रो फौजहरु दौडेर गैसकेको थियो । र गाडी पनि निक्लिसकेको थियो । अनि म गाडीमा बसेर त्रिभुवन सदन गएं । म पुग्दाखेरी केशब करसाबहरु पहिला नै पुगिबक्सेको थियो । म पुग्दाखेरी करसावले भित्रबाटै विरामी बोकेर, घाइते बोकेर ल्याउंदै गरेको अवस्थामा मैले देखें । म बाहिर नै बसेर म चढेर गएको त्यो हुण्डाई कारमा त्यो विरामी त्यहिं बसेर मोटरमा हाल्न मद्दत गरें । त्यसपछि एकपछि अर्को घाइते भित्रबाट ल्याउन लागेको दृष्य मैले देखेपछि अब यहां मोटर पुग्दैन भन्ने भएपछि त्यो बाहिर बाटोकै ढोकाबाट त्रिभुवन सदन ए.डि.सी. अफिसभित्र प्रवेश गरेर त्यहांको टेलिफोन प्रयोग गरेर शाही एम.टी.मा र शाही रक्षक सैनिक प्रहरीमा दुईतिर फोन गरेर भएभरको ड्राइभरले भए भरको मोटर लिएर आउ भनेर त्यहांबाट फोन गरेर म फेरी त्यहि ढोकाबाट बाहिर त्यहि त्रिभुवन सदन, ढोकाको बाहिरपट्टि सडकमै निस्कें । एकपछि अर्को गाडीहरु आउन थाल्यो । विरामी पनि एवं क्रममा एकपछि अर्को विरामी आउन थाल्यो । एउटा गाडीमा एउटा अथवा दुईटा विरामी चाहिं को भन्ने त्यो बेलामा याद छैन, हाल्नलाई मद्दत गरें मैले । त्यसपछि लादैं गऱ्यो । त्यसपछि म पनि भित्र प्रवेश गरें । विरामी, घाइतेहरुको फ्लो अलि कम हुन थालेपछि म पनि भित्र प्रवेश गरें । भित्र प्रवेश गरेर म अनि भित्र विलियर्ड रुमपट्टिबाट बाहिर निस्कें । त्यतिबेलासम्म विलियर्ड रुममा कोही पनि घाइते बांकी थिएन ।

*समितिः* तपाई युवराजाधिराज सरकार भएको ठाउँमा पुग्नुभएको छैन ?

*जवाफः* पुगेको छु । त्यहांबाट मैले विलियर्ड रुममा मैले कोही पनि घाइते देखिन । अनि यहां बांकी छैन भन्ने, खोज्ने क्रममै म बायांपट्टि निस्कें, विलियर्ड रुमको ढोकापट्टिबाटै पूर्वपट्टि ढोकाबाट म बाहिर निस्कें । त्यहांबाट बगैंचातर्फ जांदै गरें । अनि जांदै गर्दाखेरी बीचमा नै मैले अधिराजकुमार नीराजन सरकारको घाइते अवस्थामा वहालाई देखें । अनि मसंगै यो फौज, फाइटिङ्गको फौजहरु पनि पछि पछि नै थियो । अनि उनीहरुलाई मैले त्यो लग, छिटो लग भन्ने आदेश गरें । त्यसपछि म युवराजाधिराज सरकारको खोपीतर्फ लागें । लाग्दाखेरी त्यो सानो पोखरी जस्तोको माथि, एउटा सानो त्यो पुल जस्तोमा, म जांदा जांदै म तर्फ शिर, भनेपछि दक्षिणतर्फ शिर पारेर त्यहि पुलमा ढलिबक्सेको अवस्थामा मैले फेला पारेको हुं । त्यसपछि तुरुन्त नै मैले ती फौज, बांकी फौजको मद्दतले वहालाई पनि बाहिर रेस्क्यू गरेर लगें । त्यतिबेला मैले बाहिर वहालाई बोकेर ल्याउंदा गजेन्द्र बोहरा मेजर साहेब युवराजाधिराज सरकारकै मोटर स्टार्ट गरिबक्सेको रहेछ । पारस सरकार अगाडी सिटमा राज भयो । अनि युवराजाधिराज सरकारलाई पछाडी सिटमा राखें । राख्दाखेरी अनि पछाडी फेरी त्यो फौजले नीराजन सरकारलाई पनि ल्याइसक्यो । भनेपछि दुईजना सरकारहरुलाई त्यहि युवराजाधिराज सरकारको त्यो ठूलो जीपमा राखेर अनि ढोका बन्द गरें । त्यसपछि मैले आफू चढ्ने कुनै पनि गाडी खोज्न थालें । यसो खोज्न थालेको अनि त्यो पुरानो, हरियो रंगको टोयोटा ल्याण्ड क्रुजर एउटा गाडी थियो, त्यसमा म बसेर त्यो गाडीको पछि पछि हस्पिटलसम्म पुगें ।

*समितिः* त्यो दीपेन्द्र सरकार लडीराखेको ठाउंमा पुग्दा, त्यो पुलमा पुग्दा कस्तो अवस्थामा थियो त्यो शरीर ?

*जवाफः* वहाँ उत्तानो परेको अवस्थामा । उत्तानो परेको, त्यसपछि अलिकति घुरेको जस्तो आवाज, हामी निद्रामा घुर्छौं । त्यस्तो किसिमको आवाज मैले सुनें ।

*समिति* पोशाक ?

*जवाफः* पोशाक सैनिक, यस्तो क्याम फ्लाज, बूट,

*समिति* हातहतियार पनि थियो हातमा ? शरीरमा ?

*जवाफः* मैले त्यो बेलामा भ्वाट्ट हेर्दाखेरी मैले त्यो बेलामा त्यो सिचुएसनले गर्दाखेरी भ्वाट्टै केहि पनि देखीन । पछि बोकीसकेपछि त्यो बोक्न मलाई मद्दत गर्ने फौजको एकजना केटाले यो हतियार त किन हस्पिटल लानु भनेर यसरी हुत्याएको मलाई याद छ ।

*समिति* त्यो व्यक्ति को थियो, सम्भना छ ?

*जवाफः* त्यो मलाई मान्छे सम्भना छैन । किनभने त्यो सिचुएसन एकदमै आत्तिएको सिचुएसन । मैले उठाउनतिर लागें । मेरो एउटा हातमा टर्च लाइट, यसरी टर्च लाइट सहित मैले यसरी तलबाट उठाएं । (हाउभाउ सहित देखाउँदै)

*समिति* भनेपछि कतिवटा हतियार फालेजस्तो लाग्यो ?

*जवाफः* मलाई एउटा मात्र हतियार फालेको जस्तो लाग्छ ।

*समिति* अनि त्यसपछि तपाई......

*जवाफः* त्यसपछि म अर्को गाडीमा बसेर हस्पिटल गएं ।

*समिति* के हतियार, कस्तो हतियार ?

*जवाफः* त्यस्तो याद भएन ।

*समितिः* धन्यवाद ।

**सहसेनानी भमान सिंह थापा (सह सेनानी):-**

म त्यो दिन सेकेण्ड स्टायण्ड वाई थिएं । त्यस समयमा टि.भी. रुममा टि.भी. हेरेर बसिराखेको थिएं । अचानक ड्युटी जानु भन्ने आदेश आउने वित्तिकै म बाहिर निस्केर तुरुन्तै हतियार भिक्न लागें र अनि मेरो टोलीलाई पनि सामेल गरें । सामेल गर्ने वित्तिकै मैले निशान गाडी लिएर म तुरुन्तै त्रिभुवन सदन पुगें, मेरो टोली सहित । त्यहां पुग्दाखेरी म पुग्ने वित्तिकै गाडी ओर्लिनु अनि त्यहांबाट कुमार गोरख शम्शेर दुईजनाले साइड साइडमा समातेर बाहिर ल्याएको देखें । ल्याउने वित्तिकै मेरै मोटरमा अगाडि सिटमा राखेर ल, हस्पिटल लग भन्ने वित्तिकै म भित्रपट्टि लागें । भित्र लगेर विच बाटो आइपुग्दाखेरी मैले त्यहां केतकी चेष्टरलाई देखें । गर्दाखेरी, उता गाडी पनि त्यहाँ आइसकेको थियो । वहाँलाई लिएपछि अघिल्लो सिटमा राखेर हस्पिटल पठाई दिएं, बाहिरैबाट । त्यसपछि म भित्रपट्टि विलियर्ड रुममा गएं । विलियर्ड रुममा जांदाखेरी मैले उतापट्टि शारदा सरकार र कुमार खड्ग विक्रम लडीराखेको, अनि जयन्ती सरकार र शोभा सरकार लडीराखेको देखें । त्यसपछि शुरुमा गएर अनि यसो पल्स छामेको त्यति देखेन । त्यसपछि बाहिर त लानु पर्‍यो भनेर अरु सबैलाई बोलाएर अनि मैले जयन्ती सरकारलाई उचालें । र दुई, तीन जना पछाडीको सहयोगले बाहिर निकालेर मोटरमा हालें । त्यसको साथसाथै उताबाट पनि शान्ति सरकारलाई बोकेर बाहिर ल्याए । त्यसपछि शान्ति सरकारलाई पछाडिपट्टिको मोटरमा र जयन्ती सरकारलाई अगाडिको मोटरमा राखेर मैले हस्पिटल पुर्‍याएं । हस्पिटल लगें । हस्पिटल लगिसकेपछि ......

*समितिः* तपाईले चढेको गाडीमा को, कुन विरामी राख्नु भएको थियो ?

*जवाफः* अगाडिपट्टि जयन्ती सरकारलाई, पछाडिपट्टि शान्ति सरकारलाई ।

*समिति* उनीहरु केही कराएको, बोलेको ?

*जवाफः* छैन, केही छैन । हस्पिटल पुगें म । हस्पिटल गैसकेपछि तुरुन्तै मैले त्यहां हस्पिटल हाम्रो टोली तयारी भएर बसेको थियो । स्टेचरमा हाल्ने वित्तिकै म फेरी तुरुन्तै त्यहि गाडी लिएर फर्कें । पुनः त्रिभुवन सदनमा आएं । त्रिभुवन सदन आइसकेपछि आउंदाखेरी विरामी सबै लगिसकेको थियो हस्पिटल । पुनः कोही बांकी छ कि भन्ने सेटमा खबर आए अनुसार तुरुन्त सबै भित्रको एरिया सर्च गरें, दुई, चार जना ग्रुप माथि लगेर । माथि युवराज सरकारको खोपीसम्म पुग्यौं । कोही पनि नदेखेपछि

*समिति* खोपी खुल्ला थियो ?

*जवाफः* खोपी खुल्ला थियो ।

*समिति* कस्तो अवस्थामा थियो खोपी ?

*जवाफः* नर्मल हालतमा थियो । केही पनि यताउता सामान छरिएको केही थिएन ।

*समिति* तपाई खोपीमा जांदाखेरी के कस्तो बाटो भएर खोपीमा पुगिंदो रहेछ त ?

*जवाफः* हजूर, खोपीमा जांदाखेरी पहिला शुरुमा विलियर्ड हलतिर छिरें । विलियर्ड हलको पूर्वपट्टिको गेटबाट बाहिर निस्केपछि अर्को बगैंचा आउंछ । बगैंचाको बाटोबाट बंगला पुगेपछि एउटा बाटो पूर्वपट्टि लाग्छ । एउटा उत्तरपट्टि लाग्ने । उत्तरपट्टि लाग्ने बाटोको सिढीं आउंछ जुन एउटा त्यो घर आउंछ । घर आउने वित्तिकै एउटा यतापट्टि जाने अर्को गेट छ । त्यो बन्द छ । अनि अर्को, अलिकति पश्चिम लागेपछि माथि भऱ्याङ्ग चढ्ने बाटो छ ।

*समिति* बत्ती बलिराखेको थियो कि अंध्यारो थियो ?

*जवाफः* पूरै बलेको छ ।

*समिति* भऱ्याङ्गमा केही देख्नु भयो कि ?

*जवाफः* भऱ्याङ्गमा रगत छ । त्यसपछि ब्रेन छ आधा विचमा । र त्यो भन्दा माथि ५, ६ वटा खोका छ ।

*समिति* अनि तपाई त्यो खोपी खाली देखेपछि फेरी फर्कनु भयो ?

*जवाफः* भित्र कोही छ कि भनेर भित्र सबै खुल्ने ढोका जति सबै हेरें मैले । ट्वाइलेट समेत सबैको भित्र हेरीसकेपछि कोही नदेखेपछि म तल फर्कें ।

*समिति* ट्वाइलेटमा कस्तो, केही दृष्यहरु ?

*जवाफः* केही छैन ।

*समिति* भोमिट भएको ?

*जवाफः* छैन, छैन । भोमिट हेर्नुभन्दा पनि म कोही माथि छ कि भनेर खोजीमा लागें ।

**सहसेनानी टेकविक्रम मल्ल (स.से., ड्युटी अधिकृत, शाही सैनिक)**

जब त्यो सामेल भन्नासाथ फाइटिङ्ग भन्नासाथ म यहि ड्रेसमा थिएं, आफ्नो ड्रेसमा । टी.भी. कोठाबाट बाहिर निस्कें । बाहिर निस्कनासाथ मैले गाडी ............. त्यतिबेला । अनि मेरो मान्छे पनि दौडिसकेको थियो गाडीमा । गाडी आयो । गाडी आएपछि म ड्राइभरलाई लिएर गाडी लिएर स्वात्तै म जुन घटना भएको ठाउंमा म त्यहां पुगें । पुग्दाखेरी त्यतिबेला गेटमा पारस सरकार र अनन्त मेजर भन्ने वहा हुनु हुन्थ्यो । अनि त्यहांबाट हामी गएर त्यहां जम्मा भयौं । जम्मा भएपछि म त्यहां एकछिन बसें । अनि त्यहांबाट तुरुन्तै मलाई फेरी वाकीटाकीमा खबर आयो । तपाई ए.डि.सी. अफिसमा ड्युटी अफिसर, अन्नपूर्ण अफिसमा बोलाईयो । अनि त्यहांबाट म र मेरो एकजना दौडेर अन्नपूर्ण अफिसमा गएं । गएपछि अनि त्यहांबाट खबर गर्ने काम भयो । त्यहां भित्र गोली पड्केको पनि सुनेको थिएन मैले । त्यहां के घटना भएको छ भन्ने पनि थाहा थिएन । अनि त्यहांबाट सबैलाई खबर गर्ने काम भयो । त्यसपछि त्यहांको ए.डि.सी. साहेबहरु सबले हख ड्युटीमा आउनु भयो । अनि वहाहरु आएपछि वहाहरुले टेलिफोन पनि गर्नु भयो । त्यहांबाट म चाहिं त्यहिं बसें । अनि प्रफुल्ल भन्ने क्याप्टेन साहेब आउनु भयो । आएपछि उनीहरुले हस्पिटल पुऱ्याएर आएको रहेछ । आएपछि त्यहां उनीहरुले हामीलाई तपाईहरु बाहिर जानुस् । हाम्रो केही कुरा छ भनेर वहाहरुले केही कुराहरु गर्न लाग्नु भयो । अनि हामीलाई अफिस गए हुन्छ भनेर म त्यहांबाट अफिस आएं ।

*समिति* त्यो उद्धार कार्यतिर लागेन ?

*जवाफः* लागेन ।

*समिति* तपाईको प्रवेश गर्ने गेटसम्म त्रिभुवन सदनको गेट कि भित्र पनि जानु भयो ?

*जवाफ:* म गेटसम्म मात्रै गएको छु । त्यहाँ जांदाखेरी पारस सरकार र अनन्त मेजर भन्ने वहाहरु दुईजना हुनुहुन्थ्यो । त्यहांबाट मलाई त्रिभुवन सदनको .......

*समिति* त्रिभुवन सदनको मेन गेटबाट जानै पाउनु भएन ?

*जवाफ:* मेन गेटबाट गइन । मलाई त्यहां के भएछ भन्ने पनि थाहा भएन । म पुग्दाखेरी त्यो एउटा कालो गाडी स्वात्त गएको थियो । त्यसमा महाराजाधिराज सरकार हुनुहुन्थ्यो । त्यो बेला मलाई थाहा भएन । अनि मैले पछि वाकीटाकीबाट सोधें मेरो गेटमा, को मान्छे गयो भन्दाखेरी गेटले के भन्यो एउटा चाहिं फ्रेस क्याप लगाएको मान्छे छ । भित्र दुई, तीन जना छ, को हो चिन्न सकेन भनेर जवाफ दियो । त्यहांबाट म अन्नपूर्ण अफिस भन्नासाथ म अन्नपूर्ण अफिसतिर दौडेर गइहालें । त्यहिंबाट अनि काम संचालन भयो । अरु कुरा मलाई थाहा भएन ।

**लक्ष्मण खत्री (सुबेदार, शाही रक्षक सैनिक प्रहरी)**

त्यहि दिन मेरो ड्युटी स्टायण्ड वाई पदीक थियो । सन्तोष पन्तको फिल्म आइरहेको बेलामा फाइटिङ्ग केटाहरु जम्मै फिल्म हेरिराखेको थियो । सबैले लुगा खोलेको थिएन । (ड्रेस देखाउँदै) सबै यस्तो ड्रेसमा थियो । अनि म चाहिं अलिकति बोर लागेर उतापट्टि लाइनमा गएं । लाइनमा जांदाखेरी त्यहां ड्राइभर र हाम्रो हिष्णु दाई दुईजना अरु ग्रुप गफ गरेर बसिराखेको थियो । म पनि त्यहिं थिएं । फाइटिङ्गको एकजना केटाले ल, स्टायण्ड डु भनेर आवाज आयो । स्टायण्ड टु भन्ने वित्तिकै मैले ड्राइभरहरुलाई र मेरो ग्रुपलाई स्टायण्ड टु र अगाडि मोटर ल्याउनुस्, अगाडि सामेल भनेर भनें । त्यहांबाट फाइटिङ्ग सामेल हुँदै थियो । फाइटिङ्ग सामेल हुंदाखेरी मैले प्यारोलको आवश्यकता पर्दछ, प्यारोल च्याट्न लगाउनु भनेर ड्युटी अफिसरलाई भेट्नु भनेर एउटा फाइटिङ्ग फर्स्ट कमाण्डरलाई भनें । फर्स्ट कमाण्डरले त्यो भन्ने आवाज मेजर साबले सुन्नु भयो । मेजर साहेबले तुरुन्त फाइटिङ्ग प्यारोल च्याट्न पर्दैन, तुरुन्त त्रिभुवन सदन पठाइदे भन्ने वित्तिकै फाइटिङ्ग दौडेर तितरवितर भएर अगाडि को पुग्ने गरेर त्यो तरीकाले फाइटिङ्ग दौडे, त्रिभुवन सदन । त्यसपछि म फोन कोठामा गएं । फोन कोठामा एे.डि.सी. .......... वहाले सेटमा के आइरहेको भने लौ, मिलिटरी हस्पिटलमा फोन गर्नु । त्यहां भएको डाक्टरहरु जम्मै जम्मा गर्नु भन्ने वायरलेसबाट आइराखेको हुनाले मैले मिलिटरी हस्पिटलको फोन नम्बर हेरें । फोन नम्बर हेर्ने वित्तिकै फोन गरें । फोन गर्ने वित्तिकै हल्लो भन्यो । हल्लो भन्ने वित्तिकै कर साहेब आइबक्सनु भयो । करसाहेबले म गर्छु, म खबर गर्छु त्यहां भन्नु भयो । मैले करसाहेबलाई फोन दिएं । त्यहांपछि फेरी विवेक जरसाहेब र टीका जरसाहेबलाई पनि घरमा फोन गरेर हस्पिटलमा नै बोलाउनु भनेर फोन आयो । अनि मैले फोन पालेलाई ल त्यो फोन गर्नु भनें । अगाडि मोटर आइसकेको थियो । मैले आफ्नो हतियार झिकें । वाकीटाकी झिकें । मोटरमा चढ्नलाई तयार भएं । अनि त्यसपछि करसाहेबहरु स्नु बाई टोली हाम्रो हामी तुरुन्तै त्यो घटनास्थल, त्रिभुवन सदनमा पुग्यौं । त्यहां पुग्नेवित्तिकै हाम्रो दुईजना फाइटिङ्ग टोली त्यहां पुगिसकेको थियो । केही पुग्न पुग्न लागेको थियो । केही अगाडि दौडन सक्ने थिए, पुगिसकेको थियो । उनीहरुले गोरख शम्शेरलाई दुईतिर यस्तो दुईजनाले यसरी समोतर यहां रातै भएको ( गोरखलाई रेस्क्यू गरेको हालभाव देखाउँदै) .....

*समिति* कसको ?

*जवाफ:* गोरख शम्शेर । रातै भएको यसरी समातेर भित्रबाट ल्याउँदा पो थाहा पाएं । अनि त्यहांपछि मलाई थाहा भयो कि त्यहांपछि यो घटना यस्तो भएछ भन्ने अलिकति मेरो मनमा त्यो घटना पहिला केही पनि थाहा थिएन । मूल ढोकामा त्यस्तो भएपछि गोरख शम्शेरलाई एउटा मोटरमा राखियो । अनि त्यहांबाट भित्र गएर अरु अरु ल्याउने क्रममा श्रुति सरकार ल्याउने क्रममा त्यो ढोका आधी शीशाले फुटेको आधी माथि खुल्ला नै भएको ढोका थियो । त्यसबाट ल्याउंदाखेरी अप्ठ्यारो भएर फाइटिङ्ग केटाहरुलाई अनि त्यो ढोका भित्रबाटै छेस्कन निकाल भन्ने मैले भनें । अनि कुनचाहिं एे.डि.सी. साहेबले त्यो ढोका फोड्दे भन्यो । अनि फाइटिङ्ग केटाहरुले बुटले हानेर शीशाको ढोका फोड्यो । ..... पुगेको छ । त्यसपछि हामीले भित्रबाट त्यो फाइटिङ्ग केटाहरुले आठ/आठ जना एउटा मान्छेमा, ६/६ जना समातेर अनि बाहिर लोड गर्ने शुरु गऱ्यौं । अनि मोटर मिलाउने, मोटरमा राख्ने र अनि एकजना फाइटिङ्गको हात हतियार सहितको ड्युटी पछाडी राख्ने मोटरमा, एउटा मोटरमा अथवा कुनै मोटरमा दुई/दुई जना यसै गरेर त्यो पठाउने काम शुरु भयो । त्यसपछि युवराज सरकार ढलिबक्सेको ठाउंमा पुग्यौं । युवराजाधिराज सरकार चुस्त ड्रेसमा होइबक्सिन्थ्यो । अनि युवराज सरकारलाई एउटा ग्रुपले बाहिर निकाल्न थाल्यो । अनि हाम्रो अर्को ग्रुपले हामीले नीराजन सरकारलाई निकाल्यौं । मोटरमा लोड गऱ्यौं । त्यसपछि अरु अरु

*समिति* तपाई आफैंले उठाउनु भयो ?

*जवाफ:* म आफूले पनि उठाएं ।

*समिति* कसको ?

*जवाफ:* अनि नीराजन सरकारको टाउको यस्सो ...... भैसकेको थियो । केटाहरुले उठाइराखेको थियो । मैले टाउकोमाथि त्यो टाउको नलुल्याउनु भनेर माथि गरेर मोटरमा राखें । मोटरमा राख्दाखेरी पारस सरकारले मेरो भाइ भनेर अंगालो

हाल्नुभयो, रुनुभयो । अनि छिटो लोड गर म त्यो मोटरमा चढ्छु । म त्यहि मोटरमा जान्छु भनेर पारस सरकार त्यहि मोटरमा गैसक्नु भयो । अनि त्यसपछि त्यहां अरु कोही पनि अरु साहेबहरु, त्यसै गरेर सब अरु अरु मोटरमा गैसक्नु भएको थियो । अरु अरु कोमल सरकार, अरु अरु त्यस उसमा । शोभा सरकार, शान्ति सिंह सरकारहरु तिनीहरुको उसमा गैसक्नु भएको थियो । त्यहांपछि हामीले बडामहारानी सरकारलाई निकाल्यौं । बडामहारानी सरकारलाई निकाल्दाखेरी

*समिति:* होइन, कहाँबाट निकाल्नु भयो ?

*जवाफ:* बडामहारानी सरकारलाई त्यो भऱ्याङ्गबाट निकाल्यौं ।

*समिति* कुन भऱ्याङ्ग ?

*जवाफ:* त्यहि माथि चढ्ने भऱ्याङ्गबाट ।

*समिति* माथि चढ्ने भनेको कहाँ ?

*जवाफ:* उता युवराज सरकारको खोपीमा चढ्ने भऱ्याङ्गमा । त्यहांबाट निकाल्यौं ।

*समिति* त्यहांबाट निकाल्दाखेरी कस्तो अवस्थामा थियो ?

*जवाफ:* बडामहारानी सरकार यस्तो भएको, यस्तो लडेको (हाउभाउ देखाउँदै) यस्तो पछाडि ।

*समिति* कस्तो पोशाक थियो ?

*जवाफ:* सारी लगाइबक्सेको थियो ।

*समिति* कस्तो रङ्गको ?

*जवाफ:* रातो, मोजा चाहिं रातो थियो । अनि त्यसपछि ल्याउंदाखेरी अलि चिप्लो सारीले समात्न अलि अप्ठेरो भयो । अनि अलिकति उउउं... गर्ने आवाज पनि आयो । आवाज आउंदाखेरी हाम्रो केटाहरुले उचाल्न नसकेर मैले (हाउभाउ देखाउँदै) यो कांध तल छिरेर कांध हालेर त्यो तरीकाले मोटरमा उतापट्टिबाट ढोका खोलेर त्यसरी लोड गऱ्यौं । त्यसपछि त्यहां हेर्दाखेरी दायां बायां अरु छरिएको मान्छेहरु कोही छ भनेर हेर्दाखेरी त्यहां शारदा सरकार र शारदा सरकारको बुढा दुईटै एकै ठाउंमा । त्यो पछाडिपट्टिको अलिकति अगाडि आएर खाइराखेको ठाउंबाट अलिकति अगाडी आएर बुलेट ठाउंमा उत्तरपट्टि बुढा यसरी लडीराखेको र बुढीले यसरी अंगालो हालीराखेको (हावभाव सहित देखाउँदै) । त्यस्तो अवस्थामा फेला भयो । अनि त्यहां शारदा सरकारलाई उठाएर ल्याएर मोटरमा अगाडि हाल्यौं । अनि शारदा सरकारको बुढालाई अरु केटाहरुले बोकेछ । बोकेपछि अनि तिनीहरु त्यो बोक्न थाले । मैले अन्त अन्त हेरें । अन्त खोपीसम्म हेरें मैले । त्यहां पनि मैले खोपीभित्र गएन । बाहिरसम्म हेरें ।

*समिति* बडामहारानीको शरीर लिएर आएर मोटरमा राखेपछि फेरि जानु भयो ?

*जवाफ:* त्यो अन्तिमसम्म मैले प्रत्येक मोटरमा एकजना फाइटिङ्ग हतियार सहित राख्ने काम र मोटरसम्म ल्याउने त्यो काम गरें । हामीलाई ढोकामा हतियार सहित भिरेको केटाहरु भएको हुनाले बोक्न अलि हतियार सहित र त्यो बोक्न अप्ठ्यारो भएको हुनाले मैले त्यो हतियारहरु जम्मै जम्मा गरेर एक ठाउंमा ड्युटी राख्न लगाएँ ।

*समिति* आफ्नो सहयोगीहरुको हतियार ?

*जवाफ:* तिनीहरुको हतियार एक ठाउँमा जम्मा गर्न लगाएँ । एउटा ड्युटी राखें र अनि त्यो उद्धारको काम शुरु गरें ।

*समिति* त्यसो भए तपाई खोपीसम्म पुग्नु भयो ?

*जवाफ:* खोपीसम्म पुगें । अनि कोही पनि नभएर अन्तमा शारदा सरकार र शारदा सरकारको बुढालाई उठाएर म त्यहि मोटरमा गएर हस्पिटलमा ......

*समिति* खोपीमा जाँदा ढोका बन्द थियो कि खुल्लानै थियो ?

*जवाफ:* खुल्ला थियो ।

*समिति* खुल्ला थियो ? अनि तपाईले हेर्नु भयो ?

*जवाफः* खोपी मैले भित्र गएर हेरिन, बाहिरबाट हेरें । ओछ्यान सलक्कै थियो ।

*समिति* बिग्रेको थिएन ?

*जवाफः* केही पनि बिग्रेको थिएन । तल गिद्दि थियो ।

*समिति* कहाँ ?

*जवाफः* टाउकोको गिद्दि, सिंढीमा । टाउकोको गिद्दि थियो ।

*समिति* खोपीबाट फर्कंदाखेरी ?

*जवाफः* होइन, जांदाखेरी नै देखेको । अनि ब्लड थियो, दुई वटा, यति यति लामो । अनि खोकाहरु थियो । अनि अन्तमा उठाएर लग्यौं । हस्पिटल पुऱ्यायौं । त्यहां फाइटिङ्गको आठ जना बांकी रह्यो । आठजना बांकी रहेर मैले वायरलेसबाट यहां एउटा ड्युटी चाहियो भनेर आफ्नो अफिसमा खबर गरें । अनि एउटा पदीक त्यहां ड्युटी बस्यो ।

*समिति* श्रुति सरकारको अवस्था कहां देख्नु भएको ?

*जवाफः* श्रुति सरकारको अवस्था मैले त्यो उठाएको थिएन । तिनीहरु त्यो बेलामा फर्स्ट कमाण्डर गैसकेको थियो, फाइटिङ्ग । जो अहिले आउने दुई, तीन जना थियो, उनीहरुले उठाएको हो । त्यहांबाट श्रुति सरकार ल्याउनुभन्दा पहिला गोरख शम्शेरलाई दुईजनाले यसो समातेर ल्याउनु भयो । ल्याएको थियो हाम्रै फाइटिङ्ग केटाहरुले ।

*समिति* नचलेको गोली पनि थियो ?

*जवाफः* नचलेको पनि दुइ वटा छ । कपालको अलिकति वेहाल छ कपालको ।

*समितिः* त्यही सिंडिमा ?

*जवाफः* अँ सिंडिमा ।

**हुद्दा ध्रुवराज आचार्य**

मेरो नाम हवल्दार ध्रुव आचार्य तर म त्यो दिन फाइटिङ्ग कमाण्डर । त्यो दिनमा फाइटिङ्ग कमाण्डर हल्दार थिएँ । त्यहां सर्वप्रथम ड्युटि अधिकृतको आदेश अनुसार मैले तुरुन्त फौजलाई सामेल गरें गरेर आदेश अनुसार जतिसक्यो छिटो तुरुन्त हातहतियार सहित त्रिभुवन सदनमा पुग्ने भन्ने आदेश भए अनुसार हामी त्यहाँबाट दौडियौं । दौडिएर त्रिभूवन सदन पुग्यौं । त्यहीं दुई ढाई मिनेटमा त्यहाँ पुगे पछि पुग्ना साथ त्यहाँ पारस सरकार र अनन्त मेजर साहेब बाहिर होइसिन्थ्यो । त्यहाँबाट हामी त्यहाँ पुग्ना साथ लौन तुरुन्त तिमीले भित्र गएर उद्धार गर्ने भन्ने आदेश भए अनुसार त्यहाँ भित्र हामी सुरुमा पस्यौं ।

सुरुमा म सहित हाम्रो सबै जना पसेको थियौं । पस्दाखेरीमा सुरुमा त्यो ढोका चाहि झरम्म फुटेको थियो । पुरै शिशा झरेको थियो । लगभग आधि जस्तो शिशा झरेको थियो । विस्तार छिर्न सक्ने अवस्थामा थियो । हामी विस्तारै छिऱ्यौं । त्यहाँबाट छिरे पछि पहिलो दृष्य हामीले त्यो कोठाभरी अब त्यो यत्रतत्र छरिएको, कोही लडेका, कोही ऐया बाबा भनेका, कोही उठेका, कोही चिच्याएको अवस्थामा हामीले त्यो दृष्य देख्यौं । देखेपछि हामीले सुरुमा पस्ने वित्तिकै त्यो एउटा स्नुकरको बोर्ड किसिमको पुल थियो । स्नुकर खेल्ने बोर्ड त्यहाँ श्रुति सरकार ढोकै नेर यस्तो टेवुलको मुनि लडिराखेको थियो ।

त्यहाँ अरुहरु अब सबै याद भएन छ र प्राय जसो लडेका थिए । अनि गोली नलागेको भनेको पुजा सरकारहरु, प्रेरणा सरकार र अरुहरु चाहिने अवस्था "ओ माइ गड" भनेर चिच्याइरहेको अवस्थामा, रोइरहेको अवस्थामा होइसिन्थ्यो । अनि हामीले अब त्यहाँ अनन्त मेजर साहेबको आदेश जस्तो लाग्छ सर । त्यो अनुसार हामीले तुरुन्त पहिला जो जो घाइते छ त्यो त्योलाई तुरुन्त बाहिर निकाल्नु भन्ने आदेश भए अनुसार हामीले पहिला जो घाइते अवस्थामा जस्ता भएका मान्छेलाई हामीले तुरुन्त गर्ने क्रममा मैले केतकु चेष्टरलाई गएर समाप्त पुगें । पुगे पछि अब हामीले म सहित तीन चार गएका थियौं । हामीले निकालिदियौं बाहिरतिर । निकालेर त्यहां बाहिर राखेर अनि गाडि आउँदै थियो । अनि गाडिमा पछि बाहिर मेजर साहेबले चढाएर पठाउनु भयो ।

अनि फेरी भित्र छिरिएछ । भित्र सरदा खेरीमा क्रमशः त्यो आसारिरहेका थिए । अनि त्यस पछि दोश्रो पटक म त्यो बाहिर पहिलोलाई पुराएर पर्किदाखेरीमा प्रय सबै एक पछि अर्को निकालरहेको थिए । त्यहाँ त्यो बेलामा युवराज सरकारको पनि बाहिर निकालिसकेको अवस्थामा मैले गाडिमा हाल्ने बेलामा त्यहाँ भेटेको भेट्दाखेरी त्यो चुस्ता पोसाक मात्रै देखिन्छ । त्यसको पछि निराजन सरकारको पनि ल्याइसकेको थियो । त्यहाँबाट त्यो पछि त्यहाँबाट म एकै चोटी दौडेर जाँदाखेरी बडामहारानी सरकार भएको त्यो जुन ग्रेट हलबाट उता गार्डेनबाट उता घुमेर पल्लो घरमा सर्च गर्दै दौडिदै जाँदा कहाँ कहाँ को को छन् भनेर खोज्दै जाने क्रममा त्यहाँ बाट भऱ्याङ्गमा म सुद्ध (सहित) चारपाँच जना एकै साथ बडामहारानी सरकार देखें । देख्दाखेरीमा भऱ्याङ्गको वीचमा यस्तो गएर यस्तो उक्लने भऱ्याङ्ग छ । भऱ्याङ्गको वीचमा जोडिएको अवस्थामा हामीले त्यहाँ भेट्यौं । भेट्टाउन साथ अनि तुरुन्त हामीले पाँच सात जना भएर को को थियौं बुझिएन । समातेर हामी अनि झाऱ्यौं ।

*समिति* पोषाकको याद छ ?

*जवाफः* पोसाक साडि रातो छ सर । चिप्लो रातो सारी छ । अरु त्यति नै हो । मलाई रातो मोजा लगाएको जस्तो लाग्छ । त्यो टाउको हामीले त्यहाँ हेर्दा गिदि ब्रेन त्यहाँ यति थुप्रिएको छ । रगत बगेर उतापट्टि झरेको छ । त्यो अवस्थामा हामीले तुरुन्त ल्याएर जुन सरकारहरु रहेको एक्सकर्ट गर्ने गाडिमा हालेर त्यहाँ चाहिने अनन्त मेजर साहेब, लप्टन साहेब भएर लानु भयो । अनि त्यो भन्दा पछाडिको बास्तुमा आएर अनि बाँकी त्यहाँ जस जसलाई हामीलाई मृत्त अवस्था भैसकेको जस्तो लागेको थियो । अचेत अवस्थामा होइसिन्थ्यो । शारदा सरकार र खडगविक्रम शाह लाष्टमा बाँकी होइसिन्थ्यो । खड्क विक्रम शाह घोप्टे अवस्थामा होइसिन्थ्यो ग्रेट हल भित्र उत्तर पट्टि । त्यो अवस्थामा होइसिन्थ्यो । वहाँ माथि शारदा सरकार यसरी नै अँगालो हालेर अचेत अवस्थामा होइसिन्थ्यो । अनि लाष्टमा पनि मैले शारदा सरकारलाई म सहित पाँच सातले उचालेर बाहिर ल्यायौं ।

*समिति* अनि महाराजा सरकारको चाहिने के अवस्था थियो ?

*जवाफः* त्यो होस थिएन सर । त्यस्तो भएको जस्तो लागेन ।

*समिति* दुवै जनाको ?

*जवाफः* दुवै जनाको थिएन । त्यति गर्दागर्दै अनि हामीले गाडिमा हाल्यौं । त्यो पछाडि ठ्याक्क फेरी अर्को टोलीले फेरी खड्गविक्रम शाहलाई पनि त्यही हाल्यौं । एउटै गाडिमा हालेर हामीले पठाएको ।

**अमल्दार देवीराम ज्ञवाली**

म अमल्दार देवीराम ज्ञवाली, सर म अफिसर साहेबहरुले गाडि निकाल्ने भन्ने तुरुन्त आदेश हुनासाथ म गाडि निकालेर तुरुन्त म त्रिभूवन सदन गएको थिएँ । त्रिभूवन सदन जाँदाखेरी भित्रबाट विमारीलाई निकाल्नु भयो । विमारीलाई हालेर म हस्पिटल गएको छु ।

**अमल्दार विदुरकुमार बस्नेत**

त्यो दिन फाइटिङ्गको म सेकेण्ड कमाण्डर । अनि फाइटिङ्ग सामेल भनेपछि ड्यूटिवाला साहेबले भनिसके पछि एसेमेल गरें । अनि सामेल गरिसकेपछि हल्दार साहेबले भनेर तुरुन्त त्रिभूवन सदन जाने भनिसके पछि हामी उहाँ गयौं । वहाँ त्रिभूवन सदन पुगिसकेपछि अनन्त मेजर साहेब र पारस सरकार होइसिन्थ्यो । अनि भित्र मूभ भनिसकेपछि हामी ढोकाबाट पस्यौं । विरामीहरु बाहिर गाडिमा ल्यायौं । मैले समेत केतुकी चेष्टरलाई लिएर आयौं । ऐया ऐया भनिबक्सेको थियो । मैले यसरी हातमा समातेर उचालेको ऐया ऐया भनेपछि बोकेर बाहिर ल्याएँ । अरु केही मलाई भन्नुभएन । म फेरी भित्र घटनास्थलतिर भित्रै फर्किएँ । फेरी भित्र फर्केर आएपछि पारस सरकारले मर्जि भएको थियो ।सास भएको बोक्ने भनेको थियो । यता आए पछि म निराजन सरकारलाई भेटें । अनि निराजन सरकारलाई लिएर बाहिर फेरी गाडिमा हाँल्यौं । यता गार्डेन बगैंचापट्टि त्यहाँबाट निराजन सरकारलाई हालेर फेरी भित्र आयौं र त्यहाँबाट फेरी माथितिर जाँदाखेरी बडामहारानी सरकारलाई भऱ्याङ्गमा भेट्यौं । त्यो बेला युवराजाधिराज त्यहाँ होइसिदैन थियो । बडामहारानी सरकारलाई लिएर आए पछि अनि हतियारले अप्ठ्यारो हुने भयो र मैले सबैको हतियार लिएर एक ठाउँमा राखेर म डिउटी गएँ ।

**प्यूठ लक्ष्मण गौतम (शाहीरक्षक सैनिक प्रहरी)**

त्यतिखेर अफसर साहेबले गाडि निकाल भन्ने वित्तिकै मैले गाडि निकाले । गाडि निकालेर त्रिभूवन सदन जाने भन्ने वित्तिकै त्रिभूवन सदन गएँ । गोरख शम्शेरलाई गाडिमा अरु फाइटिङ्ग टोलीहरुले हाले । त्यही अनुसार गोरख शम्शेरलाई लिएर हस्पिटल गएर पुऱ्याएँ । एक चोटी बोलेको हो कि भन्ने सुनें । त्यति अनि त पछि सुन्न सकिन । के बोले जस्तो त्यतिखेर थाहै भएन ।

**सिपाही टंकबहादुर गोले (शाहीरक्षक सैनिक प्रहरी)**

त्यति बेला म फाइटिङ्ग रुपमा थिएँ । त्यतिबेला फाइटिङ्ग सामेल भन्ने स्टण्ड टु भन्ने आवाज आयो । आवाज आइसके पछि हामीहरुले छिटो भन्दा छिटो सामेल भएर त्रिभूवन सदनतिर दगुरियो र दगुरिएर पुगिसकेपछि भित्र जुन घटनास्थलतिर गयौं हामी । गई सकेपछि अब त्यो जुन वेहोस अवस्थामा थियो । अनि हामी उद्धार कार्यतिर लाग्यौं । उद्धार कार्यतिर लागिसकेपछि अनि चिनिनसक्नु त्यो जे होस् त्यहाँको अवस्था चिन्न सक्ने किसिमको थिएन । त्यो अब बेहोस हुनेहरुलाई कहिले पेपरको सहायताले उठाउँदै बाहिर निकालेर गाडिमा लोड गऱ्यौं । अनि त्यस पछि त्यसो गर्दागर्दै पछि युवराज सरकारलाई त्यहीं सानो पोखरीमा उता गार्डेन तिरको सानो पोखरीको पुल माथि लडिराखेको अवस्थामा त्यति बेला हामी सबै देख्यौं । फेरी सबै जना गएर एक अर्कोमा हस्तेमा होइसे गर्दै निकालेको, निकाली सकेपछि फेरी पनि गाडिमा पुऱ्याएर फेरी फर्किंदा त्यसै सर्च गर्दै फर्किएँ । फर्किसकेपछि फेरी बडामहारानी सरकारलाई त्यही भऱ्याङ्गमा लडिरहेको अवस्था देखेर बडामहारानी सरकार पनि अलिकति ब्रेन भऱ्याङ्गमा खसकेको थियो र सबै जनाले त्यसलाई पनि सबै जनाले मिलेर फेरी बाहिर उताऱ्यौं । उतारिसके पछि लाष्टमा आएर शारदा सरकार र उसको श्रीमान घोप्टो भएको पोजिसन थियो । दुई जनानै भने पछि शारदा सरकार पहिलो ल्याएर बाहिर लिएर गयौं । उद्धार गर्दागर्दै एकजना पहिला पस्दा पस्दा ऐया ऐया भनेको सुनेको त्यति मात्रै हो । अरु त केही पनि बोलेको थिएन । युवराजाधिराजलाई देख्दाखेरी उत्तानो परेको अवस्था थियो । त्यहाँ कुनै हतियारहरु देखिन मैले । आवाज आइराखेको थिएन । आवाज जे होस् घरघर भन्ने एउटा आवाज सुन्ने बेलामा घुरेको अवस्था जस्तो गरिराखेको थियो ।

**सिपाही अर्जुन पौडेल (शाहीरक्षक सैनिक प्रहरी)**

म त्यो दिन फाइटिङ्ग स्टेण्डवाई पोष्टमा थिएँ । फाइटिङ्ग अफसरले फाइटिङ्ग सामेल भन्नुभयो । त्यसपछि हामी त्रिभूवन सदन मुभ भनेर हातहतियार सहित त्यहाँ दौडियौं । त्यहाँ पुगे पछि अनि भित्र जाने आदेश भयो र भित्र गएर मैले निराजन सरकार र बडामहारानी सरकारलाई उठाएर बाहिर ल्यायौं हामीले । निराजन सरकारको अवस्था यसो उत्तानो परेर सुतिराखेको थियो । पहिला निराजन सरकारलाई ल्याइयो अनि बडामहारानी सरकारलाई ।

**सिपाही एकनारायण शर्मा (शाही रक्षक सैनिक प्रहरी)**

त्यति बेला हामीहरु स्ट्याण्ड बाई थियौं । त्यहाँ तुरुन्त खबर आयो । फाइटिङ्ग सामेल भयौं । फाइटिङ्ग सामेल भएर श्री सदन तिर जाने भन्ने आदेश आयो । त्यहाँबाट दौडदैं दौडदै श्री सदन तिर लागियो । त्यहाँ पुग्दा वित्तिकै ल भित्र भन्ने आदेश आयो । हामीहरु तुरुन्त भित्र गयौं । भित्र गएर सबै भन्दा पहिला मैले केतुकी चेष्टरलाई समात्न पुग्यौं । वहाँलाई समातेर गाडिमा हालियो । त्यसपछि अन्य साथीहरुले त्यहाँ बोक्दै हुनुहुन्थ्यो । अनि त्यो जुन सानो पोखरी जस्तो थियो । त्यतिबेला म पहिलो पटक हो म त्यहाँ गएको । पोखरीको जाने साइटमा त्यहाँ युवराज सरकार लडेको अवस्था देखें । अनि वहाँलाई समातेर ल्याएर गाडिमा हालियो । सरकारलाई पनि गाडिमा हालिसके पछि हामी खोपीतिर लाग्यौं । भऱ्याङ्गमा बडामहारानी सरकारलाई देख्यौं र छिटोछिटो गरेर समातेर गाडिमा ल्याएर राखियो । अन्तिममा खडगविक्रम र शारदा शाह दुई वटा संगै हुनुहुन्थ्यो । वहाँ खप्टिएर बस्नु भएको थियो । पहिला शारदा शाहलाई गाडिमा हालियो । अनि पछि तुरुन्त फर्केर आएर म खडगविक्रम शाहलाई पनि समात्न पुगें । हामीले त्यहाँबाट ल्याएर गाडिमा हाल्यौं ।

–

**सिपाही केदार कार्की शाहीरक्षक सैनिक प्रहरी)**

मेरो नाम सिपाही केदार कार्की, , हामीलाई म त्यो दिन फाइटिङ्गमा थिएँ । हामीलाइ फाइटिङ्ग सामेल भन्ने वित्तिकै हामी फाइटिङ्ग सामेल भएर त्रिभूवन सदन पुग्यौं । त्रिभूवन सदन पुगेपछि एडिसि साहेबहरुले ल भित्र मूभ भन्ने वित्तिकै हामी भित्र गयौं । भित्र जानलाई त्यो पुरा सिसाहरु फुटेको ढोका एउटा रहेछ । त्यस भित्र हामी विस्तार विस्तार एक जना गरी छिऱ्यौं । त्यहाँ विभिन्न दृष्यहरु देख्यौं । सबै कोही ढलिराखेका कोही खत्तम भैसकेको अवस्थामा कोही ऐया ऐया भनेको अवस्थामा भेट्यौं । अनि त्यतिखेर जो जो हामीले अगाडि जो जोलाई देख्यौं । उस उसलाई हामी सबैले त्यो शिसा फुटाएर हामीले त्यहाँ निकाल्न थाल्यौं । त्यहाँबाट फेरी भएन भनेर त्यो चुकुल झिकेर अनि फेरी त्यो ढोका तानेर ढोका खोलेर त्यहाँबाट हामीले विरामीहरु क्रमैसंग एक एक जना गरेर लग्यौं । अनि लाँदाखेरी त्यो लगिसक्यौं । को को लग्यौं । त्यो चाही बोकेको नाम थाहा भएन मलाई । त्यहाँ पछि त्यो भित्र शारदा सरकार र खडकविक्रम त्यही होइबक्सिन्थ्यो । वहाँलाई वहाँ चाही मरिसकेको अवस्थामा हुनुहुन्थ्यो । वहाँलाई छोडेर अनि हामी उता गार्डेन तिर गयौं । गार्डेन तिर जाँदाखेरी निराजन सरकार उत्तानो परेर लडेको अवस्थामा र युवराजधिराज सरकार उत्तानो परेर लडेको अवस्था थियो । अनि सबै जनाले कोहीले निराजन सरकारलाई बोक्न थाल्यौं । कोहीले युवराजधिराज सरकारलाई बोक्न थाल्यौं । त्यो ड्रेस हामीहरुले जस्तो चुस्ताहरुको जस्तो क्याम्प फ्लाइज थियो । अनि त्यहाँबाट युवराजधिराज सरकारलाई बोकेर बाहिर ल्याएर गाडिमा हालेर पठायौं । फेरी अनि खोपितिर लाग्यौं हामी । खोपितिर जान लाग्दाखेरी त्यो सिडिंमा बडामहारानी सरकारको लास भेटियो । वहाँलाई पनि हामीले फेरी गाडिमा हालेर पठायौं । युवराजधिराज सरकार सुतेर निदाएको अवस्थामा घुरघुर घुऱ्या जस्तो अवस्था थियो ।

**सिपाही भवानी शंकर ढकाल (शाहीरक्षक सैनिक प्रहरी)**

मैले सबभन्दा पहिला मुमा बडामहारानी सरकारलाई बोकें बडामहारानी सरकारलाई । वहाँ भऱ्याङ्गमा लडिराख्नु भएको थियो । भऱ्याङ्गबाट बडामहारानी सरकारलाई ल्याए पछाडि मैले शारदा सरकार र खडकविक्रमलाई तीन जनालाई बोकेर गाडिमा हालें । मैले त्यहाँ बोकिन्ज्याल मैले कोही यताउती आवाज पनि केही सुनिन । बडामहारानी सरकार त्यो भऱ्याङ्गको माथितिर टाउको तल खुट्टा गरेर लडिराख्नु भएको थियो ।

त्यस दिन गत १९ गतेको घट्नामा म फाइटिङ्गमा थिएँ । स्ट्याण्डवाई टोलीमा थिएँ । त्यस्तैमा जब कमाण्डरको आदेश आयो कि फाइटिङ्ग सामेल भन्ने आदेश आयो । त्यसपछि हामी तुरुन्तै हतियार लिएर सामेल भयौं । र सामेल हुनासाथ कमाण्डरले भन्नुभयो कि तुरुन्त त्रिभुवन सदन जाने भनेर आदेश आयो । त्यस आदेशपछि हामी त्रिभुवन सदन गयौं । हामी जाँदाखेरी कालो गाडी तयार भैरहेको थियो । त हामी वहाँ पुग्नासाथै कालो गाडी स्टार्ट भयो, हिडीसक्यो । पछि खवर पाउँदाखेरी महाराजाधिराज सरकारलाई लगिसकेको रहेछ । र त्यस अवस्थामा हामी वहाँ पुगेपछि तुरुन्तै भित्र गयौं र भित्र गएपछि शान्ति सरकारलाई जुन ढोका भन्दा अगाडि होइवक्सन्थ्यो र वहाँलाई हामी अरु २/३ जना साथीहरु भएर उठाएर गाडीमा ल्यायौं र शान्ति सरकारलाई गाडीमा राखेपछि फेरि फर्केर म जुन भित्र गइरहेको थिएँ त्यस अवस्थामा कोमल सरकारलाई भित्रबाट साथीहरुले ल्याइरहेका रहेछन् र मद्दत गरेर एमटीको मिनीबसमा कोमल सरकार राख्यौं र कोमल सरकार राखिएको मिनीबसमा म आफू चढेर हस्पिटल पुगें । म पनि त्यही मिनीबसमा गएँ ।

*समितिः* तपाईसंग केही कुरा भएन ?

*जवाफः* मसंग केही पनि भएन ।

*समितिः* अनि अरुसंग केही बोल्नेओर्ने केही कुरा भएन ?

*जवाफः* मसंग अरु साथीहरु वहाँलाई लिएर भित्र बस्नुभएको थियो म ढोकानेर बसिरहेको थिएँ ।मसंग केही पनि भएन ।

**सिपाही मनबहादुर पराजुली (शाहीरक्षक सैनिक प्रहरी)**

सबभन्दा पहिला त्रिभुवन सदनमा गइयो । अनि अफिसरको आदेशमा भित्र गइयो । भित्र जाँदाखेरीमा विमारी त चिन्दै चिनिएन । सब छिटो उद्धार गर्नेतिर लागियो के हामी । छिटो उचालेर गाडीमा चढाएर हस्पिटल पु¥याउनेतिर लागियो । युवराज सरकारलाई उत्तानो परेको अवस्थामा देखें । युवराज सरकारलाई म सहित ६/७ जनाले उठाइयो । युवराज सरकार बोलिबक्सेको थियो । निराजन सरकारको केही आवाज थिएन । त्यसपछि लाष्टमा खड्गविक्रम र शारदा, खड्गविक्रम तलपट्टी शारदा माथिपट्टि ।

**सिपाही परशुराम खत्री (शाही रक्षक सैनिक प्रहरी)**

म त्यसदिन फाइटिङ्गमा स्ट्याण्डवाई फौजको रुपमा थिएँ । जब फाइटिङ्ग सामेल भनेर विष्णु खड्का मेजरसावले भन्नुभयो त्यसपछि हाम्रो फाइटिङ्ग हवलल्दार साहेवले हामीलाई सामेल गर्नुभयो । त्यसपछि जतिसक्यो चांडो त्रिभुवन सदन पुग्ने भनेर आदेश आयो । त्यसपछि हामी त्यहाँबाट दौड्यौं । त्यहाँबाट त्रिभुवन सदन पुग्दा त्यहाँबाट एउटा कालो गाडी मुभ भैसकेको थियो । अनि कालो गाडी मुभ भएपछि हाम्रा अरु साथीहरु पनि पुगे । त्यसपछी ए.डि.सी. सावले भित्र जाने भन्ने आदेश दिनु भयो त्यसपछी हामी भित्र गयौं । भित्र गएपछि त्यहां हामीले त्यहाँ लडिरहेको रगतहरु मान्छेहरु लडिराखेको देख्यौं । अनि त्यहांबाट मैले गोरख शमसेरलाई हातमा समातेर उठाएँ । त्यहाँबाट ढोकासम्म मैले ल्याएको थिएँ । अरुले समातेर गाडीमा हाले । त्यहाँबाट अरु ल्याइसकेको थियो । त्यहाँबाट हामी भित्र छि¥यौं । त्यो ब्ल्याक गाडी कोठाबाट बाहिर निस्क्यौं । त्यहांबाट निस्कँदाखेरी युवराज सरकार देखियो । युवराज सरकारलाई उठायौं हामीले । अनि युवराज सरकारलाई उठाएर गाडी भित्रै बसें युवराज सरकारलाई काखमा राखेर । अनि त्यसपछि निराजन सरकारलाई पनि गाडीमै ल्याए अरु साथीहरुले । अनि पारस सरकार अगाडि बसिबक्स्यो । अनि गजेन्द्र मेजर साहेवले गाडी चलाई बक्स्यो । अनि राजु मेजर साहेव पछाडि बसिवक्स्यो । अनि हामी त्यहाँबाट मुभ भयौं । मुभ भएपछि हस्पिटलमा पु¥यायौं । हस्पिटल अनि अरु त्यहाँ अगाडि बसेका साथीहरुले स्ट्रेचर ठिक पारेका थिए । स्ट्रेचरमा हालेर उपचार कक्षतिर लगे ।

**सिपाही विष्णुबहादुर खत्री (शाही रक्षक सैनिक प्रहरी)**

मेरो ८-१० को ड्युटी थियो फाइटिङ्ग ढोकामा । म ड्युटी बसिराखेको थिएँ । त्यसवेला गोलीको आवाज आयो । गोलीको आवाज आएपछि मेरो नजिकै इन्द्र देवकोटा भन्ने हुनुहुन्थ्यो । मैले कहाँबाट गोलीको आवाज आयो, गोलीको आवाज आयो भनें । त्यति भनिसकेपछि गोलीको आवाज आयो दाजी भन्न लागें । इन्द्र देवकोटा उता फोन भएतिर दौडिनु भएकोले दौडिदा वित्तिकै उतातिरबाट पनि फोन आएको छ । तुरुन्त सामेल भनेर । तुरुन्त सामेल भन्ने वित्तिकै हाम्रो फाइटिङ्ग आदेशमा सामेल भएर हामी दौड्यौं । दौड्दा त्यहाँ आइसकेपछि बाहिर पारस सरकारहरु होइबक्सन्थ्यो । त्यहाँ पारस सरकारले भित्र भनेर हामी भित्र गएपछि जाँदा वित्तिकै मैले श्रुती सरकारलाई देखें । श्रुती सरकारलाई मैले बाहिर निकालें । भित्र फेरि गइयो । भित्र गएपछि मैले अरु कसैलाई चिनिन । श्रुती सरकारको शरीर उल्टो परेको लडिरहेको अवस्थामा हुनुहुन्थ्यो । अरु मैले केही याद गरिन । अरु मैले केही हेरिन । जे होस् श्रुती सरकारलाई मैले चिने । त्यहाँबाट चारजना भएर उठाएर बाहिर निकालें । निकालिसकेपछि फेरि भित्र पस्यौं । भित्र पसिसके पछि मैले अरुलाई कसैलाई पनि चिनिन । अरुलाई पनि उचालेर महिलाहरुलाई मैले बाहिर निकालें । ३/४ जना भएर ।

**सिपाही बालकृष्ण न्यौपाने (शाहीरक्षक सैनिक प्रहरी)**

म फाइटिङ्गको स्ट्याण्डवाई फौजमा थिएँ । त्यहाँ अब गोलीको आवाज आयो । फाइटिङ्ग कमाण्डर हवल्दार साहेवले सामेल गर्नुभयो । त्यहाँबाट त्यो ठाउँमा हामी गइयो । त्यहाँ हामीहरु जाने वित्तिकै पस्ने बेलामा त्यहाँ गएपछि पारस सरकार र अनन्त मेजरसाहेवले भित्र जाने भन्नुभयो । भित्र जाँदाखेरी जाने वित्तिकै श्रुती सरकारको वेहोश अवस्थामा त्यहाँ फेला पारियो । त्यहाँबाट श्रुती सरकारलाई बोकेर ल्याएर गाडीमा राखियो । अनि गाडीमा राखे पछि त्यो गाडीमा जाने मलाई बस्ने ठाउँ भएन र कोमल सरकारलाई लिएर मिनीबसमा हस्पिटलतर्फ ४/५ जना हस्पिटल तर्फ गइयो । श्रुती सरकार हरियो साडी चोलोमा होइसिन्थ्यो । कोमल सरकार गाडीमा आफै बस्नसक्ने अवस्थामा होइसिन्नथ्यो । अनि हामीले सिटमा राखेर हामीले च्यापेर हस्पिटलसम्म पुऱ्यायौं ।

**सिपाही राजेश (शाही रक्षक सैनिक प्रहरी)**

म त्यो दिन स्ट्याण्डवाई फौजमा फाइटिङ्ग थियो र हामीलाई त्यहाँ स्ट्याण्ड टु भन्ने सामेल भयो । कमाण्डरले सामेल गर्नुभयो । त्यसपछि हामी त्यहाँबाट मुभ भयौं । मुभ भैसकेपछि त्रिभुवन सदन पुगियो । त्रिभुवन सदन पुग्नासाथ हामी त्यहाँ पारस सरकार र अनन्त मेजरसाहेव देख्यौं र त्यसपछि भित्र मुभ भयो र भित्र गयौं र अनि भित्र गैसकेपछि त्यहाँ कोठामा जयन्ती सरकारलाई देखियो । जयन्ती सरकारलाई बाहिर निकालेर गाडीमा हालियो । केही थिएन बोली । अनि त्यसपछि फेरि गएर श्रुती सरकारलाई निकालियो । श्रुती सरकार निकालेर जिप्सीमा हालेर अनि त्यही गाडीमा हामी हस्पिटल गयौं ।

**सिपाही वीरेन्द्रकुमार श्रेष्ठ (शाही रक्षक सैनिक प्रहरी)**

म त्यतिवेला फाइटिङ्गमा थिएँ । फाइटिङ्गमा भित्र थिएँ र अब हाम्रो कमाण्डरले फाइटिङ्ग सामेल भन्ने सुनिएको थियो । बाहिर निस्केर छिटो भन्दा छिटो त्रिभुवन सदनमा जाने भन्नुभयो । अनि हामी जति सक्दो दौडेर त्रिभुवन सदनमा पुग्यौं।त्यहाँ पुग्दा कालो गाडी हिड्न लागेको अवस्थामा भेट्यौं । कालो गाडी भन्दाखेरी महाराजाधिराज सरकारलाई । त्यो बेलामा त थाहा भएन । अनि भित्र मुभ हुँदा वेड हलको त्यो शिसा अगाडिको शिशा फुटेको थियो । त्यहींबाट छिर्‍यौं हामी । छिर्नासाथ गोरख सरकार छेउमै थियो त्यो स्नुकर बोर्डको छेउमै थियो । श्रुती सरकार तल लडेको गोरख सरकार माथिपट्टी थियो । अनि गोरखलाई हामीले उठाउन लाग्दाखेरी वहाँले वाबु यसलाई लिएर आउ भन्ने हुकुम भएको थियो । अनि त्यहाँ त्यो कुरा नसुनिकन वहाँलाई उठाएर बाहिर लग्यौं । बाहिर गेटमा पुऱ्याएर दुईजनाले दुईपट्टी समातेर गाडीमा हाल्यौं । अनि त्यहाँबाट म फर्किंदाखेरी श्रुती सरकारलाई ढोकाबाट निकाल्न लागेको रहेछ । अनि श्रुती सरकारलाई अरुले भित्रबाट निकाल्न लागेको थियो अनि मैले बाहिरबाट साथ बाहिर निकाले । बाहिर निकालेर गाडीमा हालें । गाडीमा म भित्र हाल्न गएको थिएँ । अनि गाडीमै जाने भन्ने आदेश भयो । अनि गाडीमै चढेर हस्पिटल पुग्यौं ।

**सिपाही इन्द्रप्रसाद देवकोटा (शाहीरक्षक सैनिक प्रहरी)**

शाहीरक्षक सैनिक फौजको स्ट्याण्डवाई फौजमा बसिरहेको थिएँ । त्यो फौज २४ घण्टा रहिरहन्छ । त्यसपछि त्रिभुवन सदनमा वाकीटकीमा अफिसर साहेवलाई आदेश आएछ स्ट्याण्डवाई फौज यहाँ पठाइदिने भनेर । र अफिसर साहेवले फाइटिङ्ग सामेल भनेर फाइटिङ्ग कमाण्डर हवल्दार साहेवलाई भन्नुभयो । सामेल भएपछि तुरुन्तै त्रिभुवन सदन जाने भनेर भन्नुभयो । हामी त्रिभुवन सदन गयौं । त्यहाँ पुगेपछि कालो गाडीमा महाराजाधिराज सरकारलाई हालेर कालो गाडी हिडिसकेको थियो हामी पुग्दाखेरी । अनि त्यहाँ पुग्दापुग्दै अनन्त मेजर साहेव र पारस सरकारले ल भित्र मुभ भनेर भन्नुभयो । अनि भित्र गएपछि त्यहाँ सबै अब ब्लडैब्लड सबै रगतै । यता लथालिङ्ग देखियो । अनि शान्ती सरकारलाई उचालेर बाहिर गाडीमा ल्याएर राखियो । त्यो वेला शान्ती सरकारको स्थिति अया अया भन्ने स्थिति थियो । अनि त्यहाँभन्दा अरु केही सुनिएन । अनि त्यो गाडीमा राखियो हामीले अनि हामी फेरि २/४ जना अर्को गाडीमा एम.टी.को मिनीबसमा कोमल सरकारलाई लिएर हस्पिटल गइयो ।

**सिपाही गिताबहादुर खड्का (शाहीरक्षक सैनिक प्रहरी)**

म त्यतिवेला स्ट्याण्डवाई फौजमा थिएं । र हामी फाइटिङ्ग सामेल भएर तुरुन्त त्रिभुवन सदन गयौं । जाँदाखेरी त्यतिखेर कालोगाडी मुभ भएको थियो र त्यहाँ अनन्त मेजर साहेव र पारस सरकार होइवक्सिन्थ्यो र हामीलाई भित्र मुभ भन्ने आदेश भयो । भित्र गैसकेपछि ढोकाबाट छिरेर छिर्दाखेरी शान्ति सरकारलाई भेटियो । शान्ति सरकारलाई उठाएर हामीले बाहिर ल्यायौं । बाहिर ल्याएर गाडीमा हाल्यौं र गाडीमा लिएर गए साथीहरुले । त्यसपछि म फर्केर भित्र जान लाग्दा कोमल सरकारलाई पनि लिएर आइरहेको र कोमल सरकारलाई मिनीबसमा एमटीको मिनीबसमा राखियो र भित्तापट्टीको सिटमा राखेको थियो कोमल सरकारलाई । म त्यसैको साइडमा बसेर कोमल सरकारलाई थेगेर हस्पिटलसम्म गएँ । हस्पिटल पुगेपछि त्यहाँ स्ट्रेचरबाट भित्र लाने काम गरियो । त्यो बेला कोमल सरकारको स्थिति ऐया ऐया भन्ने आवाज आइरहेको थियो बेलाबेलामा र कति कतिखेर मैले थेगिरहेको हातमा समाइबक्सेको थियो । कतिखेर समाउने र कतिखेर छोड्ने गरिवक्सेको थियो ।

**सिपाही कमलबहादुर रोका (शाहीरक्षक सैनिक प्रहरी)**

म त्यतिखेर स्ट्याण्डवाई फौजमा थिएँ । फाइटिङ्ग कमाण्डरले फाइटिङ्ग सामेल भनेर भन्नुभयो । हामी सामेल तुरुन्त आफ्नो हातहतियार सहित सामेल भयौं । तुरुन्त त्रिभुवन सदन जाने भन्ने आदेश आयो । त्यसपछि हामी त्रिभुवन सदन पुग्यौं । त्यतिखेर कालो गाडी जान ठिक्क परेको थियो । अनि हामी पारस सरकार र अनन्त मेजर साहेवको आदेश अनुसार भित्र गयौं । त्यतिखेर मैले केतकी चेस्टरलाई

बाहिर ल्याएर गाडीमा चढाउने काम भयो । फेरि हामी भित्र गएर जयन्ती शाहलाई निकालेर सेतो भ्यानमा राखेर म हस्पिटल गएको थिएँ ।

याद भएन ।

**सिपाही कपिल थापा (शाहीरक्षक सैनिक प्रहरी)**

म त्यतिखेर स्ट्याण्डवाई टोलीमा थिएँ । जब फाइटिङ्ग सामेल भन्ने आवाज सुन्ने वित्तिकै हामीले सबै आफ्नो सामान बोकेर हामी सामेल भयौं । सामेल हुँदाखेरी हामीलाई विष्णु मेजर साहेवले सबै तुरुन्त त्रिभुवन सदन जाने भन्ने वित्तिकै दौडेर हामी छिटो भन्दा छिटो त्रिभुवन सदन पुग्यौं । त्रिभुवन सदन पुग्दाखेरी जुन कालोगाडी जाँदै थियो । त्यो हामीलाई थाहा भएन पछि थाहा भयो कि महाराजाधिराज सरकारलाई ए.डि.सी. साहेवहरुले लगिवक्सिएछ भनेर । अनि त्यहाँ पुग्ने वित्तिकै हामीले पारस सरकारलाई, अनन्त मेजर साहेव होइवक्सिन्थ्यो वहाँले हामीलाई भित्र मुभ भन्नेवित्तिकै हामी भित्र छिऱ्यौं । भित्र छिर्नेवित्तिकै हामीले अब सबै अचेत अवस्थामा कोही कता कोही कता लडिरहेको हामीले भेटायौं । त्यतिखेर हामी ६/७ जना साथीहरु मिलेर धीरेन्द्र सरकारलाई हामीले बाहिर निकाल्यौं । त्यो वेला धीरेन्द्र सरकारको स्थिति उत्तानो परेको अवस्थामा ऐया ऐया भनेर लडिरहनु भएको थियो । र हामीले ६/७ जना मिलेर उचालेर हामीले बाहिर निकाल्यौं । बाहिर निकाले पछि हामीले भ्यानमा राख्यौं । भ्यानमा राख्ने वित्तिकै अगाडिपट्टी श्रीमती केतकी चेष्टर अगाडि सिटमा बस्नु भएको थियो भने पछाडि धीरेन्द्र सरकारलाई हामी म र अर्को एउटा साथी मिलेर हामीले लिएर गयौं । जँदाखेरी बाटोमा वहाँले बोल्दै जानुभएको थियो । कही मलाई यता दुख्यो उता दुख्यो । मलाई सास फेर्न गाऱ्हो भयो भनेर मैले भ्यानको त्यो भ्यालहरु यताउती खोलिदिएँ । हस्पिटल आइपुगेन भनेर सोध्दै हुनुहुन्थ्यो । हस्पिटल पनि आइपुगेको छ भनेर अगाडिपट्टी श्रीमती केतकी चेष्टरले बाबु धीरेन्द्र किप साइलेन्ट । अब आइपुग्न लागिसक्यो, हस्पिटल आइपुग्न लागिसक्यो भनेर वहाँ नर्मल अवस्थामा हुनुहुन्थ्यो केतकी चेष्टर । वहाँले त्यसो भन्दै लागिरहनु भएको थियो र हामी त्यतिखेर हस्पिटल पुऱ्यायौं ।

**सिपाही देवनारायण पौडेल (शाही रक्षक सैनिक प्रहरी)**

म त्यतिवेला शाही रक्षक सैनिक प्रहरीको स्ट्याण्डवाई फोर्समा थिएँ र त्यो दिन अफिसरसावको अर्डर बमोजिम हामीलाई हतियार सहित त्रिभुवन सदन पुग्ने आदेश भयो र हामी त्यसवेला पुग्ने क्रममा एउटा कालो गाडीमा महाराजाधिराज सरकारलाई राखिरहेको ए.डि.सी. मुभ भैसक्नुभएको थियो । अनि त्यसपछिबाट हामी पारस सरकार र अनन्त मेजरसाहेवको आदेश बमोजिम हामी भित्र प्रवेश गऱ्यौं । त्यसपछि ढोकै अगाडि श्रुती सरकार कोल्टे अवस्थामा होइवक्सिन्थ्यो र हामी पारस सरकारबाट जतिसक्यो जो बाँचेको छ त्यसपछि छिटो पुऱ्याउने भन्ने हुकुम भयो । अनि हामी त्यतिवेला धीरेन्द्र सरकारलाई समातेर ढोकाबाट बाहिर निकालेर गाडीमा हालियो । गाडीमा हालेपछि अनि त्यतिवेला श्रुती सरकारलाई त्यतिखेर बाहिर ल्याइसकेको थियो । वहाँ चल्ने अवस्थामा हुनुहुन्थेन । धीरेन्द्र सरकार जे होस् ऐया ऐया भनिबक्सनु भएको थियो । त्यसो भएर धीरेन्द्र सरकारलाई बाहिर ल्यायौं, गाडीमा हाल्यौं, अनि त्यसपछि त्यति गर्दाखेरी केतकी चेष्टरलाई पनि त्यहाँ सायद कसले ल्याइदिनुभयो अगाडिको सिटमा केतकी चेष्टर र त्यसपछाडिको सिटमा मैले धीरेन्द्र सरकारको टाउको वहाँले भनिबक्सेको थियो बाबु टाउको मेरो दुखिरहेको छ, अठ्याइरहेको छ, अठ्याइदेउ टाउको भनिवक्स्यो, कतिखेर खुट्टा तन्काइदेउ, खुट्टा दुखिरहेको छ भनिवक्स्यो । अनि त्यसपछाडि हातले टाउको अड्याएर हस्पिटल लगियो त्यतिवेला केतकी चेष्टरले वहाँलाई शान्त्वना दिंदै हुनुहुन्थ्यो कि हस्पिटल आउन लागेको छ एकछिन नकराऊ किप साइलेन्स यस्तै सान्त्वना दिंदैहुनुहुन्थ्यो । अनि त्यसपछि हामीले हस्पिटलमा लग्यौं ।

**सिपाही शालिकराम क्षेत्री (शाहीरक्षक सैनिक प्रहरी)**

त्यसदिन मेरो स्ट्याण्डवाइ ड्युटी थियो । तुरुन्त त्रिभुवन सदन जाने भनेर आदेश हुने वित्तिकै तुरुन्तै गइयो । हामी जाँदाखेरी शोभा सरकारलाई बाहिर निकालिसकेको थियो । गाडीमा गाडीमा वहाँले जाडो भयो भन्नुभयो, अनि भ्याल लगाइयो ।

**सिपाही ठाकुरप्रसार न्यौपाने (शाहीरक्षक सैनिक प्रहरी)**

त्यो त्रिभुवन सदनभन्दा अगाडि धेरै यता अगाडि गोरख शम्सेरलाई त्यहाँ समातेर ल्याइवक्सियो र त्यहाँबाट गाडीमा गोरख शम्सेरलाई उता त्रिभुवन सदनबाट यता समातेर ल्याइवक्सेका अरु साथीहरुले त्यहाँ हामीले गाडीमा लोड गरेर हस्पिटल लगियो । वहाँको अवस्था गालातिर रगतैरगत थियो । यता छातीमा पनि रगतै रगत थियो । हामीले ऐया ऐया भन्ने आवाज मात्रै सुनियो र हस्पिटल लगियो र हस्पिटल वेडमा सुताइयो ।

–

**उपसेनानी काले कार्की (शाहीरक्षक सैनिक प्रहरी)**

हामी शाही रक्षक अफिस मै बसिराखेका थियौं ग्रुप जति । त्यसपछि फोन आएर ल जतिसकेको छिटो गाडी जति सकिन्छ बढी पठाउनु भन्ने अर्डर आयो । अर्डर आएपछि हामीले ८/१० वटा गाडी पठाइयो । म अघिपछि एक्स्ट्रा । त्यो पनि लिएर गएपछि बडामहारानी सरकारलाई हस्पिटल पुऱ्याइयो ।

**हवल्दार मनबहादुर खत्री (शाहीरक्षक सैनिक, एम.टी)**

खास त्यतिखेर मलाई ए.डि.सी. अफिसबाट तुरुन्त त्रिभुवन सदनबाट तुरुन्त मोटर पठाउनु भन्ने आदेश आयो, जति सक्दो छिटो । भएभरको मोटर पठाउने भन्ने आदेश आयो । त्यसपछि हामीले जतिसक्दो छिटो हामीले ड्रेस लगाएर त्रिभुवन सदनमा मोटर पुऱ्याइयो । त्यसपछि म जांदाखेरी मेरोभन्दा अगाडिको मोटरमा दीपेन्द्र सरकारको र नीराजन सरकारको विरामीहरुलाई हाल्दै थियो । त्यसपछि मेरो मोटरमा खास विरामी हालेन । त्यसमा सेक्युरिटी पनि नअटाउने भएको हुनाले विष्णु मेजर साहेब र दुईजना अरु मान्छे चढेर हस्पिटलसम्म गइयो । त्यसपछि हामीहरु विरामीहरुलाई स्ट्रेचरमा हालेर भित्र लग्यौं । दीपेन्द्र सरकार र नीराजन सरकारलाई अगाडि, मेरोभन्दा अगाडिको मोटरमा दीपेन्द्र सरकारकै मोटरमा हाल्यौं । त्यसमा नअटाउने भएको हुनाले विष्णु मेजरसाहेब र अरु दुईजना मान्छे मेरो मोटरमा चढेर त्यसको सेक्युरीटी गरेर हामी हस्पिटल पुग्यौं ।

**हुद्धा नवराज सापकोटा (शाहीरक्षक सैनिक, एम.टी.)**

त्यस दिन हामी फिल्म हेरेर बसिराखेका थियौं । ए.डि.सी. अफिस र अनन्त मेजर साहेबले फोन गरिबक्स्यो । फोन मैले उठाएं । गाडी लिएर माथि आउनु भन्ने मर्जी भयो । गाडी लिएर म माथि गएं । म माथि पुगेपछि धीरेन्द्र सरकार र केतकीलाई मोटरमा राख्दै त्यसपछि गाडी लिएर हस्पिटल गयौं । धीरेन्द्र सरकार ऐया, ऐया मलाई टाउकोमा के ले थिच्यो, थिच्यो, मलाई सास फेर्न गाह्रो भयो, के ले टाउकोमा थिचे जस्तो भयो, म टाउको उचाल्देउ भनेर भनिबक्स्यो । अनि दुईजना बसेको थियो, फाइटिङ्ग लिएर । उनीहरुले टाउको उठाइदिए । मलाई दुख्यो, दुख्यो, गाडीबाट बाहिर निकाल्देऊ; केतकी चेष्टरले प्लीज साइलेन्ट धीरेन्द्र भनेर भनिबक्स्यो । हस्पिटल आइपुग्न लाग्यो । त्यसपछि हामी हस्पिटल गयौं । हस्पिटलमा स्टेचरमा हालेर भित्र बेडमा पुऱ्याएर अनि फर्क्यौं ।

**हवल्दार भरतबहादुर थापा मगर (शाहीरक्षक सैनिक, एम.टी.)**

ामी ९ बजे टेलिभिजन हेरिराखेका थियौं । र एकैचोटी तलबाट स्टायण्ड बाई भन्ने अर्डर आयो । सबैजना ड्राइभर स्टायण्ड बाई भन्ने अर्डर आइसकेपछि हामी स्टायण्ड बाई भएर बस्यौं र एकछिन पछाडि छिटोभन्दा छिटो गाडी त्रिभुवन सदनमा लाने भनेर भनेपछि हामीले सबै गाडी लिएर गयौं माथि । माथि गैसकेपछि मैले बस लिएर गएको, मिनिबस । त्यसको पछाडि एकजना विमारी हालेको र को विमारी भन्ने कुरो मलाई थाहा भएन । र जति सक्दो छिटो हस्पिटल पुऱ्याउने भनेर एम्बुलेन्सी बालेर हस्पिटल गयौं ।

–

**छत्रध्वज बोगटी (शाहीरक्षक सैनिक, एम.टी.)**

हामी चाहिं रेडी हालतमा बसिराखेका थियौं । अनि त्यहां एम.टी.को जति भएको गाडी तुरुन्त त्रिभुवन सदन पठाउने भन्दाखेरी हामीले जे जस्तो आफुले एक एक वटा गाडी लिएर त्रिभुवन सदन गयौं । त्रिभुवन सदन गैसकेपछि मेरो बस थियो । बस पछाडि राख्दाखेरी सानो सानो मोटरले अगाडि गैराखेको थियो, त्यो घटनास्थल, त्यहां गएपछि सानो सानो मोटरमा भित्रबाट ल्याइराखेको । हाम्रो भित्र गएन । बाहिरबाट मोटरमा लगाउन सघाएको हो । त्यसो हेर्दाखेरी खड्गविक्रम शाह हुनुहुंदोरहेछ ।

**अमल्दार लोकबहादुर कार्की (शाहीरक्षक सैनिक, एम.टी.)**

हामी जतिसक्दो चाँडो गाडी भएको जति सब त्रिभुवन सदनमा लिएर जाने भन्ने अर्डर भयो । त्यो अनुसार हामीले सकभर चांडै नै लिएर गाडी त्रिभुवन सदन गयौं । त्रिभुवन सदनमा विरामीहरु भित्रबाट ल्याउने काम भैराखेछ । त्यहाँबाट विरामी हालेर जतिसक्दो चांडो हस्पिटल पुऱ्याउने काम गऱ्यौं ।

–

**सिपाही कृष्णप्रसाद पोखरेल (शाहीरक्षक, एम.टी.)**

हामीलाई एम.टी.बाट गाडी छिटोभन्दा छिटो त्रिभुवन सदनमा लिएर जाने भन्ने आदेश आयो । त्यसकारण मैले मारुति जिप्सी चलाएको थिएँ । जिप्सी लिएर त्रिभुवन सदन बाहिरपट्टि राती त्यतिकैमा विरामी ल्याएर फाइटिङ्ग टोलीले पछाडिपट्टि सिटमा एकजना विरामी राख्नुभयो । छिटोभन्दा छिटो हस्पिटल पुऱ्याउने भनियो। अनि हस्पिटल पुऱ्यायौं ।

**सिपाही रामकुमार के.सी. (शाहीरक्षक, एम.टी.)**

हामीहरुले त्यतिखेर एउटा मिनिबसमा म सेकेण्डको रुपमा भएँ । हामी दुईजना ड्राइभर भएर त्रिभुवन सदनमा गाडी लिएर गयौं ।

–

**सिपाही रविन्द्रविक्रम खाँड (शाहीरक्षक, एम.टी.)**

हामी एम.टी.मैं स्टायण्ड बाई नै थियौं । जतिसक्दो छिटो गाडी त्रिभुवन सदनमा लैजानु भनेपछि मैले १६३२ भ्यान त्रिभुवन सदन पुऱ्याएं । त्यहां पुग्दा शान्ति सरकार र जयन्ती शाह र एकजना अफिसर, दुईजना फाइटिङ्ग गाडीको प्रतिक्षामा हुनुहुन्थ्यो ।

**सिपाही रामबहादुर पाण्डे (शाहीरक्षक, एम.टी.)**

सबै गाडी चांडो भन्दा चांडो गरेर त्रिभुवन सदनमा लिएर जाउ भनेकोले हामी पनि गयौं । विरामीहरु निकाली राखेको, निकाल्दै गाडीमा हाल्दै गरेर सबैजना लगे । अनि मेरो गाडीमा लगेन ।

**सिपाही रामचन्द्र शर्मा (शाहीरक्षक, एम.टी.)**

म अर्को पछि गएको मिनिबस जो सेकेण्ड गएको थियो, हामी जांदाखेरी सबै विमारीहरु सानो सानो लाइट गाडीमा लगिसकेको रहेछ । अनि हामी त्यहिंबाट सबै विमारी लगिसके अरुले । अनि एम.टी.नै फर्क्यौं पछि ।

**सिपाही तिर्थ लुइँटेल (शाहीरक्षक सैनिक प्रहरी)**

म जुन त्यस घटनाको सिलसिलामा म फाइटिङ्गमा थिएँ । म फाइटिङ्गमा रहेर टि.भि. रुममा टि.भि. हेरिरहेको थिएँ । त्यस अवस्थामा हामीलाई स्ट्याण्ड टू भन्ने अडर आयो । हामीले स्ट्याण्ड टू भने पछि त्यसपछि हामीले जराकजुरुक उठेर आफ्नो हातहतियार इक्वीपमेण्ट सहित बाहिर सामेल भयौं । र त्यस अवस्थामा हामीलाई विष्णु खड्का मेजर साहेबको आदेशमा हामी त्रिभूवन सदनसम्म तिमीहरु तुफान जाने भन्ने आदेश भएको हुनाले हामी त्यहाँसम्म तुफान दौडेर गयौं । त्यस जाने क्रममा केही दौडन सक्ने साथीहरु अगाडि पुगे, दौडन अलि नसक्ने साथीहरु पछाडि थिए । त्यहाँ पुगे पछि हामी सबै सामेल नभैकन भित्र जाने भन्ने हामीलाई अडर थिएन । त्यसकारण हामी त्यहाँ साथीहरु पुगेपछि अनन्त मेजर साहेब हुनुहुन्थ्यो । पारस सरकार हुनुहुन्थ्यो । त्यहाँ वहाँहरुले ल अब भित्र जाने भन्ने अडर भएपछि हामी भित्र गयौं । भित्र छिरेपछि मेजर साहेबले ल यहाँ घाइते जतिलाई जतिसक्दो चाँडो बोकेर बाहिर गाडिमा लगेर राख्ने भनेको हुनाले हामीले छिटो से छिटो घाइते सरकारहरुलाई बोकेर गाडिमा राख्ने काम गर्नथाल्यौ ।

त्यस क्रममा सबभन्दा पहिला मैले शान्ती सरकारलाई बोकेर ल्याएर गाडिमा राखें । त्यस अवस्थामा वहाको स्थिति ऐया ऐया भनेर भनिबक्सेको थियो । वहाँ ढोकाछेउमा लडिरहनु भएको थियो र त्यस अवस्थामा मैले शान्ती सरकारलाई बोकेर बाहिर गाडिमा ल्याएर फेरी हामी पुनः भित्र गयौं । भित्र जांदाखेरी मैले दोश्रो अवस्थामा दीपेन्द्र सरकारलाई बोकेर ल्याएँ । दीपेन्द्र सरकार जुन लेट रुमबाट भित्र छिरेपछि एउटा सानो गार्डेन जस्तो छ, त्यो गार्डेनको बीचमा पोखरी रहेछ । त्यो पोखरीको बीचमा पुल र सानो पुलमा उत्तानो अवस्थामा लडिरहेको हामीले पायौं । वहाँ अचेतन अवस्थामा भएको थियो र वहाँको स्थिति कस्तो थियो भन्दाखेरी उत्तानो परेर लड्दाखेरी उहाँको दाहिनेपट्टि एउटा गन हातमा थिएन कि हातबाट केही पर गार्डेनमा लडिरहेको थियो; हातमा थिएन । त्यो हात भन्दा केही पर उहाँको केही पर गन लडिरहेको थियो । उहाँले आर्मी पोशाक क्याम्बेट फाइट यही चुस्ता लगाउनु भएको थियो । पेटी बाँध्नुभएको थियो, सेटहरु मैले देखें त्यहाँ । हामीले ल्याएर गाडीमा लोड गर्‍यौं ।

कन्ट्याक्ट गर्ने वाकिटकि त्यो पनि थियो । अनि ल्याएर लोड गरेर फेरी भित्र छिर्‍यौं । भित्र छिर्दाखेरी त्यही बाटो हुँदै युवराज सरकारको खोपीमा जाने जुन भर्‍याङ्ग रहेछ, त्यो भर्‍याङ्गमा बडामहारानी सरकार लडेको पनि होइन, यस्तो अडेस लागेर बसिरहेको जस्तो लाग्यो मलाई । त्यस्तो अवस्थामा त्यहाँ फेला पार्न पुग्यौं र हामीले तुरुन्त उहाँलाई पनि ल्याएर गाडी लोड गर्‍यौं । लाष्टमा खड्गविक्रमलाई हामीले त्यही विलियर्ड रुमबाट निकालेर गाडीमा लोड गर्‍यौं । त्यहाँबाट फिनिस भएर म त्यसपछि भित्र छिरें ।

**ह. पदमबहादुर तामाङ्ग**

मेरो नाम हल्दार पदमबहादुर तामाङ्ग, म त्यति बेला सुतिराखेको थिएँ । अनि एक्कासी त्रिभूवन सदन जाने भनेर हल्लाभयो । गाडिमा बसेर त्रिभूवन सदन पुगियो । त्रिभूवन सदन गएपछि गोरख शम्शेरलाई डोराएर ल्याएर हाम्रो गाडिमा राख्यौं । अनि हस्पिटल लगियो । त्यति नै हो ।

**(ग) उपचारमा संलग्न चिकित्सकहरुको कथनहरु**

**चिकित्सकहरुसंग समितिले लिएको वयान**

*समिति:* १९ गतेको घटना सम्बन्धमा घटना क्रमलाई जान्ने उद्देश्यले घटना घट्ने वित्तिकै उपचारमा संलग्न डाक्टरसाहेवहरुलाई हामीले वोलायौं। घटना पछि आयोगलाई मुख्य रुपमा चाहिएको अस्पतालमा ल्याउँदा खेरी विरामीलाई कस्तो अवस्थामा ल्याइयो मलाई फलानोले यसो गरेको या यसो भएको थियो, घटना किन भयो भन्ने सम्बन्धमा कुनै किसिमले कुनै किसिमको कुनै अभिव्यक्तिहरु दिएको भए यहाँहरु मध्य कसैले त्यो सुन्नु भएको भए के कस्तो अभिव्यक्तिहरु सुन्नुभयो, विरामीको र मृतकको समेत अवस्था कस्तो थियो? विरामीको उपचारमा कुनै विशेष कठिनाई जस्तै व्यवहारिक कठिनाई आदि केही त्यस्तो अप्ठ्यारो मशसुस गरिएको थियो कि र यसको अतिरिक्त मेडिकल प्वाइन्ट अफ भ्यूबाट हामीलाई तथ्य बुझ्नको लागि सहयोग हुने केही चिजहरु छन् भने यो चिज भन्दै भन्ने र केही यहाँहरुका केही सुझाब छ भने त्यो पनि आओस् भनी श्री वीरेन्द्र सैनिक अस्पतालमा आकस्मिक कक्षमा रहेका स्वास्थ्यकर्मीदेखि लिएर हालसम्म उपचारमा संलग्न रहेका चिकित्सकहरुसंग समितिको आफ्नो कार्यालयमा नै बोलाई २०५८।२।२८।१ मा समितिले जानकारी लियो। त्यस क्रममा सबभन्दा पहिला रात्री शिफ्टमा ड्युटीमा रहेका मध्ये सबभन्दा पहिला एटेण्ड गर्ने स्वास्थ्यकर्मीबाट जानकारी लिन शुरु गरियो वहाँहरुले दिनु भएको जानकारी देहाय बमोजिम छः-

उपचारमा संलग्न चिकित्सकहरुले उच्चस्तरीय समितिको कार्यालयमा आई दिएको जानकारी

**खगेन्द्रबहादुर श्रेष्ठ Royal Surgeon**

डाक्टर : ६ जना आई सकेकोलाई त हामीले केही गर्न सक्ने नै थिएनौं । अब बाँकी २ जनालाई चै हामीले बचाउन सकेनौं । अब As a co-ordinater, as a Royal Physician मैले त्यही हेरी राखेको थिए की हामीबाट केही Lapses भएको छ कि ? हुन त Ideal त पक्कै भएन । Confusion र choas नभएको होइन तर तै पनि हामीले चैं सबै Resources Mobilization गर्न सक्या छौं । Consultant हरु ल्याउन सक्या छौं । तर चाहीं हामीले काम गर्न ।

समिति : वहाँहरु वाहिरबाट कि भित्रबाटै ल्याइयो ?
जवाफ : देशभित्र बाटै । टिचिङ्ग हस्पिटल, वीर हस्पीटल र मिलेटरी हस्पिटलकै अब अरु यो जम्मै चीजहरुबाट थाह भै हाल्छ । अब अरु स्वर्गीय भइ सकेकाहरुको चाहीं वहाँहरुको यो ल्याएको छ ।

समिति : देखाउन लायक हुने बाहेक यो बाच्न सक्ने अवस्थामा पुगेकाहरुको हकमा कुनै प्रकारको नयाँ, कुनै प्रकारको एक्सप्रेशन, प्रारम्भमा त्यस्तो केही पाइयो ?
जवाफ : अहँ, बोल्न सक्ने अवस्थामा कोही ..........।

समिति : कुनै शब्द उच्चारण गरेका, भनेका ..........?
जवाफ : त्यस्तो चाही कुनै रिपोर्ट थाह छैन । कुमार गोरख हिडेरै आउनु भएको । ऐया ! मेरो त हातै गैसकेको छ । औंलै टुटी सकेको छ भन्दै एल्ले हान्यो, उल्ले यस्तो गऱ्यो, यसो भयो भन्ने त कुरै भएन । त्यसपछि त एक पछि अर्को आइसक्यो । His Majesty चाहीं स्वर्गीय अवस्थामा आउँदाखेरी यस्तो Chaos भयो, कसलाई के भो कहाँ के भएको छ, सोद्धा खोज्दा खेरी पनि भन्ने कुरा भएन । सुन्न पनि सुनिएन र रेकर्ड पनि गरिएको छैन । एडिसीहरुलाई पनि के के भएको हो ? भन्दा खेरी खै के भएको हो पहिले बचाउन कोशीस गरन भन्ने किसिमको मात्रै जवाफ आयो ।

समिति : डेथ भई जो त्यहाँ पुगेका थिए तिनीहरुमा कुन प्रकारको गोली थियो भनि एक्जामिन गर्न वा झिक्न त्यहाँ चाहीं केही तत्परता देखाइएन ?
जवाफ : त्यो चाहीं केही गरिएन । डेथ हुनासाथै हामीले अलग्गै राख्यौं। डेथ भएपछि यतिको बेर त राख्नु भएन अप्रेसन नै पनि हामीले विहान ५-७ बजेसम्म गरेका थियौं ।

समिति : बाँचेकाहरुबाट पनि गोलि निस्केका छन् ।
जवाफ : यी सबै राखिएका छन् र आयोगलाई सबै दिन पनि सकिन्छ ।

समिति : अरु हामीलाई आवश्यक पर्ने केमिकल टेष्ट गर्नु पर्ने, वैज्ञानिक परीक्षण गर्नु पर्ने, कुनै बस्तु ....... गोली .... ?
जवाफ : त्यस्तो केही छैन, अरु यति मात्रै हो ।

समिति : यो दिन लाग्नु भएको कसकोबाट प्राप्त गर्नु भएको रे ?
जवाफ : कुमार गोरखबाट । यी यसमा लेखेकै छ । अब उक्त सबै डाक्टरको, विभिन्न डाक्टरहरुले लेखेको, हेरी राखेको, मैले हेरेकै छु । यो चाँही पढ्नु भयो भने सबै डाक्टरहरुको कन्क्लुजन हो । तर म निवेदन गर्न चाहन्छु कि हामी पनि इन्भेष्टिगेशन गर्न चाहन्छौ । ताकि पछिलाई राख्नलाई ............ । यसको एउटा फोटोकपी .........

समिति : यो पोष्टमार्टम त भएको छैन, अनि जति कुरा कज अफ डेथ भनेर रिपोर्टमा आएको छ, त्यसको मेडिकल प्वाइन्ट अफ भ्यूबाट एक्युरेसी कतिसम्म हुन्छ? मेडिकल साइन्सको हिसावबाट ?
जवाफ : पोष्ट मार्टम त भएको छैन। अब यसको नेचर अफ इन्जुरी भनेर मैले लेखेको छु, यसमा हाम्रो फारेन्सिक मेडिसिन एक्स्पर्टहरु राखेर सोध्यो भने वहाँहरुले ज्यादा आधिकारीक भन्न सक्नु हुन्छ । जहाँसम्म लाग्छ, यो चाहीँ अब इन्जुरी भएको, पर्फेक्ट इन्जुरीहरु भएको छ। एकैठाउँमा ३।४ वटा प्वालहरु हुनुको मतलव ब्रष्ट फायर भएको भनिन्छ ।

समिति : डाक्टर शाहेव, यसमा पर्नेहरुको पोर्ष्ट मार्टम गर्न आवश्यक नदेख्नु भएको हो कि वा अरु कुनै कारण छ?
जवाफ : यो पोष्ट मार्टम गर्नु पर्दछ कि भनेर कुरा पनि चलेको थियो, तर पछिबाट अहिले पोष्टमार्टम गर्नु पर्दैन, राजदरवारको, हिज मेजेष्टीको पोष्टमार्टम हुँदैन। हिज मेजेष्टिको पोष्टमार्टम गर्नु पर्दैन। अब त्यही सिलसिलामा सबै भएको हुनाले यस्तो भन्ने किसिमको कताकताबाट सुनेजस्तो लाग्यो।

समिति : मेडिकल साइन्स अनुसार गोली लागेर नै मृत्यु भयो भन्ने निश्चित भएपछि पोष्ट मार्टम नगरेर पनि प्रमाण स्टावलिस गर्न सकिन्छ?
जवाफ : मेरो विचारमा सकिन्छ । कार्यविधिकै कुरा मात्रै हो, यसमा हरेकका इन्जुरिहरु लेखिएको छ। यसैले सकिन्छ ।

समिति : विष वा अल्कोहल सेवनबाट मृत्यु भएको वा अज्ञात कारणबाट मृत्यु भएको हो भन्ने भएको भए पोष्ट मार्टम गर्न आवश्यक हुन्थ्यो?
जवाफ : यस्तो विष सेवन इत्यादी गरेको भए तुरुन्त त्यसैवेला अर्गानहरुको, ब्लडहरुको, युरियनहरुको, टोक्सिकेवल इक्जामिन, टप लेवलको इक्जामिनेशन, अरु चाहिने बायो केमिकल टेष्टहरु हेर्न सकिन्छ, अचानक कोशीश गर्दा गर्दै मृत्यु भएको थियो । मृत्युको कारण चाँही यो कारणले भयो भनी हामीले डेथ सर्टिफिकेटमा लेखेकै छौं । उक्त सर्टिफिकेटमा लेथल इन्जुरी, पेनिट्रेटिङ्ग इन्जुरीज इन द चेस्ट भनेर दिएकै छ ।

समिति : यहाँको भनाइ अनुसार यी कारणहरुले पनि पोष्ट मार्टम गर्नु परेन?
जवाफ : परेन भनेर म चाँही भन्न सक्तिन।

समिति : हिज मेजेष्टिको पोष्ट मार्टम गर्नु हुँदैन भन्ने विषयलाइ एक छिन मानौं, तर कुन चाहीँ गनबाट गोली चल्यो? त्यो गनको कसको नाममा लाइसेन्स छ, इत्यादी भन्नका लागि पनि एउटा डेड बडीबाट गोली निकाल्नु पर्दैन र?
जवाफ : हैन तर त्यस्तो केही देखिएको छैन । एक्सरे गरिएको ठाउँमा चाहीँ धेरै जसो थ्रु एण्ड थ्रु भएको छ। जति देखिएको ठाउँमा पनि टुक्रा टुक्रा मात्र देखिएको छ । बालिष्टिक एक्सपर्टहरुले वा गन एक्सपर्टहले चाहीँ पत्ता लगाउन सक्छन्।

समिति : एक्सरेबाट पत्ता लगाउन सक्छन्?
जवाफ : त्यो हेल्पफुल हुन सक्छ । अनि त्यो वालिष्टिक एक्सपर्टले चाहीँ गर्न सक्छ। यो गन छ भनी शंका लागेको छ भने त्यो गनको यस्तो हुन सक्छ सक्तैन भनेर म्याच अप गर्न सकिएला ।

समिति : क्राउन प्रिन्सको सम्बन्धमा ........ ?
जवाफ : क्राउन प्रिन्सकोमा गोली नै छैन । थ्रु एण्ड थ्रु भएको हो ।

समिति : क्राउन प्रिन्स सर्भाइव भइ बक्स्यो, प्याथोलोजिकल टेष्ट लगायत सबै रिपोर्टहरु समावेश गरिएको छ-छैन ?
जवाफ : प्याथोलोजिकल भन्दा पनि हाम्रो त्यहाँ क्लिनिकल इम्पोर्टेण्ट्सलाई मात्रै गरियो। पहिले नै यस्तो छ है भनिएको पनि थिएन। यो पनि गर्ने भनिएको थिएन।

समिति : एज अ कमन पिपुल्स, विहानैपख त काठमाण्डौ भरी वा मुलुकभरी नै हल्ला भैसकेको थियो। क्राउन प्रिन्सले हिज मेजेष्टिलाई मात्रै नभै आफ्नो प्यारेण्टलाई र रोयल फ्यामिलीलाई समेत फायरिङ गरी आफूले आफै सुसाइड गरेको भनी

हल्ला चलेको थियो। त्यस अवस्थामा पनि क्राउन प्रिन्स सर्भाइभ हुँदाकै अवस्थामा के रहेछ त यो भनी जाँच्नु पर्ने आवश्यकता डाक्टर शाहेवहरुले देख्नु भएन? यो त आफ्नै एउटा नयाँ मेडिकल खोजको लागि पनि चाहिने विषय होइन र?

जवाफ : अब यो जति जति समय वित्दै गयो, उती उती त्यसको भ्यालु पनि कम हुँदै जान्छन्। किनकि त्यो डिस्पोज भएर जान्छ। शुरुमा आउनासाथै यो पनि छ भनेर ल्याएको भए हुन्थ्यो। लाइफ बचाउने तिर अप्रेशन भयो। बिहानतिर सिद्धियो। त्यसपछि लाइफ सपोर्टतिर भेन्टिलेटरतिर राखेको छ। यो सबैचिज गरेको हुनाले त्यतातिर चाहीं राम्रो ध्यान गएन।

समिति : बर्तमान बडामहारानी लगायत जो अहिले घाइते हुनु भएको छ, वहाँहरुको भित्र त्यस्तो कुनै टेष्ट गर्न सकिने केमिकल्सहरु फेला पऱ्यो परेन। जस्तो कि हामीले अहिले कुमार गोरखको निकालेर आयौं।

जवाफ : त्यस्तो चाहीं हामीले भित्र गएर हेरेका छैनौं । कपडाहरु वहाँहरुको निकालेर राखेका छौं। त्यसलाई हामीले डिस्पोज गर्ने हो कि जे होस् भ्यालुएवल त धेरै चिज छ।

समिति : घाउमा, इत्यादीमा त्यस्तो चिज केही .......?

जवाफ : त्यस्तो चाहीं केही छैन ।

समिति: : बडामहारानीको अवस्था क्लियर भयो ? बडामहारानीको दाँतहरु जम्मै छन् ?

जवाफ : दाँत छ, दाँत सबै छन् । दाँत नभएत गाह्रो हुन्छ।

बडामहारानीको चाहीं अब म पढुँ :

"Her Majesty queen Aiswarya Rajya Laxmi Devi Shah also comminuted fracture of skull, large butterfly piece of bone dangling out (posteriorly)" पछाडीबाट हड्डी एकदमै टुक्रै टुक्रा भएको र ठूलो Butterfly typeलाइक भनेको हड्डी एउटा खुस्केको। Brain matter distorted(pulp) and coming out, 80% brain mass lost. त्यसो भएपछि त बाँच्ने कुरै छैन । अनि अरुमा चाहीं face distorted- अनुहार विग्रेर चिन्न पनि गाह्रो। multiple facial injuring

Penitrating injury throught frontal bones: अघिल्लो हाडबाट गन्नै नसक्ने गरी गोली छिरेका गन्ने कुरा पनि आएन ।

Fracture of left orbit

Fracture of left mandible with distortion of skin and sub-contanuous tissue.

Small cut injury over the lower leap.

four entry wounds left shoulder and left upper chest

three exit wounds each approx 2cm. x 2cm. left infra scapular region.

अब यो पोष्ट मार्टम गर्दा पनि यति गोली लागेको को यस्तै यस्तै हो । हुन त इन्टर्नल गऱ्यो भने अरु पनि देखिन्छ।

समिति : अब यही कुराले पनि देखाउँछ कि ४ वटा इन्ट्री घाउ र ३ वटा एक्जिट घाउ भनेपछि एउटा गोली भित्रै बस्यो।

जवाफ : त्यो भन्न सकिन्न। एउटा गोली निस्कँदा बनेको ठूलो प्वालबाटै अर्को गोली निस्केको हुन सक्छ। हामीले देख्दाखेरी एक्जिट वण्डस् ३ वटा जस्तो लाग्यो।

समिति : ब्रेनको अप्रेशन गर्दा अल्कोहल इत्यादी भेटिएन?

जवाफ : मैले डाक्टरहरुलाई सोध्दाखेरी अल्कोहोलको पार्ट चाँही छैन ।

समिति : त्यो अप्रेशन गर्ने डाक्टर को हुनुहुन्थ्यो?

जवाफ : उपेन्द्र देवकोटा टीम लिडर, शिल्पकार भन्ने टिचिङ्गको न्यूरो सर्जन र हाम्रो न्युरो सर्जन अच्यूत शर्मा ३ जना र अर्को एनेस्थेसियन पनि छ । हामीले के छ भनेर सोध्यौं त्यस्तो केही छैन भनेका छन् । यो चाहीं कसैले रिपोर्ट लेखेको छैन।

समिति : यहाँ पठाएको रिपोर्ट को प्रुफ रिडिङ्ग सम्बन्धी समस्या देखिन्छ । Correct गरी पठाइ दिनु होला ।

जवाफ : सामान्य कम्प्यूटर मिस्टेक भएकोले सच्याएर हामी पठाउने छौं। जस्तै Details of casulties भन्नु पर्नेमा details of injuries भएको छ।

समिति : हामीले यी रिपोर्टका कतिपय कुराहरु बुझ्नका लागि डाक्टर साहेवले कसैलाई refer गरिदिनु हुन्थ्यो कि ?

जवाफ : सबभन्दा राम्रो चाहीँ सिभिल सर्जन खास गरेर टिचिङ्ग हस्पिटलको पनि छ नि। उता विशेषज्ञहरु पाइन्छ । यो इन्फरमेशनमा तिमीहरुको के डेडुकेशन छ ? भनी सोध्न सकिन्छ ।

समिति : टिचिङ्गमा यसको विशेषज्ञ चाहीँ को हुनुहुन्छ ?
जवाफ : फोरेन्सिक विभागमा टिचिङ्ग हस्पिटल मै बुझ्दा थाह हुन्छ।

समिति : अर्को HRH Princess Komal Rajya Laxmi Devi Shah को पनि हेर्नु पर्ने छ ...... ?
जवाफ : अँ विवरण यस प्रकार छ :
HRH Princess Kamal Rajya Laxmi Devi Shah. Gaping wound in left anterior chest wall and left acapular region.
Multiple rib fractures on left side. हामीलाई थाहा भए अनुसार ४ वटा रिब्स गएको छ। Left hemothoracs बायाँ lungs बाट रगत चुहेको छ । हामीले तुरुन्तै team पठाएर tube लगाई रगत निकाल्यौं। वहाँलाई operation theatre मा पनि लग्न नसकेर corridoor मा operation गरेका थियौं ।

समिति : यो मेजर अपरेशन हो?
जवाफ : एकदम हो । अनि multiple lacerations of both lobes of left lang. यो अपरेशन गरे पछि देखिएको हो ।

समिति : Laceration due to bullet ?
जवाफ : Laceration एउटा bullet ले छेडेर पनि हुन्छ अर्को bullet बाट Vibration ले पनि हुन्छ। त्यसले पनि damage गर्छ अब operation गर्ने हाम्रो गोविन्द शर्मा, खड्गराम भण्डारी पनि यही आउनु भएकै छ ।

समिति : Penetrating wound चाही २ वटा भयो हैन डाक्टर साहेव?
जवाफ : अब यस्मा gaping normal in left amteriour chest wall and left scapular region भन्दा खेरी एता पनि छ तल पनि छ भन्दा वाहिरबाट पनि हुन्छ। तर probably it is a through and through bullet injury हुन सक्छ।

समिति : Two side गर्दा खेरी त्यसलाई एउटा penetrating normal चै एउटा मात्रै ... ?
जवाफ : वेग्लै track नदेखिइ भन्न सकिन्न अर्थात् entry भनेर सानों प्वाल तथा exit भनेर ठूलो प्वाल भएदेखि missile injury हो भनेर हामीले पढ्न सक्छ ।

**डा. अन्जनी कुमार (रोयल सर्जन):-**

९ बजीकन ५० मिनेटमा चावेल मेरो घरमा खवर गयो आर्मि हस्पीटल तुरुन्त आउ भनेपछि १०:१५ मा हस्पीटल जाँदा त आइ वाज सर्प्राइज त्यहाँ देख्दा त एकदम क्लियर छ । किनभने सवैजना वडा आश्चर्यको स्थितिले हेर्दै हुनुहुन्छ वट देन सवैमान्छेहरु दे वेयर इन्गेज टु रिसेसिटेड द पेसेन्ट । पहिला टेवलमा जाँदाखेरी हिज म्याजेष्टी वाज अल्रेडी डिक्लेर डेड भइकन पनि आफ्नो हिसावले मैले पनि जाँच गर्ने कोसीस गरें । पल्स पनि थिएन, ब्लड प्रेसर थिएन, रेस्पीरेटरी थिएन । पुपिल । त्यसपछि अगाडि गइकन श्रुति सरकार र कुमार गोरख कुमारलाई देखें । गोरख त हिंडी आउँदै हुनुहुन्थ्यो । हि डिडन्ट लाईक टु गो वाई स्टेचर तर हि वाज कम्प्लेन पेन इन द चेष्ट, र उहाँको औला पनि छैन भनेर उहाँ भन्दै हुनुहुन्थ्यो । श्रुति सरकारको त्यतिबेला पनि पल्स पर्पेट गर्दै थिए । ब्लड प्रेसर वाज नट रेकर्डेवल, हामीले त्यही पछि रिसीसिटेसन भनेपछि फूइट सुरु गर्‍यो, आर्टिफिसीयल रेस्पीरेसन सुरु गर्‍यौं, गर्दा गर्दै विद इन २ मिनेट भित्रैमा उहाँ कोल्याप्स गरीवक्यो,त्यसपछि हामीले एटेन्सीयन दियौं टुवार्ड गोरख, हि वाज वेटर, त्यसैले हि इज स्टेवुल त्यसपछि आई वेन्ट अन लुकिङ्ग अदर पेसेन्ट । अदर पेसेन्टमा त्यति बेला नै कुमार खड्ग विक्रम उहाँ पनि आउनु भयो। हि वाज अल्सो इन ब्याड, मल्टीपल इन्जोरी थियो चेष्टमा एकदम इन्जोरी थियो उहाँलाई पनि रिसेसिपेट गर्दा गर्दै विदीन मिनेट् उहाँ पनि कोल्याप्स गर्नु भयो । हामीले सायद केही पनि गर्न सकेनौं उहाँलाई रिसेसिपेट गर्दा गर्दै गइहाल्नु भयो । त्यसपछि त्यति बेला नै क्राउन प्रीन्स दीपेन्द्र सवारी भयो । हि वाज स्मल इजोरी अन द लेफ्ट साइट, विज इन्जोरी इन द राईट साईड । हामीले प्राक्टीकल्ली भन्यौं यो चाही वुलेट इन्जोरी हुनै पर्छ भनिकन रिसेसेटरी गर्‍यौं । उहाँको रेस्पीरेसन पनि ठिक थियो, पल्स पनि ठिक थियो । पुपिल्स वाज फिक्स, हि कुड नट मुव एनि अफ लिम्वस् । हात खुट्टा कुनै चलाउन सकिवक्सेको थिएन । त्यसकारण तै पनि उहाँलाई अव केही गर्नुपर्छ भनिकन । डाक्टर रायमाझी, डाक्टर खगेन्द्रजी सवैसंग डिसाइड गरिकन हामीले के भन्यौं, नाउ लेट्स कल द न्यूरो सर्जन डाक्टर देवकोटा र सर्जन फ्रम सम अदर हस्पीटल, एनेस्थेटिकल फ्रम अदर हस्पीटल भनिकन हामीले वि समन फर न्यूरोसर्जन टिम एन द एनेस्थेटिस्ट, त्यहाँ गइकन

हामीले हेर्‍यौं त्यसपछि हामीले देख्यौं द डेड वडी अफ हर म्याजेष्टी क्वीन, डेड वडी अफ प्रिन्स निराजन, एण्ड ३ जनाको डेड वडी तलै राखेको थियो। अनि हालको वडामहारानी सरकार कोमल सरकारको कम्प्लेन पेन इन चेष्ट, मल्टीपल इन्जरी इन चेष्ट, सि वाज स्टेवल, फेरी उहाँलाई अव अपरेसन गर्नुपर्छ उहाँको भनिकन माथि पठाइदियौं । अन्तमा धिरेन्द्र शाह सरकार हि हाएड् विग इन्जरी इन द राइट पार्ट अफ चेष्ट, अपर पार्ट अफ द चेष्ट, क्यापीटल फ्याक्चर थियो । उहाँलाई पनि स्टेवल भएको हुनाले इन्टेभेसन गरीकन उहाँलाई पनि अर्को अपरेसन गर्नुपर्छ भनिकन माथि पठाइदियौं । दिस इज द स्टल, तर के भने मेरो विचारमा मष्ट अफ द पेसेन्ट, जति आएको छन् इफ दे आर रिभिइ, सवैको दे हाव रिसिभ एप्रोप्रियट सिसेस इन मेजर्स, त्यसमा सवैजना वचाउन बढा अफ्ठयारो हुन्छ । मेरो विचारमा ५, ६ जना मान्छे दे आर वेटर तिनिहरुलाई हामीले सक्सेस गरी अपरेसन थिएटरमा पठाइदियौं ।

<u>डा० पूर्णराज जोशी (थोरासिक एनेटेस्ट्रोलोजिष्ट) (टिचिङ्ग हस्पिटल)</u>:- म टिचिङ्ग हस्पिटलबाट मलाई सुतिसकेको मान्छेलाई डा० भुवन कोइरालाले डाक्टर क्वाटरमा उहाँले बोलाउन आउनु भयो । एकदम धेरै ठूलो डिज्यास्टर भयो । रोयल फ्यामली इन्भल्भ भएको जस्तो सुनिन्छ । त्यसैले तुरुन्तै जानु पर्‍यो भनेर म पाँच मिनेटमा तयार भएँ । बाहिर त प्रोफेसर गोविन्द शर्मा कारमा वेट गरिराख्नु भएको थियो । अनि त्यहाँ डा० मित्रलाल श्रेष्ठ अनि डा० सुशील सिल्पकार सहित हामी पाँच जना गइहाल्यौ मेल्ट्री हस्पिटलमा । हामीले धेरै अटकल वाजी गर्दै गर्दै कुरा गर्दै गयौं। तर केही थाहा थिएन खास के भएको हो भनेर । अनि मेल्ट्री हस्पिटल पुग्नासाथै हामीलाई थेटर तिर जानु भनेका हुनाले हामी सिधै त्यहाँ गयौं । चेन्जिङ्ग रुममा हामीले डा० रायमाझिलाई भेट्यौं । उहाँ आउनु भयो। उहाँले हामीलाई समाचार सुनाई हाल्नु भयो । किङ्ग, क्विन र प्रिन्स निराजन र श्रुति डिक्लीएर डेथ अब दीपेन्द्र पनि नराम्रो अवस्थामा छ । तपाईहरु पनि भित्र आउनु भन्नुभयो । यो चेन्ज गर्नलाई, लुगालाई हामीले पाँच छ: मिनेट भन्दा बढी पर्खनु पर्‍यो अनि भित्र चेन्ज गरेर पस्नासाथ त्यहाँ कोरीडोरमा पनि विरामी थियो । थिएटर दुई वटा पनि विरामी राखिराखेको थियो । अनि मेरो आफ्नो विषय भएको हुनाले सबभन्दा पहिले म एक नम्बर थिएटरमा गएँ । त्यहाँ डा० जुजु प्रोसिको हुनुहुन्छ । विरामीलाई त टाढैबाटै चिनिहाँलें अब दीपेन्द्र सरकार भनेर । अनि डा० उपेन्द्र देवकोटा पनि देंखे । सबै कन्ट्रोलमै सिचुएसन भएको हुनाले मेरो आवश्यक त्यहाँ छैन भनेर तुरुन्तै अर्को छेउको थिएटर नम्बर दुईमा गएँ त्यहाँ जाँदाखेरी मैले डा० गौतम शाक्यले त्यहाँ टेबुलमा राखेको विरामीलाई इन्टीग्रेट गर्न कोशिस गरिराख्नु भएको । उहाँलाई अलि अफ्ठ्यारो अलि डिफिकल्ट इन्काउण्टर गरिराख्नु भएको थियो । त्यसैले उहाँले त्यो एक्टम छोडेर फेरि अक्सिनेट गरिराख्नु भएको थियो । मलाई देख्ना साथ डाक्टर साहेब तपाई कोसिस गर्नु हुन्छ कि भन्नुभयो। मैले हुन्छ भनेर फेरि अक्सिनेट गरें, पनि फेरि गर्दाखेरी सजिलो देखियो । मैले ट्यूव पनि राखें । त्यस पछि उहाँले फर्दर यो विरामीको एनास्थेसिसको लागि कन्टिन्यू गर्नु भनेर उहाँले मलाई छोडेर उहाँ अर्कै काममा लाग्नु भयो । त्यहाँ अर्को एनास्थेसिस मध्ये डा० नगेन्द्र के.सी. हुनुहुन्थ्यो । हामी दुई जनालाई त्यो विरामीलाई एनाथिसिस दिने, कन्ट्रोल गर्नतिर लाग्यौं । विरामी धीरेन्द्र शाह भन्ने थाहा भयो । अनि डा० शशी राई वीचमा हामीसंग ज्वाइन गर्न आउनु भयो । त्यसैले दुई जना डा० नगेन्द्र के.सी. र डा० शशी राईले मलाई हेल्प गर्दै हुनुहुन्थ्यो । धीरेन्द्र शाहको अवस्था धेरै नै नराम्रो थियो । ब्लड प्रेशर कहिले रिकर्ड हुने कहिले नहुने हार्ट रेट पनि फ्लोकचेट भैराख्ने त्यसैले त्यहाँ फ्ल्यूट डिमा हेमाक्सेल र अरु फ्ल्यू डिमा अरु तीन चार जना डाक्टर साहेबहरु पनि हुनुहुन्थ्यो मद्दत्त गर्न । हातहरुले थिचेर दिइराख्नु परेको थियो । र वीचैमै हामीले ब्लडप्रेसर बढाउने डोल्फामिन भन्ने औषधि पनि शुरु गरेको थियौं । जसोतसो हामीले मेन्टेन गरिराखेको थियौं ।

अनि वीचमा कार्डीलोजिष्ट डा० मृगेन्द्रराज पाण्डे पनि ई.सि.जि. हेर्न आउनु भएको थियो । उहाँले नै धीरेन्द्र शाहलाई पहिले एम.आर.आई. भैसकेको भन्नुभयो । त्यो थाहा पाएँ । त्यस्तै लगभग साढे बाह्र बजेतिर होला बाहिर कोमल सरकारको अवस्था धेरै नै सिरिएस भयो । डिट्यूरेट भयो । अप्रेसन तुरुन्त गर्नु पर्‍यो भन्नुभयो। अनि त्यही बेलामा मसंग मलाई हेल्प गरिराख्नु भएको डा० शशी राईले आवश्यक पर्‍यो भने हामी बाहिर पनि शुरु गर्न सक्छौं एनेस मेसिन ल्याउन सक्छौं भन्नुभयो । त्यसैले तपाई गएर तुरुन्त सुरु गर्नु भनेर मैले नै उहाँलाई भने किनभने उहाँ मलाई हेल्प गर्दै हुनुहुन्थ्यो ।

अनि डा० नगेन्द्र के.सी.लाई त्यहाँ राखेर धीरेन्द्र शाहलाई हेर्न लगाएर डा० शशी राईलाई कोमल सरकारलाई एनास्थेसिसा दिनलाई म आँफैं गएर हेल्प गरें । अनि इन्ट्रीभेसन, एनास्थेसिस गरे पछि म फेरि फर्केर आएर धीरेन्द्र शाहलाई नै हेरिराखें । अप्रेसन सके पछि बाहिर कोमल सरकार भए तिर डा० गोविन्द शर्मा आउनु भयो र पूर्ण बाहिर कोमल सरकारको अवस्था धेरै राम्रो छैन । तिमी पनि गएर एकताल हेरिदिनू भन्नुभयो । अनि म त्यसो भए नगेन्द्र के.सी.लाई त्यही राखेर फेरि हेर्न गएँ । साँच्चै यो अक्सिजनको मात्रा धेरै नै कम रिड भैराखेको थियो । अब सेवेन्टी फाईभ पर्सेन्ट सेचुएसन मात्र । अनि त्यही कारणले मैले अब त्यहाँ भएकोलाई सक्षम गरेर एम्बू गरेर लंग्सलाई फुलाएर फेरि यो सेचुरिसन अप्टिमाइज गरेर म फेरि फर्किएँ र करिब तीन साढे तीन बजेतिर धीरेन्द्र शाहको अप्रेसन सकियो । अप्रेसन सके पछि मैले यो उसको हेमोगाइनामिक ब्लड प्रेसर र हर्ट एकदम अनस्टेबल भएको धेरै खुन दिनु परेको हुनाले यो एउटा सेन्टर भेनेस क्याफेटर सि.भि.पि. यो प्रेस नाप्नलाई एउटा क्याफेटर पनि मैले राखें । त्यस पछि धेरै लामो समय लागेको केस त्यसमा पनि धेरै ब्लडप्रेसर फ्ल्कचूएट भएको हार्ट एकदम वीचमा एक खालको अवस्था पनि आएको थियो र विरामी पनि धेरै चिसो भैसकेको हुनाले मैले ट्यूब झिकिन र त्यो उहाँलाई नदुख्ने प्यारालाइजिक गरेर प्रशोपेक्टिभ वार्डमा राखेर आफैले गरेर अनि शास फेर्ने मिसिनमा राखेर त्यहाँ जिम्मा गरेर आएँ । त्यस पछि म फर्किएर आएँ ।

अनि मलाई त्यहाँ थिएटर नम्बर एकमा पर्खिराखेको रहेछ । त्यहाँ कुमार गोरख समशेरलाई राखिराखेको रहेछ । अनि मलाई डा० भुवन कोइरालाले बोलाउन आउनु भयो अप्रेसन गर्नलाई । गोरख समशेर मैले त टेबुलमा सुतिराखेको देखेंको थिएँ । तर होस् मै थियो । कुरा गर्न सक्ने अवस्थामा थियो । त्यसैले मैले केही प्रश्नहरु मेरो एनास्थेसिस दिनु अगाडि सोधें । पहिला अप्रेसन भएको थियो कि थिएन ? अनि कुनै औषधिको एलर्जीको हिष्ट्री छ कि छैन भनेर अनि सिलसिलामा मैले लाष्ट टाइम कहिले खाएको भनेर सोध्दाखेरी लन्च टाइम्मै खाएको भन्यो । अनि मैले बेलुका के खाएको थिएन भनेर डिनर भएको थिएन । तपाईले ड्रिंक गर्नु भएको छ कि छैन भन्दाखेरी उहाँले ड्रिंक अलिकति गरेको छु भन्नुभयो ।

अनि त्यस पछि एनास्थेसिसको बारेमा अलिकति बताएर मैले एनास्थेसिस सुरु गरें र गोरख समशेरको एनास्थेसिस दिनलाई मलाई डा० नगेन्द्र के.सी. र डा० शशी राईले हेल्प गर्नु भयो । अनि अप्रेसनभरी उहाँको अवस्थामा सन्तोषजनकै भएको हुनाले मैले अन्तिममा ट्यूब पनि झिके । ट्यूब झिक्दाखेरी उहाँ होसमा पनि आइहाल्यो । त्यस पछि उहाँलाई पोष्टअपरेटिभ वार्ड ट्रन्सफर गऱ्यौं । त्यस पछि तीनवटा केसहरु कोमल सरकार, धीरेन्द्र र गोरखको बारेमै हेल्प गर्ने रेखदेख गर्नलाई बसें र आठ बजेतिर टिचिङ्ग हस्पिटलको सबै त्यही फर्किनु भयो । डा० रायमाझीले मलाई तपाई नजानुहोस् एकछिन बस्नुहोस् । बरु तपाईलाई हामी यहाँ ब्रेकफाष्ट दिउँला अथवा आवश्यक पऱ्यो भने हामी आफैं पुऱ्याइदिउँला भन्नुभयो । त्यही कारणले म एक घण्टा जति अरु बसें र विहान मेल्ट्रि हस्पिटलको एम्बुलेन्सले नै मलाई एक्लैनै टिचिङ्ग हस्पिटलसम्म पुऱ्याइदिएको हो ।

<u>डा० जोशी (कन्सलटेण्ट प्लाष्टिक सर्जन, वीर हस्पिटल)</u>:- मलाई शुक्रवारको रात १०:०० बजे डा० कृष्ण रायमाझीले मलाई फोन गर्नु भएको थियो तुरुन्तै आउनु भनेर । अनि म त्यहाँ पुग्दाखेरी थिएटर नम्बर वन पठायो । त्यहाँ क्राउन प्रिन्स सुताई राखेको थियो। अप्रेसन सुरु भएको थिएन । अनि इण्ट्री एनास्थेसिस प्वाइन्ट लेफ्ट साइडमा थियो बुलेटको । अनि राइट साइड एक्जिट प्वाइन्ट ठूलो प्वाल थियो त्यहाँ। टू इन्च वाई टू इन्च साइज अनि अप्रेसन सुरु भयो । मेरो काम यो प्वाल बन्द गर्नु परेको थियो । बन्द गर्नलाई त्यो छाला घुमाएर त्यो प्वाल बन्द गरेको थिएँ । अनि त्यो रात अरु हेरेको दिन प्रिन्सेस शोभाको यहाँ हात काटेको यो त्यहाँ हात काटेको ठाउँमा नर्भ अलनान नर्भ इनट्याग छ कि छैन भन्ने त्यो पनि हेरेको थिएँ । अनि अर्को एउटा गोरखको त्यो एन्फोटेसन देखाउन पनि हेल्प गरेको थिएँ । त्यो रात त्यति गरेको मैले। त्यसपछि दुई दिन पछि हालसम्म शोभाको र केतकीको प्लाष्टिक सर्जरी गर्नु परेको थियो । त्यो मैले हेरिराखेको थिएँ मैले ।

<u>प्रश्न</u>:- यसो हेर्दा सबै भन्दा अप्ठ्यारो तपाँईलाई नपरेको क्राउन प्रिन्सको त्यो गोलीको घाउ हो कि होइन भनेर?

<u>जवाफ</u>:- त्यो होइन, हाम्रो विचार त्यस्तो बुलेट निक्लने भन्दा अरु चीज हुनै सक्दैन ।

<u>डा० मृगेन्द्रराज पाण्डे (शाही हृदय चिकित्सक)</u>:- नयाँ कुराहरु मलाई पनि त्यही साढे नौं पौने दश तिर खगेन्द्र डाक्टरसावले तुरुन्त उहाँ आउनु भन्नु भयो । १०:१५ मा म त्यहाँ पुगें पुग्ने वित्तिकै पहिला महाराजाधिराज सरकारको यो अवस्था देखें । अव यो बेलामा यस्तो क्राइसीसमा, लेटस् पिपुल आउट साइट अल्स अन न्यूरो सर्जन, सेन फेरासिक सजर्न, एन द एनासेटिक्स उहाँहरुले वोलाईदिनु पनि भयो । सवै कुरा भयो । त्यसपछिको मैले गरेकै कुराहरुमा त त्यो अपरेसन हुँदाखेरी मोनिटर गरेर कार्डियास्टाटस के छ भनेर एज ए कार्डियालोजीष्ट म त सर्जन पनि होइन, त्यो मोनिटर गरेर हेर्थे, स्पेसल्ली कुमार गोरखको पहिला अलिकति इम्प्रुभ गरिसकेको थियो पछि बाट कार्डिया कम्प्रेसनको साइन आयो, एक्सरे मात्रै होइन, एकोकार्डियो ग्राम पनि गरियो, डाक्टर कोइरालाले यसपछि यस्पीरेसन गर्नु भयो । आखिरमा त ब्लड आइहाल्यो, ब्लड आएपछि हार्टमा पंक्चर भएकै हुनुपर्छ भनेर ओपेन गरियो, ......ओपन गरेपछि त्यो चाहीं राम्रो भएर गयो । अहिले सम्म पनि त्यो चाहीं क्लियर छ, दी क्राउन प्रिन्सको त्यो किसिमको अवस्था, त्यो अपरेसनको, ब्रेनको बारेमा त डाक्टर उपेन्द्र देवकोटाले लामो भनिसक्नु भयो । ट्याट इज त त्यही नै भयो । म पनि थिएँ । त्यो एम आर आई गर्दाखेरी पनि सवै वट यो कार्टियो भास्कुलर कण्डीसन वाज क्वाईट स्केभिट, हार्टको कन्ण्डीसन, पल्स, ब्लड प्रेसर यिनीहरु मेन्टेन नै थियो। फस्ट डेमा त ब्रेन डेथको कुनै इभिडेन्स थिएन । त्यसैले राजपरिषद्मा गएर हामीले भनिदिनु पऱ्यो । क्राउन प्रिन्स इज अलाईभ, ब्रेन डेथको पनि एभिडेन्स छैन, हात त राम्रै संग चलिराखेको छ । अन सेकेन्ण्ड डे हार्ट सवै चलिराखेको हुनाले देन वी गिभ फूल ट्रिट मेन्ट । ट्रिट मेन्ट गर्दागर्दै पनि राती त्यसदिन राती ..... १०, ११ बजे अन स्टील त भएर गएकै थियो दिउसो साँझ देखि नै त्यसपछि गएर विहान ३:४५ बजे हर्ट पनि स्टप गऱ्यो, ब्लड प्रेसर पनि रिसासिटेड गर्न सकेन, देन आफ्टर द्याट हि वाज डिक्लेर डेथ ।

<u>डा. दुर्गामान जोशी (सहायक रथी, कमाण्डिङ्ग, वीरेन्द्र सैनिक अस्पताल)</u>:-

घटना भएको दिनमा करीब ९ बजेर २५ मिनेटमा खबर पाएं । खबर पाउनासाथ अस्पताल दौडें । करीब ९ बजेर ४० मिनेटको अन्दाजीमा म अस्पताल पुगेको थिएं । अस्पताल पुग्नासाथ जुन ट्रमा हल थियो, त्यसमा विरामी या लाशहरु राखेको अवस्थामा देखें । र मैले दुर्घटनाको सिचुएसन ज्यादै गम्भीर भएको महशूस गरी तुरुन्त ओ.टी., अप्रेसन

थिएटरलाई तयार गर्न अर्डर दिएं । साथसाथै ब्लड बैंकमा ब्लड कति छ, भएको तुरुन्तै जम्मा गर्ने र नभएमा तुरुन्त रेडक्रस ब्लड बैंकसंग सम्पर्क राखी आवश्यक ब्लडको पूर्ति गर्न लगाएँ । अनि त्यसपछि तल आएर स्वास्थ्यकर्मीहरुलाई फोन गर्न लगाएं । स्वास्थ्यकर्मीहरुलाई अस्पतालबाट ट्रान्सपोर्टेसन पठाउने अवस्थामा छैन । जे भेटिन्छ, त्यसैमा आउने भनेर सबैलाई बोलाएं । र ट्रमा हलमा आएर त्यहांको सेक्युरिटी, चाहिने आवश्यक औषधि, अरु मेडिकल इक्वीपमेन्ट, म्यान पावरको बन्दोबस्त गर्नतिर म लागें । मैले विरामीहरुसंग कुनै कुराकानी गरेको छैन ।

**सहायक रथि डाक्टर गौतम रत्न शाक्यः-**

मलाई करिव साढे नौ बजेतिर हस्पीटलबाट इन्फर्म गरेकोमा त्यसको सात आठ मिनेट पछि म हस्पीटल पुगें । पुग्दाखेरी फस्ट सिन मैले देखेको महाराजाधिराज सरकार फस्ट टेवलमा होइवक्सन्थ्यो । अनि मैले त्यहाँ गएर साइन्स अफ लाइफ हेर्न थाले । पल्स, वि.पी.हरु, हर्ट साउण्ड, रेस्पीरेसन हेर्न थालें केही पनि थिएन । त्यति बेला दुईजना सिस्टर र एकजना डाक्टर सावले सिपिआर गर्दै हुनुहुन्थ्यो । मैले त्यहाँ गएर तुरुन्तै इन्टीग्रेसन गरेर फेरि त्यसमा एड नलिङ्गहरु, यो अक्सीनेसन गरेर सि.पि.आर. कम्प्लीट गरें । १५ -२० मिनेट सम्म कन्टीन्यू गरें । मोनिटर गरें । तर कुनै साइन्स अफ लाइफ देखिएन । त्यसकारण उहाँलाई छोडेर अनि नेक्सट फेज मैले देखें यूवराज दिपेन्द्र सरकारलाई ल्याउँदै थियो । सरकार अनकन्सीयस होइवक्सन्थ्यो तर न्वाईज रेस्पीरेसन थियो । सरकार ट्रलीमा भूइमै होइसीन्थ्यो । त्यसपछि डाक्टर हमाल र म मिलेर उहाँको मफ भित्रको सिक्रि समेत जम्मै क्लिन गरें । ब्लाडर भएकोमा क्लिन गरें । आइ वि लाइनहरु खोलें त्यसपछि जुन ध्यार ध्यार आवाज आउँथ्यो त्यो चाही धेरै नै कम भयो । त्यसपछि हामीले अक्सीजन दिएर उहाँलाई सरासरी दौडाएर अपरेसन थिएटरमा लिएर गएर अपरेसन थिएटरमा ह्याण्ड ओभर दिएँ । त्यसपछि फर्किएर आएपछि देखें श्रुति सरकारलाई भइसकेको रहेछ । कुनै डाक्टरले इन्टीभेट गरिसकेको रहेछ । उहाँलाई पनि सि.पि.आर. गरें । कार्डिक प्रोब्लेम रेस्पीरेसन, प्लस अक्सीनेसन, प्लस ड्रक्स सवै दिएँ । साइन्स अफ लाइफ केही पनि देखिएन । १०, १५ मिनेट त्यहाँ पनि कन्टीन्यू गरें । त्यहाँ पनि नभएपछि त्यसपछि डाक्टर रायमाझी आउनु भयो । उहाँले धिरेन्द्र सरकारलाई हेरीदिनु पऱ्यो भन्नु भयो । त्यहाँबाट उहाँले यो स्यानो रेस्पीरेसन थियो । माइल्ड साइनोसीस थियो । त्यसपछि अक्सीनेसन दिएँ । ब्लड प्लस एरियाको ९० वाई ७०, ६८ त्यस्तै ज्यादैनै कम थियो । औषधि दिए पछि ब्लड प्रेसर माथि आयो । साइनोसीस पनि हरायो । रेस्पीरेसन बेटर भयो । त्यहाँबाट डोऱ्याएर लिएर गयौं, अपरेसन थिएटरमा लिएर गएँ । अपरेसन थिएटरमा पनि स्टेवल नै होइसीन्थ्यो । वि.पी. तल माथि भइराखेको थियो । स्टेवल थिएन विपी, रेस्पीरेसन ठिकै थियो । अनि त्यो गऱ्यौं अनि एकछिन पछि हामीले इन्टीग्रेट गऱ्यौं । हामीले एनोसेस कन्टीन्यू गऱ्यौं त्यसपछि ब्लडको अर्जेन्ट आवश्यकता भएको थियो । अर्जेन्ट आवश्यकता भएकोले म पनि गएर ब्लड बैंकको नेगेटिभ ग्रुप पनि चाहिएको थियो । अरु ब्लड पनि चाहिएकोले, अर्जेन्ट चाहिएकोले हामी गएर ब्लडको एरेन्जमेन्ट गऱ्यौं । रातभरी यत्तिकैमा हामी पेसेन्ट केयर गरेर वित्यो ।

**डा. सुसिलकृष्ण सिल्पकार( न्यूरो सर्जन, टिचिङ्ग हस्पिटलः-**

वेसीकली यस्तो कुरामा मेन एउटा एन्ट्री र एक्जीट होल छ भने पेनेटेरियल, इन्जरी कुनै पनि हाई भेलोसीटीको सब्सटेन्ट, इट क्यान वुलेट, इट क्यान वि एनि अदर थिङ्गस् र मेन चाहि मिसाईल इनजरी, डाइग्नोसिस्मा पनि, जहाँ विदेशमा पनि नेपालमा पनि त्यसलाई अलि डिफिरेन्स टर्म यूज गर्छ । एनोटरी मिसाएर इन्ट्री भने पछि मर अर लेस बुलेटको कुराहरु आउछ । जस्तै कहिले कहि वम ब्लाष्ट हुँदाखेरी कुनै फ्र्यागमेन्टहरु ब्रेन विरुद्ध त्यसलाई पनि हामी वाई मिसाइल इन्जोरी भन्छौं इन्ट्री होल सानो, एक्जीट होल ठूलो के हुन्छ भने कुनै पनि हाइभेलोसीटीमा मूभमेन्ट गर्ने अब्जेक्ट त्यहाँबाट पास भएर अर्कोबाट निस्कीयो भन्ने हुन्छ, वि डु नट हाव एनि फ्र्यागमेन्ट्स्, अरु डाक्टरसावले पनि भन्नु भयो कुनै पनि फ्र्यागमेन्ट कुनै बुलेट या कुनै पास मूभिङ्ग अब्जेक्ट, कुनै इम्प्याक्ट हुँदाखेरी पड्किन्छ र त्यो फयागमेन्टहरु कहिले कही भित्र हुन सक्छ । इन दीस केस देयरवाज नो फ्यागमेन्ट, भेलोसिटि इक्वल वाई ……… थ्रु एन थ्रु । दिस इज कल्ड इम्प्लीकेसन ।

त्यसमा डाइग्नोसीस नै गर्ने हो भने जुन बुलेटै छ अथवा त्यो चिज नै चाहिन्छ । तर इम्प्लीकेसन भनेको के हुन्छ । एउटा इन्ट्री र एक्जीट छ भने समथिङ्ग हाज टु ट्रभल टु द्याट, त्यो इम्लीकेसनको कुरा आउँछ । त्यसकारण हामीले प्रिजुम वुलेट गर्नुपर्छ भित्र ब्रेनमा हड्डीमा एउटा वुलेट अड्केको छ भने प्रिजुम वुलेट, किनभने वुलेटको पनि के हुन्छ भने इट मुभ्स राउण्ड एण्ड राउण्ड, तर जव स्ट्राईक गर्छ त्यसको घर्षण ठूलो मोस्टमा जान्छ । जव वाहिर निस्कने टाइममा गोलीले ठूलो प्वाल पारेर आउँछ । पहिले चाहि एकदम छोटो हुन्छ । अव प्रिजम इज वुलेट, वि आर नट सिन द बुलेट स्यानो छ, पाउडर वन्स देखिएन त्यहाँ । पाउडर वन्स पनि हुन्छ कहिले कहि, सिवीन पनि हुन्छ । यी सवै फरेनसिक एक्सपर्टस्हरुले भन्छन् । तर वि हाव टु प्रिजुम इट इज क्लोज रेन्ज बुलेट, किनभने होल (Hole) लार्ज छैन, ठूलो हड्डीको टुक्रै यहाँ छैन, राइट पट्टी।

प्र.से.डा.वच्चुराम केसी (अर्थोपेडिक्स) :-

मेरो इनभल्वमेन्ट त्यो दिन ३ जना पेसेन्टहरु हेर्नुथियो । श्री ५ शाहज्यादी सोभा शाही, उहाँको दाहिने हातमा एउटा पेरेट इन्जरीङ्ग थियो । त लेफ्ट ह्याण्डको फिङ्गगर कष्ट इन्जरी भएको थियो । वि ह्याड मेनेज्ड द्याट । अर्को इनभल्वमेन्ट मिसेस केतकी चेष्टर, उहाँलाई पछाडिबाट त्यस्तो हाइ भेलोसिटी भएर देयर वाज इन्ट्री अन द व्याक, अन द सोलो ज्वाइन्ट, देयरवाज म्यासीव ब्लासीर विण्ड विथ फ्याक्चर। अव त्यसको प्लान म्यानाजमेन्ट गरिएको छ । चेष्टीङ्ग बाज अपरेटिङ्ग अफ कुमार गोरख उहाँको राइट ह्याण्डको थम्व एमपुटेसन गरियो । मेरो इनभलमेन्ट त्यति मात्रै भएको थियो । हस्पीटल नजिकै हो । यो खाली स्कीन ट्याग मात्रै वाँकी थियो, वोनहरु सवै टुक्रा टुक्रा भएर क्रस भएको थियो । खाली स्कीन कार्डीया मात्रै हल्लीराखेको थियो । शाहज्यादी सोभा शाहीको पनि रिङ्ग फिङ्गरको कण्डीसन त्यस्तै नै थियो । क्रस इन्जरी जस्तो । इट इज् नट लाइक क्लीन कट इन्जरी ।

**उप-सेनानी डा. सदिच्छा सिंह :-**

त्यो दिन १९ गतेको राती नाइट डिउटीमा थिएँ । त्यतीबेला (महाराजाधिराजलाई ल्याएको वेलामा) म ज्ञानेन्द्र कुटीमा वसीराखेको बेलामा उता ट्रमा हाउसको नर्सिङ्ग स्टाफबाट इमरजेन्सी आएको छ भनेर, फोन आयो । फोन आएर म उठेर जाँदा जादै फेरि पनि फोन आयो । फेरि इमरजेन्सी आएको छ भनेर फोन गरेपछि म उता ट्रमा हलतिर दौडिरहेको थिएँ । दौडिरहदाखेरी वाटोमा २ जना एडिसीहरु भेट भएको थियो अन द वे टु ट्रमा हल । एडिसीहरुले महाराजाधिराज सरकारलाई ल्याएको छ भनेर भन्नु भयो । आइ वाज रस्ड टु ट्रमा हल । जहाँ मैले देखें फस्ट ट्रलीमा सरकारलाई लिएर आएर राखिसकेको रहेछ । अनि हेर्दाखेरि सरकारको लेफ्ट एयर (वायाँ कान) बाट ब्लड नै ब्लड आएको थियो । दायापट्टी हातमा पनि व्लड देखें मैले । अनि यसो हेर्दा सवै पेल (Pale) होइवक्सन्थ्यो सरकार, पाइन्स, विपिस्हरु केही पनि थिएन । कुनै पल्स पनि थिएन, विपीहरु पनि रेकर्डेवल थिएन । वडी कोल्ड। अनि त्यसपछि त्यो पिपल्सहरु पनि सवै एक्जामिन गर्दाखेरी डालेटरी फिक्स अनि त्यो देखेपछि आई इमिडेट्ली स्टार्टेड अन सिपीआर, त्यो सिपिआर दिन थालें मैले अनि त्यतिबेला नर्सिङ्ग स्टाफहरुलाई आइ भि लाइनहरु दुवैतिरबाटः एकपट्टिबाट नर्मल्स लाईन, एकपट्टीबाट हिमासल्स अनि त्यही अक्सीजनहरु सवै लगाएर त्यही रिर्सस मेजर्स गरिराखेको थिएँ मैले । त्यही गर्दा गर्दै पछि खगेन्द्र जरसाव आउनु भयो, अनि खगेन्द्र जरसावलाई केस हस्तान्तरण गरेर (म उतापट्टी गोरख र श्रुति सरकारलाई लेर आइरहेको थियो) उतापट्टी हेर्न गएँ ।

महाराजाधिराज सरकारबाट त केही पनि रेस्पोन्स थिएन । मैले एक्जामिन गर्दाखेरी नै हि वाज डेड मैले आफूले डिक्लेर डेड गरीसकेको थिएँ । तर पनि सिनिएर कन्सल्टेन्टहरु आएर हाम्रो हाउसमा एकचोटी फेरि हेर्नु पर्ने । त्यो भएर मैले क्लीनिकल्ली डेथ भएता पनि मेजर्सहरु अपनाइरहेको थिएँ । त्यसपछि म उतापट्टि जाँदा कुमार गोरख हि वाज कन्सीएस, अनि उहाँको अगाडि पट्टी चेष्टबाट अलि अलि व्लीडिङ्ग भइरहेको थियो ।

मलाई एकदम दुःखी राखेको छ भनेर कुमार गोरखले मर्जि भयो । अनि त्यही भएर मैले एनाल्जेसीक इन्जेक्सन पनि दिएँ उहाँलाई । आफ्नो देह संग मात्र उहाँलाई थाहा रहेछ । त्यो वाहेक त अरु केही पनि भएन । खाली दुःखी राखेको छ भनेर मात्रै भनिवक्स्यो । त्यो आइ वी लाईनहरु सवै स्टार्ट गरेर उता नेक्स्ट् लाष्ट वेडमा श्रुति सरकार कहाँ म एटेन्ड गर्न गएको । श्रुति सरकार सि वाज अन कन्सीएस, सि वाज नट कन्सीएस, वि.पी. अनरेर्कडेवल नै थियो । पल्स अली अली स्लाइडली पाइपेपवल जस्तो थियो श्रुति सरकारको चाहीं ।

उप सेनानी डा. सदीच्छा सिंहको भनाई सुनेपछि समितिले अब कृपया सबै डाक्टर साहेबहरु आएर पालै पालो आफ्नो कुरा भनिदिनुहोस् अस्पष्ट भएको ठाउँमा हामी प्रश्न गर्नेछौं। तपाँईहरुका कुरा टेप गरिनेछ भनी सबै डाक्टरहरुबाट जानकारी लियो जो देहाय बमोजिम छः-

डा. मित्रलाल श्रेष्ठ (टिचिङ्ग हस्पिटल, जी.ए. सर्जन):-

हामी प्रोफेसर गोविन्द शर्मा अनि ५ जना संगै गएको हो । अनि म त्यहां पुग्दाखेरी हामी संगै पुगेको हो, अप्रेसनमा । अप्रेसन गर्दाखेरी त्यस्तो आपटर्मल इन्जर्ड केही पनि थिएन । त्यसकारण मैले खाली स्टायण्ड बाई र विटनेस भएको ।

प्रा०डा० महेश खकुरेल (डिपार्टमेन्ट अफ सर्जन, टिचिङ्ग हस्पिटल) :-

व्रिगेडिएर जनरल रायमाझीले फोन गर्नु भयो र भन्नु भयो र तुरुन्तै भन्नु भयो यस्तो डिजास्टर छ, म भन्न सक्दीन तिमिलाई फोनमा भन्ने कुरा होइन आउ । म १०:४० मा गएको थिएँ । त्यतिबेर म सायद १०, १५ मिनेट भित्रैमा पुगें होला । मैले

सवैकुराहरु विटनेस गरें । त्यो विटनेस गरेर अल्टीमेट्ली हामीले सवैलाई एक्सेस गऱ्यौं । कसलाई प्रायोरिटी छ कसलाई कहाँ लैजानु पर्छ त्यो पनि गऱ्यौं । त्यसपछि फाइनल्ली आएर २ वटा टिम उता इन्भल्व भइसकेको हुनाले कमल सरकारको वि नेगेटीभ ब्लड रहेछ । ब्लड पनि पाउन गाहारो । सवभन्दा ठूलो समस्या ब्लड कै लाग्यो । अव हामीले पर्खनु भन्दा जे भएपनि अपरेसन गर्नु पर्छ भनी टेवुलमा नभएर ट्रलीमा अपरेसन गऱ्यौं । त्यहाँ प्रसस्त ब्लड थियो भित्र लङ्ग इन्जोरी थियो । एउटा कुरा मैले के भन्न चाहन्छु भने अव कौतुहलता लागि नै रहेको थियो । मैले कुमार गोरखलाई अपरेसन थिएटरमा राख्दाखेरी मैले गोरखलाई सोधे, मलाई त धेरै सोध्न आउट साइड जव हो कि इन साइड जव हो कि यस्तो कुतुहलता लाग्यो मैले सोध्दा के धेरै मान्छे इन्भल्व भए के भन्दा एकै उहाँले त्यसो भन्नु भयो । त्यो जष्ट विफोर अपरेसन एनेस्थेसन भन्दा अगाडि एकै जना हो अरे सायद उहाँले त्यो भन्न पनि चाहनु हुन्थ्यो ।

डा. भोला जोशी (प्रोफेसर, टिचिङ्ग हस्पिटल, डिपार्टमेन्ट अफ सर्जरी) :-

मलाई फोन आयो एकाएक गोविन्द शर्माले तुरुन्त पुग्नुस् । डिजाष्टर हाज हापेन, साढे १० बजे उहाँले फोन गर्नु भएको हो । कति बजे टाइम त भएन, पौने ११, ११ बजे तिर नै पुगेको होला । जाँदाखेरी हिज म्याजेष्टीको फ्याट स्टीट मलाई देखाइयो । देखाउनेमा डाक्टर मृगेन्द्रराज पाण्डे हुनुहुन्थ्यो । प्रोफेसर डि.के. शर्मा देख्नमा चाँही कुमार गोरख सम्शेर तलै हुनुहुन्थ्यो । अनि उहाँको मैले फिङ्गर पन्चर गरेर ब्लड स्याम्पल तानेर क्रस म्याचीङ्गलाई पठाइ त्यसपछि म ओ.टी.मा गए । तर एउटा कुरा म यहाँ आयर गर्न चाहन्छु । प्रो. महेश खकुरेलले भन्नु भएको कुरामा चाहीने म पनि त्यहाँ थिए । उहाँले के प्रश्न गर्नु भएको थियो, उहाँले अलिकति विर्सनु भयो जस्तो छ । गोरख सम्शेरलाई अपरेसन गर्ने बेलामा उहाँले प्रश्न के गर्नु भयो भने धेरै मान्छे इन्भल्भ भए कि भनेर सोध्दा कुमार गोरखको जवाफ थियो एकै जना ।

**सहायक रथी डाक्टर कृष्ण नरसिंह रायमाझी(सर्जिकल डिभिजन प्रमुख):-**

म हस्पीटलको सर्जीकल डिभिजन प्रमुख हूँ, त्यो दिन राती ९:२० भएको जतिमा खवर पाएर म त्यहाँ पुग्दाखेरी ९:४० भएको थियो । पुग्दाखेरी महाराजाधिराज सरकारलाई हेरें पहिला, अलरेडि डेथ, त्यसपछि नकहट बडामहारानी सरकार पट्टि गएं, सि वाज् अल्सो डेड । अनि थर्ड श्रुति सरकारको पनि लाईफ थिएन । अनि मलाई निराजन सरकारपट्टि हेर्ने भन्ने कुरा भयो त्यहाँ गए त्यहाँ पनि कुनै साइन अफ लाइफ देखिएन । सि.पि.आर. अलिकति अटेम्प्ट गरेपनि केही सिप लागेन, उहाँपनि डिक्लेयर डेड, त्यसपछि मलाई, धिरेन्द्र शाह, उहाँको ज्वाई डा. राजीव शाहीले एकचोटी हेरिदिइवक्सोस भन्दाखेरी उहाँको घाउमा ड्रेसीङ्ग गऱ्यौं । त्यो बेला पनि उहाँ राम्रै संगै कुरा गर्दै हुनुहुन्थ्यो तर उहाँले अंग्रेजीमा आई एम इन डिफिकल्टी ब्रिदिङ डिफिकल्टी ब्रिदिंङ्ग मात्रै भन्नु भयो अरु कुनै पनि चिज भन्नु भएन । अनि त्यहाँबाट मैले एनास्थेटिक डाक्टर गौतम शाक्यलाई डाकेर उहाँलाई अक्सीजन दिन लागेपछि त्यो निलो कलर भइसकेको, आइनोज कलर भइसकेको पनि अनी कलर राम्रो आयो, पल्स पनि आयो अनि त्यसपछि के भयो भने उहाँलाई माथि अपरेसन थिएटरमा तुरुन्त फर्दर ट्रिटमेन्टलाई पठाउने कुरा भयो । त्यो बीचमा मलाई अपरेसन थिएटरबाट डाकियो, त्यहाँ माथि एउटा डिसिजन गर्नुपऱ्यो भनेर, एउटा मेन ओ.टी.मा यूवराजाधिराज दिपेन्द्रलाई ट्यूवहालेर राखेको थियो उहाँ डाक्टर हमालले भनेको जस्तै त्यो गिदी सवै निक्लेर ड्रेसीङ्ग भइराखेको थियो । डाक्टर देवकोटालाई नर्विकबाट कन्ट्याक्ट गरेर उहाँलाई लिन पठाइदिएँ । सडेन्ली मैले विचार गरें कि अव यो लोड एक त रोयल पिपुल लोड, एउटा पेसेन्टको पनि लोड, हाम्रो सर्जीकल उल्ले ( जनशक्तिले) धान्न नसक्ने भन्दा नजिकको प्रोफेसर महेश खकुरेललाई मैले फोन गरेर उहाँलाई केही पनि थाहा नदिएर तुरुन्त आउनुस् भनें । आएपछि उहाँसंग कुरा गरें कि अरु कसलाई गर्ने भन्दाखेरी गोविन्द शर्मालाई पनि डाकौं, भोला जोशीलाई पनि डाकौं भन्दाखेरी गोविन्द शर्माको मोवाईलमा कन्ट्याक्ट गर्न खोजेको भएन । तर त्यही ५ मिनेटमा उहाँहरु होल टिम आयो राजीव राज शाहीले टिचिङ हस्पिटलमा गएर सवै टिमलाई नै लिएर आएको रहेछ ।

त्यो भन्दा अगाडि हाम्रो रोयल सर्जन अन्जनी शर्मा र रोयल कार्डियोलोजीष्ट मृगेन्द्रराज पनि त्यहाँ उपस्थित हुनुहुन्थ्यो । अनि त्यहाँ थोरासीक टिमले टेक ओभर गऱ्यो । डि शाहलाई तुरुन्त थोरासिक गर्ने भनेर हाम्रो थोरासिक सर्जन र उहाँहरु उतापट्टि लाग्यो । अनि त्यो बीचमा महेश डक्टरसावले दुईटा ट्यूव हालेर हेर्दाखेरी हाल बडामहारानी सरकार कोमलको चाही रगत अल्लि हेवी ब्लीडिङ्ग भएको थियो । र उहाँलाई तुरुन्त अपरेशन गर्नु पऱ्यो भनेर फेरि एनास्थेटिक मेसीन ल्याएर थर्ड अपरेसन पनि हामीले ओ.टि.को वाहिर एउटा ठूलो कक्ष छ त्यहाँ हामीले सुरु गऱ्यौं, तर मेन प्रब्लम त्यसमा के पऱ्यो भने नेगेटीभ ब्लड रहेछ नेगेटीभ ब्लडको वि नेगेटिभ भएको हुनाले हामीलाई अलिकति गाहारो पऱ्यो । अनि त्यसपछि कुमार गोरखको अपरेसनमा पनि एउटा भगवान कोइराला, टिचीङ्गकै थोरासिक टिम र हाम्रो मिलाएर लागेको थियो । त्यो सवै गर्दा खेरी अनि मेन तल ट्रमा हलको सि.ओ.लाई मैले जिम्मा दिएको थिएँ । बुझाईदिएको थिएँ । त्यसपछि मेरो काम सुपरभाइज गर्ने भयो । के के चिज चाहिन्छ । अपरेसन थिएटरमा समन्वय राख्ने त्यो गरेको थिएँ ।

**महासेनानी डाक्टर अच्यूत प्रसाद शर्मा(न्यूरोसर्जन):-**

जेठ १९ गतेको करिव ९:३० बजे साँझ मलाई हस्पीटलको रिसेप्सनको स्टाफले फोन गर्नुभएर भन्नु भयो भि.भि.आई.पी. एक्सीडेन्टमा पर्नु भएको हुनाले जुनसुकै साधन नजीकमा छ, त्यो लिएर तुरुन्त हस्पीटलमा आइपुग्नु होस् र म आफ्नो सरकारी गाडि लिएर तुरुन्त हस्पीटलमा आइपुगें । म हस्पीटलमा आइपुग्दा करिव १० बज्न लागेको थियो र सवभन्दा पहिला म ट्रमा हलमा गएँ । ट्रमा हलमा जाँदा सवभन्दा फस्ट बेडमा श्री ५ महाराजाधिराज सरकार होइवक्सन्थ्यो । उहाँलाई हेरें । त्यहाँ फस्ट एडको काम रेसेसिटेसन भइनै राखेको थियो । त्यहाँ पछि अलिकति अरुहरुलाई हेर्न भनेर जाँदै थिएँ । त्यसै बेलामा व्रिगेडीएर जनरल डाक्टर के.एन.रायमाझीले युवराजाधिराज सरकार हेड इन्जोरी भएको छ त्यसकारण उहालाई ओटीमा लगिसकेको छ तैपनि तुरुन्त ओ.टी.मा जानु भन्ने उहाँले मर्जी भएको हुनाले म सरासर ओ.टी.मा गएँ । ओ.टी.मा म जाँदा युवराज सरकार अपरेसन टेवुलमा राखिसकेर महासेनानी डाक्टर डुजुकनेक प्रसीकोले इन्टोभेट गरिसक्नु भएको थियो । र त्यसबेला मैले उहाँको कन्डीसन के थियो भनेर इन्क्वाएरी गरें । उहाँको पिपुल्सहरु (Pupils) त फिक्स भइसकेको थियो तर उहाँले के भन्नु भयो भने उहाँको रेस्पीरेसन थियो । इन्टीभेसन गर्नुभन्दा अगाडि उहाँको ब्लासको स्केल ३ थियो भन्ने यो इन्फरमेसन पाउनासाथ मैले हेरें उहाँको लेफ्ट टेम्पोरलमा स्यानो इन्ट्री थियो र राईट टेम्पोरलमा विग होल, ब्लीडीङ्ग भइराखेको थियो त्यो कण्डीसन मैले थाहा पाउनासाथ उहाँलाई सर्जरी गर्नुपर्छ भन्ने डिसीजन त्यसबेला दिएर उहाँलाई सेलिङ्ग गर्नु र ब्लड क्रस म्याच गरेर रेडि गर्नु भनेर त्यति अर्डर दिएर म अरु ओ.टी.मा गइसकेका घाइतेहरु पट्टि लागे, इन द मेन टाईम त्यसैबेलामा हाम्रो वरिष्ठ न्यूरो सर्जन विर हस्पीटलबाट डाक्टर उपेन्द्र देवकोटा र टिचिङ्ग हस्पीटलबाट डाक्टर सिल्पकारहरु आइपुग्नु भयो र न्यूरो सर्जिकल टिमहरु त्यहाँ तयारी भएर हामी ३ जनाले फेरि रि एसीस गर्‍यौं र उहाँ सर्जरीमा जानु पर्छ ब्लीडिङ्ग स्टप गर्नुपर्छ भनेर हामीहरु डाक्टर सावले भनेजस्तै त्यही टाइममा अपरेसन सुरु गरेर होल नाइट त्यहाँ अपरेसन गर्‍यौं । उहाँको इन्जुअरी खास । भएको म इंग्लीसमै भनिदिन्छु । वाई हेन्सपेसरीक ट्रान्सभेन्टीकुलर थ्रु अन थ्रु मिसाईल इन्जरी, डेजर रिर्पोटमा परेको छ ।

रिर्पोटमा लेखेको कुराले गोली लागेर निस्केको कारणले घाउ भएको भन्ने कुरालाई कोरोवोरेट (Corroborate) गर्छ भन्ने प्रश्नका सम्बन्धमा हामीले युवराजसरकारकोमा कुनै पनि फरेन वडि, मेकानिक फाइरमेन्टहरु उहाँकोमा थिएन किन कि थ्रु एण्ड थ्रु भइसकेको थियो ।

प्वाइन्ट अफ इन्ट्री र प्वाईन्ट अफ एक्जीट, बुलेटकोमा चाहि एन्ट्री प्वाईन्ट स्यानो हुन्छ । एक्जीट प्वाईन्ट ठूलो हुन्छ । यो केसमा रिर्पोटमा पनि लेखेको होला लेफ्ट टेम्पोरलमा स्यानो घाउ थियो र राईट टेम्पोरलमा ठूलो, त्यसकारणले लेफ्टबाट इन्ट्री गरेर राईटमा निस्केको हुनुहुनुपर्छ । युवराजाधिराज सरकारको सिंङ्गल इन्जोरी उहाँको मल्टीपल होइन, सिंङ्गल इन्ट्री लेफ्ट टेम्पोरलबाट इन्ट्री राईट टेम्पोरलबाट एक्जीट, लेफ्टमा स्यानो, राईटमा ठूलो । त्यस्तो इन्जोरी देख्दाखेरी हामी पनि चाहन्छौं कोलावरेट गर्न, एक्सरे गर्छौं ।

डा० भगवान कोइराला (हाईसर्जन, टिचिङ्ग हस्पिटल):-

मेरो इन्भलमेन्ट त्यो दिनको इभनिङ्ग सवा ११ बजेदेखि अनवार्ड छ अहिलेको वडामहारानी सरकार कोमलको इभ्यालुएसन विथ इन गरेर प्रोवाब्ली निड अपरेसन भन्ने खाले एसेसमेन्ट गरेपछि आइ ज्वाइन्ट देन, गम्भिरलाल राजभण्डारी, धिरेन्द्र सरकारको साथमा छ, अपरेसन गर्‍यौं । लुक लाइक ए फार आर इन्जरी, फ्रम नियर प्वाइन्ट एक्जीटिङ्ग फ्रम ब्याक अफ द चेष्ट, लाउन केही प्राव्लम थियो । गएरस पनि भयो, हार्ट पनि वन्द भयो, वि हाव लट प्रब्लम, एनी वे मेजर ब्लीडीङ्ग कन्ट्रोल गरिसकेर अलिकति अपरेसन स्मूथली अगाडि वढ्ने स्थीति हुँदा हुँदै आइ वाज कल टु हेल्प गोरख एक्चुएल्ली । कुमार गोरखको एसेसमेन्टमा पनि म इन्भल्व थिए । प्राइमरील्ली सुरुमा उहाँलाई पोष्ट अल्पटीक बार्डमा अझै पठाउनु अगाडि, त्यो बेला सुरुमा हेर्दा हि लुक स्टेवल, त्यसैले केही समय वाच गरौं भनेर पठाएको यो अपरेसन धिरेन्द्र सरकारको अपरेसन हुँदा हूँदै मेजर ब्लीडीङ्ग पल्स कन्ट्रोल गरिसकेपछि उताबाट कल आयो उसको त उहाँको सिटअप खतम हुँदैछ भनेर चिच्चाए पनि डा० गोविन्द शर्माले भने जस्तै ल डाक्टर साव तपाई यो सिद्धाउनुस् म उता हेर्न गएँ भनेर म कुमार गोरखलाई हेर्न गए । त्यो बेलाको ओभर अल यो ३ वटा इन्भल्वमेन्टमा कुनै पनि बेला मलाई आफूलाई प्रोफेसनल जवको भन्दा बाहिर पट्टि कतै पनि लान चाहिन । हुने स्थिति पनि थिएन । कुनै पनि पेसेन्टहरुले हामीलाई त्यो बेलामा डिस्क्राइभ गर्ने मूड सिचुएसन थिएन । त्यो स्थिति थियो । त्यसकारणले त्यो डिटेल कुरा मैले कसैबाट पनि सोधेको र जवाफ पाएको पनि सुनिन र मैले पनि सुनिन । मैले खाली कुमारलाई उहाँले भनेको जस्तै सोध्न चाही एउटै शब्द सोधेको थिए । डु यू रिमेम्वर द इन्सीडेन्स, त्यति चाही एउटा मेडिकल्ली पनि के छ भनेर हि सेड क्लीयर यस आई रिमेम्वर एभरीथिङ्ग, त्यसपछि कन्सेसली पनि अलि ठूलो इस्यू भएको हुनाले अव यसमा डिटेलमा हामीले जाने कुरा होइन, मेडिकल्ली नै गर्नुपर्छ भनेर वि टेक पिओर्ली प्रोफेसन अल द टाईम अनि उहाँ गएर एसेस गर्दा हि निड, एन अपरेसन अनि अपरेसनमा लग्यौं। अब केही कुरा उहाँको बारेमा, टेक्नीकल आस्पेक्ट अफ अपरेसनमा हामीले के देख्यौं भने अलिकति हार्टको फार इन्जोरी थियो । वि क्यान सेड अप वुलेट इनसाइड आट नो त्यहाँ धेरै कुराहरु छ । २, ३ थरीको पार्टिकल्सहरु हामीले निकालेका छौं हार्टबाट र घाँटीबाट, त्यसकारण एउटै आर्म हुन सक्दैन जस्तो लाग्छ हामीलाई हेर्दाखेरी एकचोटी टु डिफरेन्स पार्टीकल्सहरु निकाल्यौं, अनि अपरेसन गर्दाखेरी अन स्टेवल टेवलक तान्यौं पहिला, स्टेवल वनायौं त्यसपछि

अपरेसनमा लिएर गयौं त्यो सव त छ तर खोल्दाखेरी हार्टमा पनि गोली लागेको थियो । यहाँबाट यो बोनबाट छिरेर २ वटा थियो । एटलिष्ट ४ वटा इन्ट्री प्वाइन्टस् हामीले देख्यौं । यहाँको हातको छोडेर खुट्टाको छोडेर त्यहाँ पनि कति थियो । त्यसमा त्यो एउटा चेप्टो परेको मेटालिक अब्जेक्ट । वि द वि सुल्ड वि आर पलेक्ट, पार्टिकल अर बुलेट, आइ डन्ट नो म त्यसको एक्सपर्ट होइन, त्यो हाडलाई छेडेर पेडिकार्डन हाडको स्याटमा गएर अड्किएको थियो त्यो । त्यो एभेडेन्सहरु, यो हामीले निकालेको गोली सिसिमा राखेको छ ।

धिरेन्द्र सरकारको मागमा एक्सरेमा स्पीन्टरर्सहरु पार्टिकल फर्महरु एक्सरेमा अझै पनि एक्सरे डकुमेन्टमा छ । अहिले त अन फर्चुनेट्ली पास भयो । त्यसपछि कुमार गोरखकोमा त्यो निकालेको कालो देखियो नी चिज त्यो हेर्दाखेरी गोल्डन कलरको थियो। त्यो अहिले क्लीन गऱ्यो भने सायद गोल्डन कलरकै होला त्यो चाही त्यही सेप (shape) को अरु चिजहरु एक्सरेमा अझै पनि छ । अनि त्यो हामीले यूजल्ली खोतलेर जादैनौं । निकाले ड्यामेज हुन्छ त्यो त्यसै छोडेकै हो, त्यो अझै एक्सरेमा पनि त्यो देखिन्छ । त्यसको सेपबाट र यसको बाट यो अहिले पाउन सकिन्छ । अरु चाही फर्दर डकुमेन्टेसन त मेडिकल डकुमेन्ट्सहरु छँदैछ ।

<u>जवाफ (वीचमा कुनै एक डाक्टर):-</u>

कुमार गोरखजीको त अहिले पनि सबै बुलेट निकालेको छैन । अहिले एक्सरेमा अहिले पनि देयर स्टील देयर, अब यहाँ पनि छ । धीरेन्द्र सरकारको मागमा एक्सरेमा स्पीन्टरर्सहरु पार्टिकल फर्महरु एक्सरेमा अझै पनि एक्सरे डकुमेन्टमा छ । अहिले त अन फर्चुनेट्ली पास भयो । त्यसपछि कुमार गोरखकोमा त्यो निकालेको कालो देखियो नी चिज त्यो हेर्दाखेरी गोल्डन कलरको थियो। त्यो अहिले क्लीन गऱ्यो भने सायद गोल्डन कलरकै होला त्यो चाही त्यही सेप (shape) को अरु चिजहरु एक्सरेमा अझै पनि छ । अनि त्यो हामीले यूजल्ली खोतलेर जादैनौं । निकाले ड्यामेज हुन्छ त्यो त्यसै छोडेकै हो, त्यो अझै एक्सरेमा पनि त्यो देखिन्छ । त्यसको सेपबाट र यसको बाट यो अहिले पाउन सकिन्छ । वा अपरेसन पनि हि हाड ....... अरु चाही फर्दर डकुमेन्टेसन त मेडिकल डकुमेन्ट्सहरु छदैछ । सायद हामीले जसले पनि मेसिन ..... यति जस्तोलाग्छ मलाई ।

<u>प्रा०डा० गोविन्द शर्मा:-</u>

साढे १० बजे क्याप्टेन डाक्टर राजीवराज शाहीले फोन गरेर तुरुन्त टिम लिएर हाम्रो हस्पीटल आउनु पऱ्यो । न्यूरो सर्जन, कार्डियो थेरासिस सर्जन, अनि सिजोलोजिष्ट भनेको हुनाले सवभन्दा पहिले मैले डाक्टर भगवान कोइराला, त्यसपछि डाक्टर पूर्णराज जोशी, डाक्टर श्रेष्ठ, डाक्टर सुसिल सिल्पकार हामी ५ जना भएर वि वेन्ट टु हस्पीटल वाँकी कुरा हामी जाँदाखेरी सवा ११ भइसकेको थियो । हामीलाई त लेट खवर आयो । हामी पुग्दा पनि टाइम लाग्यो । त्यो बेला सम्म जुन घट्ना भइसकेको थियो र मेरो इन्भल्वमेन्ट चाही अपरेसन, वडामहारानीसरकारको र टिम भगवान कोइराला, कर्णल साहव, र डाक्टर नरेश गिरी, उहाँहरुले कुमार गोरखको अपरेसन गर्दाखेरी मलाई पनि उहाँले वोलाउनु भयो । देन आई ज्वाइन्ट द टिम । आइथिंक डाक्टर कोइराला विल सेड।

–

<u>डा० गम्भीरलाल राजभण्डारी (कन्सल्टेन्ट कार्डियो थेरापिक सर्जन):-</u>

मलाई गएको शुक्रवार १९ गते डिनरपछि सुत्नलागेको बेलामा अन्दाजी १० बजेको टाइममा टेलिफोन आयो, टेलिफोन आउनासाथै एकदम ईमरजेन्सी टेलिफोन सरकारको एक्सीडेन्ट भयो भनेर खवर आउनासाथ म जे लुगामा छ, त्यो लुगा लगाएर आफ्नो वाहिर भएको गाडि लिएर रस गरेर जाँदाखेरी म हस्पीटलमा पाटन लगनखेलदेखि रिङ्गरोड हुँदै हस्पीटल पुऱ्यायो । झण्डै १० बजे हस्पीटलमा डाइरेक्ट पुगें । १० बजे पुग्दाखेरी मेरो अफिस ट्रमा जहाँनेर यो सवै एक्सीडेन्ट पहिला ल्याउने ठाउँछ त्यसको वाहीर मेरो अफीसछ । त्यहाँ हेर्दाखेरी वाहिर हाम्रो चिफ सावहरु वाहिर होइसिन्थ्यो । भित्र गएर यसो हेर्दाखेरी एकदम पोष्ट एक्सीडेन्ट सेन्टर भन्छ मेरो अफिसको वाहीर एकदम रोयाल फ्यामिलीको एक वाई एक लहरै ट्रलीहरुमा रोयल फ्यामिलीको रेसेसिटेसन भइराखेको । कोही के भइराखेको, त्यो हेर्नासाथ मलाई अपरेसन थिएटरमा तुरुन्त वोलावट आइहाल्यो । तुरुन्त अपरेसन थिएटरमा जाँदाखेरी झण्डै १०, १५ को टाईम भइराखेको थियो । लुगा चेन्ज गरेर म भित्र पस्दाखेरी सवभन्दा पहिला अपरेसन थिएटरको वाहिर हाम्रो कोरीडोर हुन्छ । त्यो कोरीडोरको ट्रलीमा श्री कुमार गोरख शम्शेर रानाज्यू, त्यहाँ ट्रलीमा होइसिन्थ्यो । मैले यसो छिटो चेकअप गर्दाखेरी कुमार गोरख शम्शेरको छातीमा मल्टीपल इन्जोरीहरु थियो । एन्टी धेरै ठाउँबाट ब्लीडिङ्गहरु भइराखेको थियो । प्लस हातमा पनि इन्जोरी थियो । चिनमा (चिउँडोमा) पनि थियो । त्यस समयमा माथि आउदाखेरी एक्सरे भइसकेको थियो र एक्सरे आउदै थियो । उहाँ त्यो बेलामा कन्सेस र एक किसिमले ब्लड प्रेसरहरु चाही स्टेवल । उहाँ कुरा गर्दै हुनुहुन्थ्यो । त्यहाँबाट भित्र जानासाथ अपरेसन थिएटरमा पस्नासाथ त्यो २ वटा अपरेसन थिएटरको विचमा एउटा कोरीडोर जस्तो छ । त्यहाँ लेफ्ट साइडमा

ट्रलीमा हाल वडामहारानी सरकार कोमल सरकार त्यहाँ ट्रलीमा लाईभ अन भइराखेको, होइवक्सन्थ्यो, यसो कोमल सरकारलाई हेर्दा सरकारको लेफ्ट साइजमा ब्याण्डेज थियो। त्यो ब्याण्डेजको वाहिरबाट एकदम भलभल्ती ब्लीडिङ्ग भइराखेको थियो । जुन चाहि चेष्ट ट्यूव, म पुग्नु भन्दा (अगाडि) लेफ्टीनेन्ट कर्णेल नरेस गिरीले राख्नु भएको रहेछ । ब्याजमा हेरेको त्यो ब्याज भरी पनि एकदम फ्रेस ब्लड थियो र एक्सरे पनि झण्डै झण्डै आइसकेको थियो । अनि ब्लड चाही आइपुगेको थियो । अनि ब्लड क्रस म्याचिङ्गहरु गर्ने त्यसपछि अपरेसनको लागि रेडी गर्ने भनेर भन्दा भन्दै त्यहाँ सवै चिज मिलाउँदै थियो । त्यसपछि अपरेसन थिएटर २ नम्वरमा एक नम्वरमा दिपेन्द्र सरकार, २ नम्वरमा वस्दाखेरी अपरेसन टेवलमा श्री धिरेन्द्र शाह, त्यहाँ टेवुलमा लागिरहनु भएको थियो । उहाँको पनि राईट साइडमा क्लाईभेकलको ठाउँमा सानो प्वाल थियो, त्यहाँ बाट ब्लीडिङ्ग भइराखेको थियो । त्यहाँबाट लेफ्ट स्क्यापूलाको रिजनमा ठूलो प्वाल थियो । राईटमा राईट स्क्यापुलामा ठूलो एकदम सिरीयस ब्लीडिङ्ग भइरहेको थियो । उहाँको राईट साइडको चेष्ट ट्यूवमा पनि एकदम व्यागमा भरिने ब्लिडिङ्ग भइरहेको थियो । उहाँको प्रेसरहरु एक किसिमले त्यति स्टावुल थिएन । उहाँलाई पनि एक्सरे झण्डै आइपुगेको थियो र त्यो लेफ्ट साइडको राईट साइडको एक्सरेमा पुरा ब्लडले भरिएको थियो । एकदम मल्टीपल फ्याक्याक्चर, मल्टीपल रिफ्याक्चरहरु थियो । पेसेन्ट एकदम सिरियस हुनासाथ, ३ जना पेसेन्ट लहरै हामीहरु हेर्दै थियौं । हेर्दा हेर्दै टिचिङ्गको पनि प्रोफेसर गोविन्द शर्मा, डाक्टर भगवान कोइराला, डाक्टर एनास्थेसिया जोशी डाक्टरसाव, त्यो बेलामा के भयो के भयो आउँदै थियो । मोर अर लेस त्यो बेलामा हामी अपरेसन गर्नलाई रगत र इन्स्टुमेन्टहरु रेडि भइसकेको थियो । भन्दा भन्दै सवभन्दा ओ.टी. नम्वर २ मा हुने धिरेन्द्र सरकारको कण्डीसन निकैनै डेटुवेट गरेर इन्टुवेट गर्नलाई हाम्रो व्रिगेडिएर साक्यजीलाई वोलायो । उहाँले गर्दागर्दै उहा जोशी जी आउनु भयो । त्यो इन्टुगेट गर्नासाथ हामीले इन्सुगेन्ट ल्याएर श्री धिरेन्द्र शाहको छातिको अपरेसन गर्न सुरु गर्‍यौं म, डाक्टर भगवान कोइराला म संग नरेश गिरी र अरु स्टाफ हुनुहुन्थ्यो, उहाँ अपरेसन गर्दा गर्दै हामीले अपरेसन सुरु गर्दै थियौं सुरुगर्दा गर्दै वाहिरको कोमल शाह हालको वडामहारानीसरकार उहाँको कण्डीसन एकदम डिटोरेट भयो । अव हामी पर्खन सक्दैनौं, ओटी दुईटा नै हाम्रो विजी भइसक्यो, त्यसपछि वाहिर कण्डीसन खराव भइसक्यो भन्दाखेरी त्यहाँ वाहिर कोरीडोरमा नै तुरुन्त अपरेसन गर्नुपर्ने भनेर हाम्रो गोविन्द डाक्टरसावले म संग आएर के गरौं भनेर भनेपछि अनि एनास्थेसियाले ल गोविन्द डाक्टरसाव र हाम्रो प्रोफेसर महेश खकुरेल डाक्टरसावले भन्नु भयो ल अव अपरेसन गर्नुपर्‍यो भनेपछि हाम्रो एनास्थेसिएन चाही हाम्रो अर्को हामीले त्यहाँ विजीट्याय यहाँ वाहिर यहाँ यस्तो यस्तो हुँदैछ है भनेर एककिसिमले भनीदिएको थियो । राई डाक्टरसाव, लेफ्टनेन्ट कर्णेल डाक्टर राई हुनुहुन्छ, वाहिरको पेसेन्ट वडामहारानी सरकारलाई इन्टुग्रेट गरेर प्रोफेसर गोविन्द शर्मा र प्रोफेसर खकुरेलले वाहिर सुरु गर्दै गर्‍यो । म भित्र २ नं. ओ.टी.मा धिरेन्द्र सरकारको अपरेसन गर्दै थिएँ । झण्डै झण्डै छातिको सकिन लागेको बेलामा फेरी वाहिर कुमार गोरख राणाको कण्डीसन डेटोरेट गर्‍यो भनेर खवर आउनासाथ अनि हाम्रो डाक्टर भगवानले भन्यो म गएर हेर्छु के हुन्छ हेरौं भनेर भन्दाखेरी पहिले एक्सरे गरिसकेको थियो । उहाँको हार्टमा केही इन्जोरी छ छैन भन्ने पत्ता लगाउनलाई उहाँजादा खेरी अनि कार्डेक टेम्पोनेट भएको जस्तो छ भनेर वाहिर त्यसपछि उहाँ वाहिर लाग्नु भयो । त्यसपछि त्यो अपरेसन गर्दा गर्दै हामीले २ वटा अपरेसन सकिसकेपछि फस्ट नम्वर थिएटर पनि खाली भएपछि अर्को गोरख शम्शेर राणाको अपरेसन सुरु गर्‍यो झण्डै ४ बजे ।

**डा. श्री उपेन्द्र देवकोटा (वरिष्ठ न्यूरोसर्जन)ः-**

(अस्पष्ट आवाज) लिएको चाहि कान भन्दा अगाडि पट्टी यो एयरलाईन भन्दा एक इन्चजति पछाडि पट्टिबाट यो त्यहाँबाट एक्जीट भएको हुनुहुन्छ ट्राक चाही यहाँबाट पसेर, लेफ्ट साइडवाट राईट साइडबाट एक्जीट, अव त्यो चाही इन्जोरीको नेचर हेर्दाखेरी, इन्ट्री होल सानो हुन्छ, एक्जीट होल ठूलो हुन्छ ।

द्याट इम्प्लाईज त्यो अरु खालको अब्जेक्टले मोर अर लेस त्यस्तो हुन सक्छ । ....... (मसिनो हल्ला)... त्यो आउण्डको नेचर हेर्दाखेरी चाही वान हाज टु साइन्टीफीक, रिजन देयरइज मिसाइल इन्जोरी, इन्ट्री पोइन्ट अन द लेफ्ट साइड जष्ट विहाइण्ड एयर एण्ड एक्जीट पोइन्ट वाज अन द राईट साईड । आइ हाभ् सेड अल रेडी इट् इज् मिसाईल इन्जोरी अरु टेन्टेटिभ इन्जरी जस्तो नाइफले गरेको इन्जरीमा यो क्यारेक्टरीस्टीक हुँदैन । व्रेनको अपरेसन गर्दाखेरी त्यसबाट कसैले ड्रग्स् वा नशालु पदार्थ चिज सेवन गरेको थाहा हुन्छ कि हुँदैन भन्ने प्रश्नको हकमा हामीले त्यसको चाहि इन डिउ टाईम वि हाभ टेकन केयर अफ द्याट अल्सो । अव त्यो बेलामा हामी लाइफ सेभ गर्न पट्टी नै लाग्यौं । हामीले थिएटरबाट निकालेर लैजादाखेरी, एम आर आई गरेर सवैकुरो गरेर इन्जुरीको नेचर सवै फाइनालाइज गरेर, ट्रिटमेन्ट प्लान गरेर आइ.सी.यू.मा लैजादा ६ जति बजेको थियो होला, त्यसपछि सवैकुरो सर्ट आउट गर्ने प्रकृयामा फिउचर युजको लागि, विभिन्न युजकोलागि काम लाग्ला भनेर हामीले राखेका छौं । द्याट इज क्लोज अप ।

हामीहरुले पहिला ब्रेन एक्सरे गरेर हेर्‍यौं । ब्रेन एक्सरे गरेर हेर्दाखेरी यसमा कतै पनि मेटल फ्र्यागमेन्टहरु छैन । दोस्रो कुरो मेटल फयाग्मेन्ट. भएको विरामीलाई हामीले एम आर आई गर्न सक्दैनौं । म्यानेजमेन्ट वेग्लै किसिमले जानु पर्थ्यो कि त्यो सिटि गर्नु पर्ने हुन्थ्यो, हुईच वाज मोर कम्प्लेक्स । पहिले ब्रेन एक्सरे गरेर हेर्‍यौं ब्रेन एक्सरेमा मेटल फयाग्मेन्ट नभेटेपछि सिटी स्क्यान गर्नु पर्थ्यो आर्मि हस्पीटलमा सिटि स्क्यान, छैन एम आर आई मात्रै छ । अर्को हस्पीटलमा लैजानु पर्‍यो भने गाह्रो हुन्छ । द्याट वाज क्लियर । जे मिसाइल हो त्यो चाही पास गरेर गयो । एम आर आई गरेर हेर्दाखेरी

टाउकोलाई होराइन्जेन्टेलल्ली काटे जस्तो हामीले आलू काट्दा काटेको जस्तो इस्क्यानरले काट्दै जान्छ । काट्दै गएपछि यो पुरा टाउकोलाई तेर्सो पार्दाखेरी कस्तो देखीन्छ त्यही देखिन्छ । त्यसमा देब्रे पट्टीका आउण्ड सानो छ दाहिने पट्टी ठूलो आउण्ड वनाएर दाहिनेपट्टी वाहिर निक्लेर गयो । र गएको ट्र्याक चाही अलिकति राम्रो ठाउँबाट गएको छैन । जुन ठाउँबाट गएको छ, त्यो ब्रेनको एकदम इम्पोर्टेन्ट एरियाहरु छ । हामी अलमस भन्छौं अलमस २ वटा हुन्छ दुइटालाई ड्यामेज गरेर गएको विरामीको सर्भाईभलको चान्स हुँदैन । लेफ्ट साइड वाट गएर अब्लीक्ली अली तेर्सो तरिकाले पछाडि पट्टीबाट गएर अगाडि पट्टी गयो र यो चाही ब्रेनकै सम्वेदनशील एरियाबाट जाँदाखेरी इम्पोर्टेन्ट प्वाइन्ट इज नोटेड इज इन्ट्री आउण्ड एकदम क्लोज रेन्जबाट गएको छ । किनभने इण्ट्री भएको आउण्ड एकदम सानो छ कन्चट भित्र वोनको ओपनीङ्ग यति सानो छ कि त्यसलाई ठूलो वनाउनको निम्ती मैले अर्को वड युज गरेर त्यसलाई ठूलो वनाउनु पर्‍यो, युजल्ली हामीहरु १६ मिलिमिटरको वडले इन्लार्ज गर्नुपर्ने ओपनीङ्ग त्यो भन्दा सानो भनेको टेन मिलिमिटर भन्दा वढीको छैन । किनभने १६ मिलिमिटरको वड युज गरेर त्यसलाई ठूलो वनाउनु पर्‍यो त्यसले एउटा कुरा मेसेज के दियो भनेदेखि पस्ने ठाउँको अब्जेक्टको डायमिटर ठूलो छैन, वट क्लोज रेन्जबाट गएको छ, स्कीन आउण्ड ठूलो छैन । नजिकबाट हान्यो भने आउण्ड सानो हुन्छ । त्यसकारण इट वाज फायरड फ्रम क्लोज रेन्ज ।

_समिति:_ अहिले हामी विशेषज्ञको हैसियतले के के उहाँले सोध्नुहुन्छ । ... त्यो भनिदिनुस् त । डाक्टर साहेवलाई विशेषज्ञको हैसियतले ...यहाँका अनुभवका कुराहरु

_जवाफ:_ अब मलाई पहिला अहिले हिसाव गर्दाखेरी सवा दश बजेतिर फोन गर्ने वित्तिकै आर्मीको गाडी आएर एकदम दौडाएर लिएर गएपछि जाँदाजाँदै । त्यसपछि मलाई माथि लगेपछि अपरेशन थिएटरमा युवराजधिराज सरकारलाई ओ.टी. टेवलमा सुताइराखेको, त्यो अवस्थामा मैले जाँच गरेर के फेला पारें भनेदेखि उहाँले त्यो सास फेर्नलाई ट्युव हालेर सास फेराई राख्नुभएको थियो र सास फेराई रहे पनि बीचबीचमा मुभमेन्ट थियो । त्यो मुभमेन्ट हामीहरु अंग्रेजीमा एक्स्टेण्डिङ्ग डिपेन्ड (Extending depend) भन्छौं । किन दुख्ने चिजले थिच्दाखेरी अथवा चिमोट्दाखेरी हातखुट्टा दह्रो बनाउने त्यो थियो र आँखाका दुईटै नानीहरु ... । आँखाका नानी फुकेको नराम्रो चिजमा हो । तर हात खुट्टा चलाईराखेको त्यो एक किसिमले ... काम गरिरहेको छ भन्ने देखाउने लक्षण हो । र सास फेर्ने प्रयास भए पनि त्यो व्यागले डाक्टर साहेवहरुले उ गरिराख्नु भएको थियो । र मुण्डहरु दुईटै हेरिसके पछि मैले देब्रेतिरबाट पसेको दाहिनेतिरबाट निक्लेको देब्रेतिरको कानको पछाडिपट्टीबाट पसेर दाहिनेपट्टी कानको अगाडिपट्टीबाट निक्लेको । त्यो उन (wound) त्यो स्थितिको गंभीरता मैले बुझिहालें र भरसक प्रयत्न गरौं तर नतिजा धेरै सकारात्मक हुँदैन भनेर बताई सकेपछि अनि मैले एक्सरे लिन लगाएँ । एक्सरे लिन लगाउनु भन्दा डाक्टरसाहेवले मैले हेरिहालें अब विरामीलाई चलवल गर्नु पनि हुँदैन । चलवल गर्दा विरामीलाई प्रेसर झन् बढी हुन्छ । तपाईहरुले औषधि लिएर प्यारालाइज गरेर अनि सम्पूर्ण रुपले त्यो सस्पेसस् मै राख्नुस् । त्यो भयो भने विरामीको प्रेसर घटाउन सजिलो हुन्छ । ... भयो । भनेर मैले त्यो रेकुमेन्ड गरें र त्यो शुरु गर्ने वित्तिकै मैले ब्लाष्टिक सर्जनलाई बोलाएँ । बोलाएर हामीले ... अपरेशन गर्‍यौं । त्यो बीचमा ... कुनै पनि ... फरेनबडीहरु थिएन । नभएपछि एम.आर.आई. गर्न सजिलो पनि भयो पछि हामीलाई । त्यसपछि भोलिपल्ट विहान ९ बजे कस्तो छ अवस्था भनेर हेर्दाखेरी त्यो बेलामा पनि सरकारको अवस्था त्यही थियो । आँखाका नानीहरु दुईटै फुलेका तर त्यो हातखुट्टा दह्रो बनाएर चलाउने प्रक्रिया थियो । यसको मतलव त्यो बेलासम्म ब्रेनले काम गरिरहेको ... । त्यसपछि विस्तारै समस्याले जटिल रुप लियो । ... बढ्यो अनि साँझसम्ममा स्थिति नराम्रो भयो । भोलिपल्ट विहान त ... । मेडिकल कन्डिसन यो हो । अब Clinically यो अनेक किसिमका शुरुमा आउँदाखेरी मै ... डेड भनेको कुरा त्यो प्रतिकारै गर्नुपर्छ । Clinically डेड भन्दाखेरी ब्रेनडेड पनि हुनुपर्‍यो, ... सिद्धिएको हुनुपर्‍यो । ब्रेनडेड भन्नु र ... डेड भन्नुमा त्यो बेलामा ब्रेन डेड गर्ने क्राइटेरिया पुगेको हुँदैन । मैले देख्दाखेरिमा जुन हातखुट्टा चलाइराखेको, सास पनि फेर्न खोजेको विरामीलाई डेड, ब्रेन डेड भन्ने कुरै आउँदैन । यो के भने अज्ञानताबस अननेसेसरी कन्ट्रोभर्सी आयो । र यसमा अब अलिअलि उहाँहरुले दुईजनाले यो हाम्रो नेपालीमा के भन्ने कोखामा मुख फाट्दाखेरी अलिकति गाह्रो भएको जस्तो छ । भन्न हुँदैन त्यो कुराहरु । विशेषज्ञले लिइसकेपछि के टेष्ट गर्छ ? कसो गर्छ भनेर विशेषज्ञलाई छोडिदिनुपर्छ । क्लिनिकल्ली डेड भन्ने कुरो आयो । क्लिनिकल्ली डेड हुनै सक्दैन । कोमा र क्लिनिकल्ली डेड ... दुईटै आँखाको नानीहरु खुलेको विरामीहरु त कहिले कहिले ब्लड ... ले मात्रै हो भने त हामीले बचाएर पठाएका छौं । त्यसलाई डेड भन्न मिल्यो । उहांले डेड लेख्नुभयो पत्रिकामा दुईटा आँखाको नानी खुलेको क्लिनिकल्ली ब्रेनडेड हो भनेर भन्यो भने त ... किन औषधि गरिरहने ? यो त मिस कप्सेप्सनको नै पराकाष्टा हो । यो पनि एउटा प्राध्यापक लेभलको मान्छेले त्यस्तो लेख्न थालेपछि त फेरि आफ्नो क्षेत्र होइन । मैले कानूनको कितावमा के लेखेको छ भनेर मैले न्यूरो सर्जनले भन्नु हुँदैन । यो उहाँहरुले आफ्नो क्षेत्रबाट अर्को क्षेत्रमा गएर अतिक्रमण पनि गर्नुभयो । एकदम अज्ञानताले ग्रस्त एउटा ... । यो मलाई बडा दुःख लागेको छ । प्रश्न भनेर अब मलाई नै नाम कोड गरेर फलानाले हेरेको ... ।

_समिति:_ कसले लेखेको ?

_जवाफ:_ अरुण सायमीले । र उहाँले अर्को दुईटा कुरो के भने मलाई आपत्तिजनक कुरो के लाग्यो भने म ... सल्लाह गर्नै आएको हुँ । म त ... यो भन्न विर्से यो भन्नै मिल्दैन । मैले त उहांहरुलाई खाली पत्रिकामा खाली जवाफ दिने कुरो यति मात्रै हो कि

तपाईले भन्नुभएको फिक्स गाइलेटेड पिपुल र ब्रेनडेडको विषयमा आकाश जमिनको फरक छ । यस्तो मिसकन्सेप्सन लिएर जानुभयो भने उपाय लाग्ने विरामीलाई पनि मरेको घोषणा गरिदिनु हुन्छ। त्यसकारणले चिकित्सकहरु सावधान हुनुपर्छ भनेर मैले भन्नु पर्ने ... । त्यति मात्रै यो घट्नालाई।

*समिति:* डाक्टर साहेवको ज्ञानहरु मानिसहरुमा साइकोजिकल्ली कस्तो कस्तो अवस्थाबाट भायोलिङ उसमा पुग्ने प्रेरणा प्राप्त गर्नुभयो ? कस्तो उत्तेजना अवस्थामा ? कुन कुन अवस्थाले त्यस्तो भायोलिङ उसमा जानु पर्ने उसको अवस्था रहन्छ भन्ने बारेमा डाक्टर साहेवको लिटरेचरहरुले, ... जानु भयो भने

*जवाफ:* यो अब म त डाइरेक्ट्ली सर्भेन्टसंग रिलेटेड भएको भएर यो धेरै ... हुदैन । तर ... अध्ययन गरेका छन् । तर कहिले कहिले के भने यो विशेष गरेर अमेरिकातिर, यूरोपतिर यो एक एक्स्ट्रिम फ्रस्टेशन भएपछि मान्छेले कहिले कहिले यदाकदाका घट्नाहरु वर्ल्ड सुसाइट प्याक नै गरेर पनि सबैलाई आफूसंग सबै सिध्याउने ... यो म एज एन एक्सपर्ट होइन । त्यो वेष्टर्न सोसाइटीमा देखिएका कुराहरु हुन् । आफूलाई अत्यन्त मान्छेले कति समय आफ्नो स्वास्नी छोराछोरी सबैलाई लिएर ... गर्ने गराएका पनि छन् । म त्यो विशेषको साइक्याट्रिक नभएको भएर मैले ... ।

*समिति:* यस सम्बन्धमा पोष्टमार्टम् कुनै पनि घट्ना केही कुराले पुष्टी गरिरहेको अवस्थामा पोष्टमार्टम गर्नु पर्ने हुन्छ अथवा के प्रयोजनको लागि गर्नु पर्ने हो ? यावत् कुराहरु आफ्नो अनुभव राखिदिनु हुन अनरोध गर्दछु ।

*जवाफ:* त्यसमा अन्तर्राष्ट्रिय ... के छ भने पोष्टमार्टम नगरेका यस्ता घट्नाहरु पनि छन् । नपर्ने कुनै एउटा स्थिति निर्माण भएको खण्डमा पोष्टमार्टम नगरे पनि हुने परम्परा छ कि यहांहरुको प्रश्न के भन्छ कि आदि इत्यादि कुराहरुमा सहयोग गर्नुस् न हाम्रो आयोगलाई।

**प्र.से.डा. नरेश गिरी**

अस्पतालपुग्ने वित्तिकै रायमाझी डक्टरसावले हि डाइरेक्टेड मि टु गो टु द अपरेसन थिएटर, अपरेसन थिएटर पुग्दाखेरी द फस्ट पेसेन्ट आइ स सी वाज हाल वडामहारानी सरकार, कोमल सरकार, सि वाज.................. इन्टर अ चेष्ट, जुन चाही एउटा सिस्टरले गर्स प्याड राखेर छोपी राखेको थियो । त्यसैगरी उहाँलाई हेरेर अइ वेन्ट टु धिरेन्द्र शाह, हि वाज अल्सो कम्प्लेनिङ्ग सिमिलर प्रोब्लेम, सिमिलर टाइप अफ चेष्ट ओण्ड कोमल सरकारको चाही विपी स्टार्टेड ड्रपिङ्ग, कार्डिया हुन थाल्यो । आइ वाज पुटिङ चेष्ट ट्युव । मैले चेष्ट ट्यूव हालें, चेष्ट ट्यूव हाल्दा झण्डै आधा लिटर ब्लड केम आउट, त्यो व्याग भरिएर फेरी अर्को व्याग भरिदै गर्दाखेरी सर्जन डाक्टर गम्भिरलाल राजभण्डारी हि एराइभ्ड, तर उहाँ पुग्नु भन्दा अगाडि आइ गन इन्साड, एउटा सानो ओटीमा धिरेन्द्र शाहजीको राईट चेष्टमा पनि मैले ट्यूव हालीसकेको थिएँ । ब्लड टेन्ट आउट, देन इट वाज डिसाइडेड एल डि क्वायर वा थेराकोटोमी त्यतिबेला सम्म कार्डियो थोरासिक टिम फ्रम टिचिङ्ग हस्पीटल र हाम्रो हस्पीटलको आइसक्नु भएको थियो । एन आइ हेल्प देम थोराकोटोमी अफ धिरेन्द्र शाह एण्ड गोरख सम्शेरको अपरेसनमा फस्ट गोरख शम्शेर हि हाड हिज राइट फर्म मिसिङ्ग त्यो सर्जरीमा पनि आइ असीस्टेड डाक्टर के.डि. जोशी एण्ड हाम्रो प्रमुख सेनानी डाक्टर वच्चुराम के.सी. । सर्जरी गर्दा गर्दै विहान भयो ।

**प्रमुख सेनानी डा. भैरवकुमार हमालः-**

म त्यो दिनको अन कल सर्जन थिएँ । म करिव ९ बजेर १५ मिनेट जति गएको थियो होला । त्यस्तै समयमा मलाई एउटा कल आयो हस्पीटलबाट कि महाराजाधिराज सरकार एक्सीडेन्ट भएर ल्याएको छ । जुन साधनबाट भएपनि तत्कालै आउनु पर्‍यो भनेपछि, तत्काल मैले जुत्ता लगाएर मेरो मोटरसाईकल लिएर अन्दाजी १२ -१३ मिनेटमै म हस्पीटल पुगिसकेको थिएँ । त्यसपछि मैले हस्पीटलमा एडिसीहरुले घाइते ल्याई रहेको देखें । तत्कालै म ट्रमा हलमा पुग्दाखेरी ट्रमा हलमा जुन बेडहरु ल्याएर घाइतेहरुलाई राखेको थियो त्यसमा पहिलो बेड नै (पहिलो ट्रलीमै) श्री ५ महाराजाधिराज सरकारलाई सुताइएको थियो र त्यो बेलामा खगेन्द्र डाक्टरसाव जरसाव र नर्सहरु मिलेर कार्डियोपर्मिलोजी सब्सीडिसन गरिरहनु भएको थियो । सरकारलाई रिभाइज गर्न प्रयास गरिरहेको देखें र उहाँहरुले कन्टीन्यू गर्दा गर्दै म सर्जनको नाताले मैले इन्जरी ( घाउ) तर्फ ध्यान दिएँ । (देखिएको इन्जुरी तर्फ ध्यान) दिंदाखेरी सरकारको वायाँ पट्टि कानको अगाडि पट्टीको खप्परको भागबाट ब्लीडिङ्ग भइरहेको थियो र त्यो ब्रेनबाट पनि वाहिर आइराखेको थियो र दाहिनेपट्टीको कानको अधिल्लो हिस्सा र गर्धनतिर २ वटा प्वालहरु थिएँ । त्यस्तै गरी कुम नेर पनि प्वाल थियो । त्यसपछि दाहिने कोखामा एउटा राइटेरिया फोसा निर एउटा प्वाल थियो । त्यस्तै गरेर दाहिने एल्वो, करिव करिव स्काटड नै थियो । यसो चलाउँदाखेरी कचा कुचुक आवाजहरु आउने, कम्पाउण्ड कमिन्यूटर फ्याक्चर भन्छौ हामीहरु त्यसरी सारै ब्लिडिङ्ग भइराखेको थियो । सरकारको सम्पूर्ण वस्त्रहरु जम्मै रगतले भिजेको थियो । त्यसपछि उहाँमा पनि एक किसिमको साइन्स अफ लाइफ देखिएन । पल्स थिएन । ब्लड प्रेसर थिएन । अनि कुनै किसिमको चेतना थिएन । एकदम फुङ्ग उडेको सेतो नै थियो करिव करिव छाला

एकदम चिसो थियो कोल्ड स्कीन र प्यूपील्सहरु डाइलेटरल फिक्स थियो । अनि त्यो जाँच गर्दागर्दै मैले ब्लीडिङ्ग एरियाहरुमा स्टेराइज प्याडहरु राख्दै थिएँ । त्यत्तिकैमा मैले के देखें भने त्यही बीचमा धेरै क्यासल्टीहरु आइसकेको थियो र करिव करिव हाम्रो नौ वटा ट्रलीहरु भरिईसकेको थियो । त्यत्तिकै बीचमा मैले के हल्ला सुने भने युवराजाधिराज सरकारलाई ल्याए भन्ने वित्तिकै अनि म यूवराजाधिराज सरकार तिर लागें । उहाँको अवस्था कस्तो थियो भने विल्कुल अनकन्सेस् तर सास फेरि वक्सेको थियो । सास चाही एकदमै न्वाइजी खालको ब्लिडीङ्ग थियो । घ्यार घ्यार गर्ने किसिमको नाइजी, इस्टाइडरस ब्लीडीङ्ग भन्छौ त्यस्तो थियो र पल्स थियो, पल्स रेट १०० पर मिनेट रेगुलर नै थियो । ब्लड प्रेसर पनि १०० वाई ६० जति रेकर्ड गरिएको थियो । उहाँको वायाँ पट्टि कन्चटमा टेम्प्लेट रिजनमा एउटा प्वाल थियो । जो सानो थियो जस्तो लाग्छ मलाई दाहिने पट्टी धेरै ठूलो प्वाल थियो । दुवै प्वालबाट रगत आइरहेको थियो । दाहिनेपट्टीको बाट पनि वाँया पट्टीको बाट पनि ब्रेन टिस्यू उजीङ आउट थियो । दाहिने पट्टिको चाहि वढी उजीङ भइरहेको थियो । प्यूपिल्स (Pupils) चाहि डाइलेटेड थियो फिक्स थियो । रियाक्टीङ्को लाइट थिएन । त्यसपछि त्यत्तिकैमा मेरो सहयोगको लागि एनास्थेसीयोलोजीष्ट ब्रिगेडिएर जनरल डाक्टर गौतम रत्न साक्य आउनु भयो, हामी दुइजना मिलेर सवभन्दा पहिला हामीले त्यो नेक एक्सटेन्ड गरिदियौं । एक्सटेन्ड गर्ने वित्तिकै त्यो घ्यार घ्यार आवाज वन्द भयो । स्वास फेर्न सजिलो होस् भनेर । अनि स्टेराईज्ड प्याड लगाई दियौं । दुईटै टेम्प्लेट रिजनमा अनि त्यसपछि आइ.वि.फ्यूडल चलाई सकेपछि अनि उहाँको इन्टीवेट गर्नुपर्ने, फर्दर नियोलजीकल गर्नुपर्ने भएको हुनाले हामी तत्कालै अपरेसन थिएटरमा लग्यौं । लगिसकेपछि म अपरेसन थिएटरमा विजी भएँ हामीलाई कोअर्डिनेट गर्न ब्रिगेडिएर जनरल डाक्टर कृष्णनरसिंह रायमाझी हाम्रो सर्जन होइवक्सीन्थ्यो । त्यत्तिकैमा भित्र थिएटरमा लगिसकेपछि उहाँलाई कर्नल डाक्टर विजुल निख प्रसिकोले आएर इन्टोभेट गरिदिनु भयो । इन्टोभेट गरिदिएपछि त्यही बीचमा मैले के देखें भने लगाएको ड्रेसीङ्ग चाहिं विस्तारै फुकेर आएको रगतको क्लटले गर्दाखेरी स्वाइल अप भएर आएको रहेछ । फेरि मैले स्टेराईज्ड ड्रेसीङ्गहरु रिअप्लाई गरिदिएँ, त्यसपछि मेरो सर्जनको काम सिद्धियो । न्यूरो सर्जनको आवश्यकता पऱ्यो । अनि मैले हाम्रो चिफ सर्जन ब्रिगेडिएर जनरल डाक्टर रायमाझीलाई रिक्वेष्ट गरें कि यतिबेला हाम्रो, हाम्रो न्यूरोसर्जनलाई त खवर भइसकेको छ, तर वरिष्ठ न्यूरो सर्जन श्री उपेन्द्र देवकोटा डाक्टरसावलाई पनि हामीले इन्भल्व गर्नुपर्छ यस्तो बेलामा किनभने उहाँको ओपीनियनको एकदम जरुरत छ भन्ने मैले रिक्वेष्ट गरें । भन्ने वित्तिकै उहाँले तुरुन्तै खवर गर्नु भयो । त्यसपछि उहाँकै उपचारमा हामी लाग्यौं । त्यही बीचमा अर्को अपरेसन थिएटरमा श्री धिरेन्द्र शाहलाई उहाँलाई चाहि दाहिने तिरको छातिमा भित्र उहाँको पेनेटरी इन्जुरी थियो । त्यो राईट साइड इस्क्यापुलामा एक्जीट हुन्थ्यो । त्यसपछि नेकमा ल्यासल्स हुन्थ्यो । अनि उहाँको राईट साईडमा ह्यूमोथोरेक्स थियो । त्यो कारणले उहाँलाई सास फेर्न गर्न गाहारो भइराखेको थियो । वारंवार उहाँले (नेकमा) मलाई घाँटि अप्ठयारो भयो घाटी अप्ठयारो भयो भनेर वोल्दै हुनुहुन्थ्यो ।

यो कसरी भयो भन्ने कुरा उहाँले केही पनि भन्नु भएन । खाली उहाँको कम्प्लेन वारंवार सास फेर्न गाहारो भयो । गर्धन दःख्यो भन्ने मात्रै थियो अनि हामीले रिङ्ग राखिदियौं पछाडि पट्टि, त्यसले अलिकति इजडव हुनु भयो । त्यही बीचमा वाहिर करेडोरमा हाम्रो ओ.टि.को करेडोरमा अधिराजकुमारी हाल वडामहारानी सरकार कोमल राज्यलक्ष्मी शाह सरकारलाई पनि ल्याएको थियो । उहाँको पनि त्यही पिडा थियो दःखेर, सरी लेफ्ट ह्यूमोथेराक्स थियो । मैले के देखे त्यति बेला कोमल सरकारलाई मेरो साथी सर्जन प्रमुख सेनानी डाक्टर नरेस गिरीले चेष्ट टियूव हाल्दै हुनुहुन्थ्यो सास फेर्न सजीलो गर्नको लागि त्यसपछि फेरि उहाँले नै उतापट्टि धिरेन्द्र शाहलाई चेष्ट ट्यूव हालीदिनु भयो । त्यही बीचमा हामीले कोअर्डिनेट गर्दा गर्दै मलाई खगेन्द्र डाक्टरसावले तपाई तल आउनुस् ट्रमा हलमा भनेर वोलाएर लगियो र त्यो बीचमा अन्य मृतकहरुको घाउको लिष्ट वनाइदिनुस् कस्तो कस्तो इन्जुरी छ भनेको हुनाले म, सेनानी डाक्टर नर्वदा थापा उहाँ नर्स हुनुहुन्छ, त्यसपछि डाक्टर क्याप्टेन साव सुसील, अनि डाक्टर क्याप्टन हेम सागर रिमाल र अरु दूइटा नर्सहरु मिलेर अनि फेरि डिटेलमा घाउहरु हामीले हेरेर टेस्टसीट तयार गरेर हामीले लेखिदियौं । त्यसपछि घाउहरु सफागरेर स्टेराईज्ड व्याण्डेज लगाएर अनि दर्जानी (अनुसार) महाराजाधिराज सरकार, वडामहारानी सरकार, त्यस्तै सिलसिलामा हामीले उहाँहरुलाई लेआउट गरेर सेतो कपडाले ओढाएर पर्दाहरु लगाईयो । स्क्रीन लगाइयो । त्यसपछि होल नाइट डिउटीमै लाग्यौं । भोलीपल्ट विहान साढे वाह्र वजे विहान म वाहिर निस्कीएँ ।

**महासेनानी डाक्टर विदुर केसीः-**

मैले ९:३० मा हस्पीटलबाटै कल पाएँ । महाराजाधिराज सरकार सिरीयस होइसिन्छ भनेर त्यसपछि म पुग्दाखेरी डाइनोथेक्टी भएको थियो । अनि म ट्रमा हलमा पुग्दाखेरी स्ट्रेचरमा युवराजाधिराज सरकारलाई राखेर माथि थिएटर तिर राख्ने तयारी भइराखेको थियो । र हामीले तुरुन्तातुरुन्तै माथि थिएटरमा लगेर सवभन्दा पहिले मैले घाटी भित्र हेर्दाखेरी घाटिभित्र प्रसस्त रगत थियो । अनि त्यो रगत मैले सफागरेर इन्टीभेट गरें । इन्टीभेट गरेर अक्सीजन दिएँ । त्यतिबेलासम्म साथ दिनु हुनेमा डाक्टर रायमाझी, डाक्टर हमाल हुनुहुन्थ्यो अनि डाक्टर साक्य पनि हुनुहुन्थ्यो । त्यसपछि इन्भीभेसन दिएपछि अनि न्यूरो सर्जनहरु, सर्जनहरु भेला गरेर अव के गर्ने भन्दाखेरी त्यहाँ अपरेसन गर्ने टुंगो लाग्यो, अपरेसन पौने ११ बजे करिव सुरु भयो करिव पौने पाँच बजेसम्म अपरेसन भइराखेको थियो । त्यो बीचमा सरकारको ३ वटा ब्लड हामीले चढायौं त्यो बिचमा ब्लड प्रेसरहरु ब्लीडीङ्गहरु सव मेन्टेन थियो, अक्सीजन पनि मेन्टेन थियो । त्यसपछि हामीले युवराजाधिराज सरकारलाई एमआरआई गर्न एम.आर.आई. कोठातिर लग्यौं र एम.आर.आई. कोठामा लग्दाखेरी पनि

हामीले अक्सीजन मेन्टेन राखेको थियौं । ब्लड प्रेसर मेन्टेन राखेको थियौं, एम.आर.आई. करिब आधा घण्टामा सकिएपछि हामीले भिभिआइपीमा राखेर सरकारलाई भेन्टीलेटरमा राख्यौं ।

**डा. सुशील कृष्ण शिव पोखरेल (टिचिङ्ग हस्पिटल, जियो सर्जन):-**

बेसिकल्ली पहिला कुराहरु सबै भैसक्यो । म चाहिं हाम्रो टिचिङ्ग हस्पिटलको टीमबाट ५ जनाको टिममध्ये एकजनाको त्यो बेला सिनारियो, हामी कसरी आइपुग्यौं, सबै पहिला बताइ सकेको छ । बेसिकल्ली त्यो दिन म स्टायण्ड वाईको रुपमा थिएँ । र डेसिजन मेकिङ्गमा पनि केही मैले पनि अप्रेसनको लागि क्लोज गर्ने, क्राउन प्रिन्सको, सबै जिम्मा केही कुराहरु भएको थियो । तर त्यो भन्दा मुख्य एउटा एडिसनको कुरा के थियो भने धीरेन्द्र शाहको अप्रेसन सकिएपछि दोस्रो दिन उहांको लगभग सांझ १० बजेतिर जब हामीले त्यहि न्यूरो एक्जाम गर्दाखेरी उहांको खुट्टाहरु नचल्ने भन्ने कुरा भयो । त्यसपछि हामीले फर्दर इन्भेष्टिगेसन गऱ्यौं । र उहांको वास्तवमा त्यसबेला हातको, दायां हात त्यसबेला स्लिन भन्छौं हामी, त्यसमा राखिएको थियो । र बायां हात उहां माथितिर ल्याउन सक्नु हुन्थ्यो । तर तलतिर लान सक्नु हुन्नथ्यो । त्यसबेला हामीले अरु फर्दर जांच गर्दाखेरी उहांले तलको भागमा खुट्टा, बडीमा र हातको यता तलतिरको भागमा उहां थाहा पाउनु हुनथिएन । त्यसबेला हामीले फेरि पुन: त्यसबेला छातीको एक्सरे गरिएको थियो । त्यो छातीको एक्सरेमा घांटीको फोर्सन पनि अलि देखिएको थियो । त्यो फोर्सन हेर्दाखेरी त्यहां घांटीको करङ्ग, सर्टकश फाइन भन्छ, त्यसको सातौं नम्बरमा दायांतिर फ्र्याक्चर थियो । त्यसै क्रममा मैले डाक्टर राजीव शाहीलाई कस्तो प्रकारले यो इन्जर्ड भयो ? किनभने यो डाइग्नोसिसमा हुन्छ भनेर मैले सोधेको थिएं । उहांले प्रत्यक्ष रुपमा भन्नु भएको थियो । उहांलाई कुनै चीजले लागेको थियो । र दुई फिट जति फालेर भुईमा उहां लड्नु भएको थियो भन्ने कुरा उहांले प्रत्यक्ष रुपमा मलाई भनेको थियो । त्यसको आधारमा अब फर्दर जांच गर्ने त्यो सिचुएसनमा, किनभने विरामीलाई ब्लड प्रेसर धेरै कम थियो । ब्लड प्रेसर बढाउने औषधि दिइराखेको थियो । सास फेर्नलाई पाइप हालिराखेको थियो । हरेक पटक विरामीलाई अलिकति माथि तल गर्दाखेरी प्रेसर डाउन हुने, त्यस्तो अवस्था थियो । त्यसकारणले त्यहि पोष्ट अप वार्डमै गर्न सक्ने कुरा के थियो भन्ने कुरा भयो । हामीले त्यसबेला एक्सरे, घांटीको एक्सरे एउटा गर्ने प्रयास गऱ्यौं । त्यति राम्रो निस्केन । जुन स्पाइल कोडको इन्जरी हुंदाखेरी हामी औषधि युज गर्छौं, स्टेरोइज भन्छ, त्यो हामीले हाई डोज त्यसबाट शुरु गऱ्यौं । मेजवल एडिसन गर्न खोजेको यो मैले विरामीको हिस्ट्रि सोध्ने क्रममा यो चीज, मोड अफ इन्जरी, कस्तो थियो र त्यसको म्याग्नेटुड कस्तो छ भन्ने कुरामा डा.राजीव शाहीले यहि बताउनु भएको हो ।

**डा. हरिहर वस्तीको *जवाफ:***

म डा. हरिहर वस्ती, १० वर्षदेखि काठमाडौं जिल्लाको मेडिकल ... अन्य कार्य लगायत नियमित लाश जाँच कार्यमा संलग्न छु । हाल वीर हस्पिटलबाट यो डिपार्टमेन्ट टिचिङ्ग हस्पिटल महाराजगंज सरेको हुनाले हाल श्री ५ को सरकारमा सरकारी सेवामा भए पनि त्यहाँ मलाई पठाइएको छ कामकाज गर्न । त्यो विभागमा कार्य गर्छु । खासगरेर लाश जाँच सम्बन्धमा हाम्रो मुलुकी ऐन लगायत सरकारी मुद्दा सम्बन्धी ऐनले सबै कुरो नसमेटे पनि धेरै कुरो प्रष्टै रुपमा बोलेको पाइन्छ । कुनै पनि अस्वाभाविक मृत्यु, ..., शंकास्पद ज्यान र सबै अवस्थामा लाश जाँच गरेर प्रतिवेदन दिनु पर्ने भन्ने हाम्रो प्रावधान छ । त्यही अनुसार काम भैराखेका छन् र प्रश्नहरु आइरहन्छन् कि प्रष्टसंग सबैले देखेको दुर्घटना छ त्यसमा लाश जाँच किन गराउने, त्यसै क्षत्विक्षत् भैसकेको छ मृत्युको कारण थाहा छँदैछ, जस्तै, मृत्युको कारण थाहा छँदैछ किन लाश जाँच गराउने भन्ने ... पोष्टमार्टमको विश्वव्यापी जुन एउटा प्रयोग भैराखेको छ यो खाली मृत्युको कारणलाई मात्रै होइन यसले विविध धेरै कुरामा मद्दत गरिराखेको हुन्छ । एउटा मृत्युको कारण प्रमुख हो । त्यो देखि बाहेक मृत्युको समय, यसै अनुसन्धानबाट निश्कन्छ कुन समयमा मृत्यु भएको थियो भन्ने कुरो र विभिन्न इन्सिडेन्टहरु, घट्नाहरु हुन सक्छन् त्यो मृत्युमा । एउटा मात्रै घट्ना नभएर घट्नाको शिलशिलेवार हुन सक्छ । एकपछि अर्को के भयो भन्ने कुरो शिलशिलेवार पोष्टमार्टम ... निक्लिदैन, निश्कर्ष निकाल्न सकिदैन र त्यसैले अस्वभाविक घट्ना सबै किसिमको मृत्युमा लाश जाँच गर्नु अनिवार्य हुन्छ र विश्वव्यापी रुपमा गरिन्छन् । जस्तो बम एक्स्प्लोजनमा, ... हरुमा ... प्रष्ट छ, त्यसमा कुनै शंका छैन तर पनि लाश जाँच गरिन्छ । प्लेन क्र्यासमा जाँच गरिन्छ । आइडेण्टिफिकेशन लगायत व्यक्तिहरुको सनाखत लगायत अब किनभने यसले दुर्घटनाको कारण पनि कतिपय अवस्थामा यसले निकाल्छ । किनभने यस्तो कतिपय अवस्थामा जस्तो प्लेन क्र्यासमा प्लेन एक्सिडेन्ट हुनुको कारण पोष्टमार्टम गरिसकेपछि सबै ... पोष्टमार्टम गरिसके पछि पत्ता लाग्न सक्छ । त्यहाँ पहिले अरु कुनै ... त्यो एक्सिडेन्टको बारेमा .... । त्यस्तै अन्य एक्सिडेन्टहरुमा पनि र अस्वाभाविक सबै मृत्युहरुमा पोष्टमार्टम यी कारणहरुले ... मृत्युको कारण, मृत्युको समय, दुर्घटनाहरुको श्रृंखला, क्रोनोलोजी पत्ता लगाउनु र त्यो देखि बाहेक सर्टेन कुराहरु मृतक लाशबाट निकालेर परीक्षण गर्नु पर्ने पनि हुन्छ । यी सबै कुराहरुको वास्तविक निश्कर्षमा पुग्नको लागि र त्यसको लागि पनि पोष्टमार्टम नगरिकन ती कुराहरु निश्कन सक्दैन ।

सामान्यतया यो पोष्टमार्टम गर्नैपर्छ नगरिकन हुँदैन । तर कतिपय अवस्थामा पोष्टमार्टम हुँदैन। जस्तो हामीले कतिपय उसमा पढेका थियौं सय वर्ष पुरानो, पचास वर्ष पुरानो ९ँयककर्ष० हड्डी ... फेला पऱ्यो त्यसलाई साइन्टिफिक हिसावबाट टेष्ट गरेर के गरेर ... एडभान्स ... हरु होलान् । त्यसबाट पनि कज अफ केशहरु रिसिभ गर्न सकिन्छ । अर्को

एउटा पार्ट कतिपय अवस्थामा पोष्टमार्टम हुन सक्दैन । त्यसको केश मेडिकल टेष्ट हुँदैन । तर पनि अन्य चिजहरु जो छन् नि हाम्रै कानूनले पनि यो शुद्ध दुर्घटना हो, यस्तो किसिमको अवस्था हो पोष्टमार्टम नगरे पनि हुन्छ भन्ने लागेमा नगर्न पनि सकिने भन्ने ... त्यो प्रोभिजन पनि छ। अनि पहिले त अदालतले पोष्टमार्टम नगरे हुन्छ भनेर सर्टिफाई गर्ने ... यो यसमा पोष्टमार्टम नगर्नु भनेर सर्टिफाई गरिदिने, उनीहरुले पनि ... त्यस्तो अवस्थामा बाँकी जो ... डेड बडी त लगेको छ एक्सिडेन्ट केश हो । मान्छे हस्पिटल लगेको, त्यो एक्सिडेन्ट हो, गाडीले किचेर मरेको हो । यो ... अब यसलाई पोष्टमार्टम किन गर्ने किनभने ... रिलेटिभ्सहरुको सेन्टिमेन्ट र अरु केही कम्प्लिकेसन्स पनि हुने भन्ने हिसावले पनि छोडिन्छ । त्यो बडीको फिजिकल स्थिति हेरेर कज अफ डेथ स्थिति भन्न सकिंदैन ।

त्यो सकिन्छ विभिन्न अवस्थामा सकिने अवस्था पनि हुन्छ र हामी डिटेल पोष्टमार्टम गर्नु भनेको ठिक एंगलबाट एक्जामिनेशन गर्नु, त्यो एक्सटर्नल एक्जामिनेशनमै मात्रै पनि सिमित रहन सक्छ । लाश चिर्नै पर्छ भन्ने छैन । तर यस्तो कुनै पनि घाउ भेटियो भने त्यसलाई एउटा ... एंगलबाट इन्टरप्रिटेशन हुनुपर्‍यो त्यसले धेरै कुरा बोल्छ । जब कि जेनेरल चिकित्सकले मात्रै हेर्दाखेरी घाउ र उपचार यो दुईटा इन्जुरी र उपचारको एंगलबाट मात्रै उनीहरुले देखेको हुन्छ एउटा सर्जनले देखेको हुन्छ भने ... त्यो घाउको कजेशन, ड्युरेशन, अरु विविध अनुसन्धानसंग सम्बन्धित यसकारणले कि अब इल्लिगत मेडिशिनको बाहिरी पनि भिज्युयल्ली हेरेर पनि फरेनसिक एंगलबाट हेर्ने भन्ने कुरो । जस्तो कुनै एउटा फायराम ९ँच्भ ब्कक० इन्जुरीको एक्जाम्पल लिउँ । फायराम इन्जुरी कुनै एउटा सर्जनकहाँ गयो भने प्वाल परेको घाउ फायरामले हुन सक्ने सर्जनलाई अलिकति ओरियन्टेशन देखाउने, प्वाल पारेको हुन सकिन्छ । इन्ट्री, एक्जिट अलिकति कुशल चिकित्सक रहेछ राम्रोसंग पनिसिङ्ग मेडिसिन पढेको रहेछ भने यो इन्ट्री यो एक्जिट भन्न सक्ला तर सबै चिकित्सकले त्यो पनि सक्दैन । जब कि इन्ट्री एक्जिटमा फरेनसिप अनुसन्धानको हिसावकितावबाट धेरै ठूलो महत्व राख्छ । त्यसलाई भित्र चिरेर त्यसलाई अरु कन्फर्म गर्ने कहिले पनि शंकास्पद हुन्छ । इन्ट्री, एक्जिट सानो ठूलो नभएर एकै किसिमको साइजको भयो भने भित्र चिरेर ड्यामेज टिस्युको डिरेक्सन कतापट्टी छ, जतापट्टी अगाडि बढेको छ त्यो एक्जिटतिर गयो उता अपोजिट साइडको इन्ट्री हुन सक्दैन । यी कुराहरुको कन्फरमेशन अब ... पोष्टमार्टम लगायतका अथवा अरु एक्स्टरनल एक्जामिनेशनबाट मात्रै पनि हुन सक्छ । जस्तो एक्स्टरनल एक्जामिनेशनबाट फायराम इन्जुरीमा घाउको जुन घाउ ड्यामेज स्किन छ अथवा मासु छ त्यो एरियाको ल्याव परीक्षण गरेर पनि धेरै कुरा भन्न सकिन्छ । जस्तो कार्वनमोनोअक्साइड लेभल इन्ट्री घाउमा भेटिन्छ एक्जिट घाउमा भेटिदैन । हड्डीमा परेको प्वाल इन्ट्री घाउमा भित्रपट्टी फर्केको ड्यामेज बाहिरबाट शुरु भएको हुन्छ भने एक्जिट घाउमा हड्डीको भित्री पाटोबाट ड्यामेज शुरु भएर बाहिरपट्टी फर्केको हुन सक्छ । हुन्छ नै । त्यो ... सत्य हो । त्यसैले यी विविध कारणले गर्दाखेरी अब प्रष्ट मृत्युको कारण थाहा छँदैछ भनेर पोष्टमार्टम नगराउने यो पनि एउटा एक किसिमको छुट जस्तो छ, एस्क्युज जस्तो छ । यसले अनुसन्धानमा हामी घाटा नै देख्छौं ।

एउटा कुनै प्वाइन्टबाट सानोबाट घाउ भयो अर्को साइडमा ठूलो घाउ रहन्छ भने त्यहाँ अरु के के हुन सक्छ त अरु । ... बाहेक कुनै पनि ... अन्य कुनै संभावना ... । यदि त्यो एउटै इम्प्याक्टबाट हो भने खास गरेर दुईटा कन्डिसनमा मात्रै त्यस्तो किसिमको ... इम्प्याक्ट एउटै हो भने । अब अलग अलग ठाउँमा, अपोजिट ठाउँमा बाहिरी इम्प्याक्ट पर्‍यो भने पनि डवल इम्प्याक्ट ... त्यो अर्कै कुरो भयो । ... यदि एउटै इम्प्याक्टबाट एक ठाउँबाट त्यसको अपोजिट ठाउँमा पनि घाउ भयो भने मिसाइलकै घाउ हुनुपर्छ एउटा, मिसायल भन्नाले फायरआर्म मिसाइल एउटा भयो र अर्को एक्स्प्लोजन मिसाइल । एक्स्प्लोजनमा पनि फायरआर्म भन्दा पनि शक्तिशाली मिसाइलहरु जान्छ । विष्फोटनबाट निस्केको त्यो मिसाइल र फायरआर्मको मिसाइल। र त्यो देखि बाहेक यदि भोलुम कम भएको कुनै अंगमा ... स्टार्ट गर्‍यो भने पनि अपोजिट साइडतिर निश्कन सक्ने चान्स हुन्छ । भोलुम कम भएको र धेरै लामो र खासगरेर नरम भागमा जस्तो हड्डी भएको द्याट इज अनलाइक्ली ।

–

एउटा मात्रै एक्जिट जस्तो लाग्यो मलाई । र इन्ट्री पनि लेफ्ट मै भनेको र एक्जिट पनि लेफ्ट मै भनेको हो? योचाहीं भन्न नसकिने भयो किनभने यहाँ एउटा इन्ट्री र ... यहाँ अर्को यहाँ एक्जिट लेखेको छ यहाँ इन्ट्री लेखेको छ । अब यहाँबाट गएको माथि इन्ट्री भएको हो अथवा ... अन्त राइटसाइट केही पनि लेखेको छैन होइन । लेफ्ट क्लेरिकल भनेको घाँटीमा घाँटीको तल्लो भाग हो । लेफ्ट क्लेरिकल भनेको, इन्ट्री भयो लेफ्ट प्रिअपरिकुलर भनेको ... कानको बीचको भाग हो । यहाँ एक्जिट त्यो होइन, एउटै होइन र अब त्यो कहाँको ... एक्जिट भनेर लेखियो अब त्यो इन्टरप्रिटेशनको ... त्यसको इन्ट्री छैन, यो ... यसको इन्ट्री छैन एक्जिट मात्रै भनेको छ । ...

*समिति:* यो इलियाखोसा भनेको के हो ?

*जवाफ:* इलिसाखोसा भनेको पेटको पल्लो भाग । त्यो ढाडको सबभन्दा तल्लो भाग हो । जुन एक्जिट भनियो त्यसको इन्ट्री कहीं पनि छैन । लेट प्रिअरिकुलर भनेको कानको ठ्याक्क अगाडि त्यसको त्यो एक्जिट होइन । ५ वाइ ३ भनेपछि इन्ट्रीलाई अलिकति ठूलो साइज भयो त्यसैले कसरी यो इन्ट्री भनेको हो फेरि ब्रेण्ड टिस्यु ... आउट भनेको छ ।

*समिति:* यो प्रिअलिकुलर ... भनेको कहाँ पऱ्यो त ?

*जवाफ:* कानभन्दा अगाडि । त्यहाँ एक्जिट छ तर त्यसको इन्ट्री कहीं पनि छैन । टाउकोको अर्को कुनै दाहिनेपट्टीको अथवा पछाडिपट्टीको भागमा हुनुपर्दछ । त्यो छैन । तल घाँटीको तल्लो भागको त्यहाँ एक्जिट हुन सक्दैन । भयो भने यता माथितिर जान्छ । यो साइडमा जान्छ । देब्रेपट्टी पनि होइन दाहिनेपट्टी जानु पर्ने हो । उसैको टाउकोमा यदि छ भने टाउकोमा अपोजिट राइटसाइडतिर कहीं हुनैपर्छ अथवा ब्याकमा । ...

*जवाफ:* ... भनेको पछाडिपट्टी भनेको हो । कमिनिटेट ब्रेष्ट फ्याक्चर भनेको हड्डी टुक्रा टुक्रा भएको हो, धेरैवटा टुक्रा भएकोलाई भनिन्छ । त्यो घाउबाट गिदी आइराखेको छ । इजिट्रेटिङ्ग भनेको प्वाल परेको । भित्र छेडिएको ... । दायाँ ... कुम र छातीको माथिल्लो भागमा ४ वटा इन्ट्री ... ।

यसमा फरेनसिक प्याथोलोजिष्ट मृत्युको कारणको लागि कुनै शंका हुँदैन । हुन्छ । मृत्युको कारणसंग यति इन्जुरी भैसकेपछि मान्छे यसैले मऱ्यो भन्ने कुरामा कुनै शंका हुँदैन । कहीं पनि कसैले च्यालेन्ज गर्ने आधार हुँदैन यदि इन्जुरी भैसकेपछि । किनभने इन्ट्री पनि छ एक्जिट पनि छ, ... अथवा भाइटल ... छ सिंगलै भए पनि । त्यसको लागि केही हुँदैन । तर अघि नै मैले भने जस्तै इन्भेष्टिगेशनको शिलशिलामा अरुको लागि जरुरी हुन्छ । किनभने एंगलको कुरो आउँछ। र यसमा खाली फलानो ठाउँमा कि इन्ट्री भनेको छ कि एक्जिट भनेको छ अब त्यो ठिकसंग भनेको छ कि छैन । किनभने एउटा एक्जिट भेटिन्छ तर इन्ट्री कहीं पनि भेटिंदैन भने पछि त्यहाँ ... हिडन अथवा इन्ट्रीलाई नै एक्जिट भनिएको होला ।

एउटा कुरो त्यो भयो अब अरु अब इन्भेष्टिगेशनको क्रममा भित्र बुलेट इन्ट्री छ एक्जिट छैन भनेपछि बुलेट इज देयर । भित्र छ । बुलेटको इन्भेष्टिगेशनले धेरै कुरा भन्छ । त्यसैले अनुसन्धानको हिसावकितावमा पोष्टमार्टम गराउनु जरुरी छ । मृत्युको कारणकै लागि जरुरी छैन ।

*समिति:* यो लेम्यान हिसावबाट यो त कतिपय मेडिकल रिपोर्ट पनि नबुझिने अवस्थामा छौं । अनि त्यसलाई ... हिसावबाट भन्दाखेरी ... त्यसैले त्यसलाई नेपालीकरण गरौं संभव भएसम्म अरु केही भएन भए पनि त्यो ठाउँ यो ठाउँ भनेर तलमाथि भनेर पनि हुन्छ कतिपय कुराहरु सकभर बुझिने गरी बनाउन सकिन्छ ।

*समिति:* डाक्टर साहेवको हामीले के कुरा क्लियर गरौं भन्दाखेरी कारण अन्य कुराबाट पनि पोष्टमार्टम नगर्दाको अवस्थामा थाहा हुन्छ कारणसंग जोडिएका अन्य विषयहरुको कुन समयमा यो घट्ना घटेको हो अन्य कुराहरु जस्तो भनौं न ... जहाजमा मृत्यु भैसकेको कारणले जहाज दुर्घटनाले भएको हो कि त्यो अन्य कारणले हो भन्ने पोष्टमार्टमबाट थाहा हुन सक्छ । सपोर्ट गर्ने, गर्नचाहीं पोष्टमार्टम त हामीले गर्छौं कति कुराहरु केही विवरणबाट पनि यसको मृत्युको कारणले हुन सक्छ भन्ने कुराको विश्वास राख्न सकिन्छ ।

**(घ) अन्य सम्बन्धित व्यक्तिहरुको कथन**

***सम्माननीय प्रधानमन्त्री तथा राजदरवार सम्बन्धी मन्त्री श्री गिरिजाप्रसाद कोइरालासंग समितिले २०५८ ।२ ।२९ ।२ मा गरेको सोधपुछ***

*समिति:* सम्माननीय प्रधानमन्त्रीज्यू यहाँ राजदरवार सम्बन्धी मन्त्री पनि हुनुहुन्छ । १९ गते राजदरवारमा जुन घट्ना घट्यो त्यस सम्बन्धमा कति खेर प्रधानमन्त्रीज्यूलाई थाहा भयो ? र थाहा भएपछि प्रधानमन्त्रीज्यूले के के गर्नु भयो र के के थाहा पाउनु भयो भन्ने कुरा हामीलाई जानकारी दिएर सहयोग गर्न म अनुरोध गर्दछु ।

*जवाफ:* १९ गतेको दिन राती ११ बज्न १० मिनेटमा राजपरिषद्को अध्यक्ष डाक्टर रायमाझीको मलाई खवर आयो । टेलिफोनबाट उहाँले मलाई भन्नुभयो कि महाराजाधिराजलाई सिरियस हार्ट अट्याक भएर हस्पीटलाईजेसन भएको छ । म त हस्पीटल हिंडे तपाई पनि आउनुस् । अनि मैले त्यो बेलामा मलाई खवर आएको थिएन । उहाँलाई पुगिसकेको छ भन्ने मनमा लाग्यो । कपडा तैपनि वद्लिन लागेको थिएँ त्यही बेलामा पशुपति महर्जन प्रमुख सचिवको टेलिफोन आयो । म तुरुन्त तपाईकहाँ आउँदैछु भन्ने खवर गरे, ल आउनुस् भनेर मैले भनें । उनी आएपछि उनले अलिकति, धेरै कुरा गरेनन् । अलिकति महाराजाधिराज सरकारलाई गोली लागेर हस्पीटलमा हुनुहुन्छ । अनि त्यसपछि हामीहरु दुवैजना राजदरवार गयौं । राजदरवारमा मिलिटरी सेत्रेःटरीले सानो ब्रिफ गरे । मलाई चाहिं हतार थियो हस्पीटल जाउँ भन्ने थियो । महाराजाधिराज वडामहारानी सरकारमा गोली लागेर सिरियस होइवक्सीन्छ । अहिले हस्पीटलमा लगेको छ भन्नासाथ त्यत्तिकै सुनेपछि ल त जाऔं हामीहरु हस्पीटल भनेर फेरी प्रमुख सचिव र म दुवैजना सरासर हामीहरु हस्पीटल गयौं । त्यहाँ डा.रायमाझी

हुनुहुन्थ्यो । उहाँलाई मैले सोधें के भयो कसो भयो भन्दा उहाँलाई पनि थाहा थिएन यो कसरी भयो र के भयो भन्ने कुरा । गोली लागेको छ इत्यादी भन्ने कुरा थाहा भयो तर अरु कुनै कुरा पनि थाहा भएन । त्यहाँ सोध्ने कसैलाई केही पनि थिएन कुरा कोही त्यस्तो चिनेको एकजना डा. रायमाझी मात्रै हुनुहुन्थ्यो । अलिअलि दौडादौड मानिसको यताउती, डाक्टरहरु त सवै माथि व्यस्त थिए । त्यहाँ म वसीरहें । त्यत्तिकै वसीरहें; कस्तो छ के छ, केही कुराको खवर मैले पाइन । बसेको बस्यै त्यो दिन अनि त्यसपछि ज्ञानेन्द्र सरकार कहाँ होइवक्सीन्छ भनेर सोध्दाखेरी हेलीकप्टर गयो लिनलाई पोखरामा र अव हेलिकप्टरबाट आउने भनेपछि खवर आएपछि हेलिकप्टर आयो । तर हेलिकप्टर ल्याण्ड गर्न नसकेर फर्केर आयो भन्यो । अनि मैले भनें- त्यसो भए पिकअप गर्नुपऱ्यो, बाटैबाट कहीं पिकअप गर्नुपऱ्यो भनेर फेरी हेलिकप्टर पठाएँ भनेर फेरी हेलिकप्टर गयो । पिकअप गरेर ज्ञानेन्द्र सरकारलाई लिएर आयो । यही बीचमा माथिल्लो कोठामा त्यसपछि प्रधानन्यायाधीशजी पनि आउनु भयो । सभामुखजी पनि आउनु भयो । अरुहरु पनि सवै आए र हामीहरु बसेर के भएको हो भनेर अन्यौलमा हामी सबै थियौं । यसबाहेक अन्य मलाई केही कुरा थाहा छैन ।

__सम्माननीय सभापति डा. केशरजंग रायमाझी, राजपरिषद्__

__समिति:__ राजपरिषद्को सम्माननीय सभापतिज्यू, यहाँको त्यही हैसियतमा हामीले आमन्त्रण गरेको जानकारी यहाँलाई हुनसक्छ भन्ने आशा गरेर । १९ गतेको त्यो राजदरवारको घट्नाबारे यहाँलाई के के जानकारी छ ? घट्नाबारे कतिखेर यहाँलाई थाहा भयो ? त्यो घट्ना थाहा पाएपछि यहाँले आफ्नो तर्फबाट के के डिफिनेसन प्राप्त भयो वा इन्भल्व भईयो । आदि इत्यादि सारा जानकारी हाम्रो यो समितिलाई रेकर्ड गराइदिन म अनुरोध गर्दछु ।

__*जवाफ:*__ १९ गते बेलुकी म भातसात खाएर आफ्नो कोठातिर यसो जान लागेको थिए । करिव करिव पौने १० तिर होला एक्ज्याक्टली ५, १० मिनेट फरक हुन सक्छ । त्यहाँबाट मलाई कतैबाट स्ट्याण्ड वाईमा रहनु भन्ने आयो । म भःसंग भए । के भयो देशमा जे होस् लुगासुगा लगाए । एकछिन पछि इमिडेट्ली आर्मि हस्पीटल ठूलो दुर्घटना सारै नराम्रो घट्ना भएको, चारै जना भन्ने मात्रै मैले सुने । इमिडेट्ली मैले ठाने अव आर्मि हस्पीटलमा जान्छु भने, जानु भन्दा अगाडि प्राइमिनिष्टरलाई पनि भनिदि राखौं । प्राइमिनिष्टरलाई टेलिफोन गरें, एकछिन पछि धेरैवेरमा प्राइमिनिष्टर सायद बेडतिर जानु भएको होला, रातिको बेला भयो । आर्मि हस्पीटलमा इमिडेट्ली जानु पऱ्यो । म हिंडे तपाईं आउनु होला भने त्यति भनेर म गए । उहाँ गएपछि अव ............ हुनु भयो मन त कस्तो आकुल व्याकुल भएर गईयो । बाटोमा उहाँ पुगें, पुग्नासाथ सरासर यहाँ आए । त्यहाँ एउटा सरासर ........ यतासवारी होइसिन्ध्योन । मैले भित्रै हेरें । हेरेर महाराजाधिराज सरकार, वडामहारानी सरकार सोध्नु पनि भःस्स महाराजाधिराज सरकार ........... त्यो .. सोधेपछि यसो हेर्दाखेरी त अनुमान गर्न सकिन मैले महाराजाधिराज सरकार भने .... शब्द ... डेथ ..... यसो हेर्न खोजेको बडामहारानी सरकार, डाक्टरहरुले काम गरिरहेका छन् । मैले आफूलाई कन्ट्रोल गर्न सकिन । त्यहाँबाट ध्वाँ ध्वाँ रुन आयो । क्या हो यस्तो ? के देख्नु पऱ्यो के भएको यो, त्यहाँबाट एकछिन सु........... यहाँले आफूलाई कन्ट्रोल गर्नुपऱ्यो भनेर यसो उता गएको थिए । उतातिर अरु अव .. होला हाम्रो निराजनको होला त्यति यादगरीन उतापट्टी श्रुति, उहाँहरु यही तलै, पहिले त सरसर म पुगे महाराजाधिराज सरकार र बडामहारानी सरकारको ........ ओहो, त्यहाँबाट प्रधान सेनापति जाउ उता भनेर गईयो । त्यहाँबाट सवै यसको कुराकानी इत्यादि इत्यादी हुन थाल्यो । त्यहाँबाट अरु अरुको को को कसो भन्नेजानकारी भयो, र घायलहरु, ............ वेडमा सुत्नु भएको छ... कुमार निराजन, उता श्री ५ श्रुति राणा र त्यो सव अरु चाहिने घायल आदि त्यतिमा हामी अव मन त कन्ट्रोलै गर्न गाहारो क्या हो कसो हो भन्ने पनि छ । अनि खोइ त, अनि त्यहाँबाट तुरुन्त गएर ज्ञानेन्द्र सरकारलाई सोधे, सरकार चाही पोखरामा त्यत्तिमै अनि प्राइमिनिष्टर पनि आइपुग्नु भयो । प्रधानन्यायाधिश पनि आउनु भयो । र हामीले खास गरेर ज्ञानेन्द्र सरकारको चाँडै नै सवारी होला भन्ने लागेको थियो, हेलिकप्टर पनि प्लेन पनि पोखरा नचल्ने भयो । के गर्ने त विहान पख हुन्छ, विहान पख भने ६ तिर सायद सवारी भयो होला । आधाबाटो सम्म हेलिकप्टर गजुरी अनि त्यही ............ बहाली गऱ्यौं सवै त्यो घट्ना पर्खि रहयौ । प्राइमिनिष्टर एक चोटी घर गएर आउनु पऱ्यो । हात मुख आदि आदि प्राईमिनिष्टर पनि जानु भयो । म पनि अव रातभरी त्यो बेलामा भने ११ बजे, साढे ३ जति वजेको छ, राती सम्म त्यसै वसेको छु । त्यहाँबाट मुख हात आदि धुउ आदि भनेर फेरी म पनि एक छिन घर गएर आउँछु । करिव आधा घण्टा ४५ मिनेटमा फर्कन्छु भनेर त्यहाँबाट प्रमुख सचिव पनि आइपुग्नु भयो दरवारको पशुपति भत्तः, उहाँले त्यहाँ गएर ................ गएर त्यही वसी रहयौं अव हामीले त मैले विचार गर्नै पऱ्यो विचार गर्न पऱ्यो के भने किङ्ग इज डेड सरकारको स्वर्गारोहण भइवक्सेको, वडामहारानी सरकार पनि स्वर्गारोहण भइवक्सेको, त्यसको डिक्लेर गर्नेकसले पहिले त मृत्यु डेथ डिक्लेर गर्ने भन्ने कुराहरु पनि आयो । राजपरिषद्को सभा बोलाउनु पऱ्यो । त्यहीबाट मैले अनि हाम्रो सचिव उहाँहरुलाई घरैबाट पनि म आर्मि हस्पीटलमा जाँदै छु । स्ट्याण्ड वाई अफिस खोलेर सवलाई त्यहाँ वस्नु के गर्नु पर्छ भनेर त्यहाँबाट उहाँले टिभि, रेडियो आदिबाट पहिला कुरा भयो । राजपरिषद्को बैठक वोलायौं भन्ने कुरा जुन बेला ज्ञानेन्द्र सरकार पनि सवारी भइसकेको छैन । किनभने कन........... बनाउँदै वनाउँनै पऱ्यो । उत्तराधिकारी त्यो हुनु पऱ्यो । पहिला त नम्वर वान महाराजाधिराज सरकारको स्वर्गारोहणको डिक्लेर गर्ने राजपरिषद् त्यो त कन........... मलाई पनि उठायो, त्यसपछि उत्तराधिकारी दिने काम पनि राजपरिषद्ले सल्लाह गऱ्यो । त्यसपछि हामीहरुले ................ भनेर यहाँहरुलाई सवै यहाँहरुसवैलाई जानकारी नै छ । त्यसपछि ज्ञानेन्द्र सरकार सवारी भयो । साढे ६ बजेको थियो कि कति बजेको थियो । सवारी भयो । सवारी भइसकेपछि यही सवै उ भयो । त्यहाँबाट अरुको अनि डेथ सर्टिफिकेट चाहियो । डाक्टरहरुबाट डेथ सर्टिफिकेट लिइयो । जहाँ सम्म युवराजाधिराज दिपेन्द्र उहाँको कुरा हो उहाँलाई पनि मैले हेरें र विलकुलै इन्जोर, त्रेःनियम र सेरीग्रम हि इज अ....... ............. भएको हुनाले हि इज स्टील अलाईभ हार्ट इज विटिङ्ग, पल्स इज विटिङ्ग, भेन्टीलेसनमा हुँदाखेरी डेथ भन्नु भएन, तर मानसिक, शारिरीक ढंगले उहाँले काम गर्न असक्त हुनुभयो । त्यो सव इन्फरमेसन लिएर अव हामीहरु यहाँहरु वस्यौ । ज्ञानेन्द्र सरकार सवारी भयो । त्यहाँबाट अव तयार गर्नुपऱ्यो । हामीले अण्डर स्ट्याण्डीङ्ग वनायौं । अव सरकारको डेथ भइहाल्यो त्यसको डिक्लेर उत्तराधिकारी को हो त भन्ने कुराहरु भयो । युवराजधिराज दिपेन्द्र नै उत्तराधिकारी तर इन्भ्यालीड शारिरिक, मानसिक रुपले भएको हुनाले, अर्को हामीले तयार गर्नु पऱ्यो । जसमा हाम्रो संविधान अनुसार प्रिजेन्ट भनौं राज्य सहायक पहिले पनि सरकारहरु वाहिर जाँदाखेरी हामीले राज्य परिषद् भनेर काम गर्थ्यौं । त्यस्तै त्यो एउटा उ भयो । त्यसपछि नै ........... हामीहरु सवै यहाँहरु सवै वहादुर भवनमा बैठक साढे ९ बजेतिर सुरु भयो होला । त्यहाँ पनि हामीले धेरै कानून, संविधान, परम्परा आदि मिलाउनु पऱ्यो । हाम्रो राजपरिषद्मा कानुन विदहरुहुनुहुन्छ । स्थायी समितिमा प्रधानन्यायाधिश पनि हुनुहुन्छ । अनि कानुनहरु सवै हेरेर हामीले त्यहीकुराको निर्धारण प्रुफको आधारमा किङ्ग इज डेढ, उत्तराधिकारी को भन्दाखेरी

युवराजाधिराज अल्टीमेट उत्तराधिकारी वट उहाँ कम्प्लीट्ली इनभ्यालीड मानसिक शारीरिक काम गर्न नसक्ने हुनाले रिजन दियौ हामीले राज्य सहायक श्री ५ अधिराजकुमार ज्ञानेन्द्र तय गऱ्यौं भने तु बैठक गरायौं ।

**विग्रेडिएर टिका धमला**

*समितिः-* यहाँको शुभनाम ? दरवारको सेवामा कति बर्ष भयो यहाँ रहनु भएको ?
*जवाफः* म ब्रिगेडिएर टिका धमला, २०३८ साल बैशाख १ गतेबाट गएको हुँ । २० बर्ष भयो होला ।

*समितिः-* अहिले के जिम्मेवारीमा हुनुहुन्थ्यो होला ?
*जवाफः* त्यहाँ एडिसी अफिसमा जम्मा २ ग्रुप हुन्छ । डे एण्ड नाइट ग्रुप भन्ने वान अफ द ग्रुपको म टोली कमाण्डर हुँ ।

*समितिः-* त्यो १९ गते जुन घट्ना घट्यो नि त्यो घट्ना घट्दाको दिन यहाँको डिउटी थियो ?
*जवाफः* मेरो डिउटी ११ बजेबाट ७ बजे सम्म मात्र थियो । ७ बजे मेरो अर्को काउण्टरपार्टलाई डिउटी बुभ:एर म घर गएको थिए ।

*समितिः* अनि यो घट्नाबारेमा कसरी थाहा भयो ?
*जवाफः* जुन त्यो घट्ना भयो । घट्ना हुने वित्तिकै मलाई अफिसबाट दरवारमा गोली चल्यो तुरुन्तै हस्पीटल जानु भन्ने खवर आयो ।

*समितिः* ए दरवार आउनु भएन ?
*जवाफः* युनीफर्म त मेरो दरवारमै हुन्छ । हस्पीटलमा तुरुन्तै जानु भनेपछि घरबाट तुरुन्तै म दरवार गए कपडा चेन्ज गरें तुरुन्तै मेरो अफिसमा गएर के भएको भन्दाखेरी गोली चल्यो, पहिला घाइते को ? पहिला रेसस्यू कसलाई गऱ्यो भनेपछि मेरो डिउटी त किनभने त्यो ग्रुपमा पनि मेरो प्रायोरिटी महाराजासरकारकोलाई नै गर्नु पर्ने

*समितिः* महाराजाधिराज सरकारमा उ भयो भनेर खवर दिनेले, कसले हान्यो भनेर त्यति बेला भनेको थियो ?
*जवाफः* केही पनि भनेन । केही पनि भनेन ।

*समितिः* त्यसपछि यहाँले के के थाहा पाउनु भयो । अनि उद्धारको कार्यमा जुट्नु भयो कि भएन ? सवीस्तार भन्नुपऱ्यो तपाईले ।
*जवाफः* त्यसपछि म पूर्ण विवरण अव, त्यसपछि जव म दरवारमा गए, लुगालगाएर त्यो त्रिभुवन सदनमा गोली चल्यो, महाराजाधिराज सरकारलाई हस्पीटल लगेको छ भन्ने वित्तिकै म हस्पीटल तुरुन्त गए । हस्पीटल तुरुन्त जाने वित्तिकै मैले महाराजा सरकारको दर्शन गरें । महाराजासरकारलाई डाक्टरले उपचार गरीराखेको पाए । त्यसो हुनाले अधिराज कुमार निराजन सरकारको दर्शन गरें । डक्टर ........... एक्पाएर होइवक्सो भनेर भन्यो । त्यसपछि बडामहारानी सरकारको दर्शन गरें । एक्पाएर होइवक्यो भनेर भन्यो । अरु सरकारहरुको पनि जुन दर्शन गरे एक्सपाएर होइवक्यो भन्यो । श्रुति सरकारको मैले दर्शन गर्दाखेरी अलिकति सास होकि भन्ने मलाई फिलीङ्ग थियो र त्यसपछि म तुरुन्तै महाराजासरकारको नजिक आए । महाराजासरकारको पाउ छामे, हात छामे डाक्टरले स्वर्ग भन्यो ।

*समितिः-* त्यसपछि दरवार फर्कनु भयो ?
*जवाफः* म त तिनै वसे, अव त मेरो काम के थियो भने अव त मोविलाईज गराउनु थियो । सिनिएर उसको भएको नाताले, महाराजासरकार हाल उसमा होइसिन्थ्यो । हाल महाराजासरकार पोखरामा टेलिफोनबाट विन्ति चढाए । केही विन्ति गरीन सरकार एक्सीडेन्ट यहाँ इन्सीडेन्ट भएको छ । सरकार तुरुन्त हस्पीटल सवारी भईसीनु पर्छ । हामीले .... ........ हेलिकप्टर, हेलिकप्टर राती त्यहाँ ल्याण्ड गर्न सक्यो भने हेलिकप्टर गर्छौं नभए मोटरबाट भएपनि सवारी हुनु पर्छ । सेवकले फेरी टेलिफोन टत्र:याए पनि अनिमात्रै सवारी होस् भन्ने प्रधान सेनापति संग, सेवकले मैले त्यो ... गल्ती गरें तव त्यो हुन्छ भनेर हाल महाराजा सरकारले हुकुम भयो । त्यसपछि हामीले प्रधानसेनापति म आफै र सैनिक विवेककुमार शाह ३ जना वसेर लौन सक्दो चाडै कसरी हाल महाराजा ज्ञानेन्द्र सरकारलाई यहाँ ल्याउन सकिन्छ भन्दाखेरी हामीले हेलिकप्टर उडायौं । हेलिकप्टरबाट रिर्पोट आयो । व्याड वेदर भएर जान सकिएन । त्यसपछि ज्ञानेन्द्र सरकारलाई मैले विन्ती चढाए । सरकार हेलिकप्टर .......... सकेन । सरकार मोटरबाट सवारी होइसिनु पऱ्यो । सरकारको त्यो अगाडि पछाडि सुरक्षा मिलाएको छु भने पछि हुन्छ म आउछु हुकुम भयो । प्रस्थान होइवक्यो । त्यसपछि विहान अलि चाडै हुन्छ कि भनेर हामीले हेलिकप्टर त्यहाँबाट फस्ट लाईट हुने वित्तिकै गजुरीमा पठायौं । गजुरीबाट त्यहाँ हेलि लिफ्ट गरेर हस्पीटलमा सवारी चलायौं । हस्पीटलमा सवारी चलाएपछि अनि त्यतिबेला सरकारको जुन डेथ वडी भएकै ठाउँमा म वसीराखेको थिए । माथि सरकार सवारी भयो । अनि त्यसपछि अरु कारवाही सुरु भयो । अव हामीहरु चाही अव अरु फर्दर सरकारको शव कसरी चलाउने के गर्ने त्यसमा इन्भल्व भए । दिउसो साढे ३ बजे फेरी अर्को लुगा लगाउनु पर्ने भएको हुनाले दरवारमा आएर अर्को लुगा चेन्ज गरें । सरकार गए सरकारको पोशाक चेन्ज गराए । त्यसपछि शव लिएर म पशुपति गए ।

*समितिः-* यहाँ त्यत्रो समय वस्नु भएको हुनाले दरवारमा यो जुन घट्ना घट्यो सुरक्षा प्रवन्ध कोल्याप्सले हो जस्तो लाग्छ, लाग्दैन होला ?

*जवाफः* यसमा के छ भने म पनि २० बर्ष सुरक्षामा खटिएको नाताले गर्दाखेरी त्यहाँ एउटा प्राक्टीस छ, हामीहरुको एउटा स्ट्याण्डीङ्ग अर्डर छ सेक्यूरीटीमा, हामीहरु अहिले सम्म वाहिरबाट केही हुन्छ कि भन्ने मात्रै हामी कन्सर्टेड हुन्छौं । त्यहाँ घेरा हुन्छ सुरक्षाको भिभिआइपीको, इनर मस्ट घेरा भनेको हामी एडिसीहरु हौं । त्यो भन्दा अर्को वाहिर धेरा सैनिक प्रहरी हुन्छ । त्यो भन्दा वाहिर घेरा शाही नेपाली सेना हुन्थ्यो । त्यसभन्दा वाहिर गएर नेपाल प्रहरी हुन्छ । र इनर मष्ट घेराको हाम्रो पनि लिमिटेसन छ । दरवार भित्रका पब्लीक प्लेसेसहरु छन्, प्राइभेट प्लेसेसहरु छन् । जुन पब्लीक प्लेसेसहरुमा जुन ग्यादरीङ्ग हुन्छ त्यसमा हामी भि भि आइ पी संग सँगै हुन्छौं र हाम्रो मेन डिउटी नै भि भि आइ पीलाई कसैबाट थ्रेट हुन्छ कि भन्ने हामी त्यसमा कन्सर्न्टेन्ड हुन्छौं । जुन प्राइभेट प्लेसेस छ, त्यसमा हामी पनि एलाउ छैन । त्यहाँ भित्र जानको लागि । भित्रबाट हुकुम भयो भने मात्रै हामी जान पाउछौं र एउटा स्टण्डीङ्ग अर्डरमा के छ भने भित्रबाट खवर नगरीकन कुनै बेलामा गोली पड्केको खण्डमा दौडेर त्यहाँ नजिक भएको त्यो सायकल भित्र हामीहरुलाई कति ठाउँ त हामीहरुलाई थाहा छैन । त्यो सरकारको खोपीहरु म आफैंले पनि देखेको छैन । त्यो खोपी देख्ने अर्को निकायहरु हुन्छ । तुरुन्त हामी त्यो दौडेर हामी त्यहाँ जाने हाम्रो स्ट्याण्डीङ्ग अर्डरमा छ ।

*समितिः-* अनि यो खोपीहरुमा हात हतियार रहने व्यवस्था पनि हुन्छ कि ?

*जवाफः* अव यसमा के हुन्छ भने, अव सरकारहरुको, हामी अरु सवैको चेक गर्छौं । सरकारको चेक गर्दैनौं सरकारले के गरिवक्सीन्छ भने नयाँ हतियार आयो भने हेरिवक्सीन्छ । फायर गरिवक्सीन्छ । विशेष गरी तत्कालीन युवराजधिराजा सरकार त हतियारमा धेरै सोख होइवक्सीन्थ्यो । धेरै खेलिवक्सीन्थ्यो । मार्क स्यान सिप धेरै राम्रो थियो । महाराजासरकारबाट पनि सिकाई वक्सन्थ्यो । अनि आर्मिमा जुनसुकै हतियार भएपनि महाराजासरकारबाट युवराज यो सवै हेर तिमिले यो हेर्नु पर्छ आफू वलियो छ कि छैन । आर्मिमा यो हुन्छ कि हुँदैन भन्ने महाराजासरकारको आर्मिमा धेरै ठूलो माया थियो । अनि त्यो गर्दाखेरी अनि सरकारले कहिले कहि के गरिवक्सीन्थ्यो भने कोतको भित्र एउटा हतियारलाई हामी कोत भन्छौं कोतबाट तत्कालीन युवराज सरकारबाट आफै झिकेर पनि हतियार लगि वक्सन्थ्यो । अनि एक दुई दिन राखेर फर्काइदि पनि वक्सन्थ्यो । कहिले साथमा राखिवक्सन्थ्यो पनि त्यो एउटा प्राक्टीस हो त्यो भइनै राखेको थियो । त्यसमा हामीले अव अरुलाई हतियार लिएर हामी भित्र जान दिंदैन थियौं । इभन साइरनहरुले कहिले कहि महाराजासरकारबाट ल हतियार ल्याउनु हुकुम भएको छ भनेर हामीलाई भनेभने हामीले महाराजासरकारलाई टेलिफोन चढाएर सरकार यस्तो भनेको छ, पठाउ भनेपछि सरकारले पठाउ हुकुम भयो भनेमात्रै हामी पठाउँथ्यौं । वान टु वान नभइकन महाराजाधिराज सरकारलाई जाहेर नगरीकन केही पनि हतियार भित्र पठाउने चलन थिएन । गर्दा पनि गरेन ।

*समितिः-* त्यो १९ गतेको घट्ना ........ जतिपनि वाहिरबाट फ्यामिली मेम्वरहरु आमन्त्रीत हुनुभयो । शाहीनातेदारहरु आमन्त्रीत हुनुभयो, त्यो उनीहरु प्रवेश गर्दाखेरी पनि त्यो चेक हुन्छ । कोही हतियारले लेस भएर गएको छ छैन आदि इत्यादि ?

*जवाफः* बडी त्यसरी हामी चेक गर्दैनौं । अन युजल देखियो भने हामीलाई चेक गर्ने अधिकार छ ।

*समितिः-* त्यो दिन चेक भएको नभएको ?

*जवाफः* युजल्ली हामीले के हुन्छ भने ढोकामा हेरेको हुन्छ । ढोकामा को को मान्छे आउछ । हामीले लिष्ट पठाईदिएका हुन्छौं ढोकामा अर्कै निकाय हुन्छ । उसले त्यो लिष्ट अनुसारका मान्छे चेक गर्छ शंका लाग्छ भने तपाई फलानो हो भनेर सोध्छ । त्यसरी भित्र आएपछि एलिसबाट त्रःस भएर जान्छ । अव हामीले के गर्छौं भने अव जस्तो कमन प्लेसमा पब्लीक प्लेसमा जाने मान्छेहरुलाई चाही हाम्रो एउटा विण्डो हुन्छ । सेक्यूरेटिभ डोर हुन्छ । त्यहाँ हतियार, एक्लोसिभ लिएर गयो भने त्यहाँबाट आउछ । छाम्दैनौ । तर नातापाताको लागि भने हामी यसो हेर्छौं मात्रै । अन युजल केही देख्यो भने हजुरले केही ल्याइवक्सेको छ कि भन्ने चलन छ । नत्र युजल्ली भि भि आईपीको त्यो रोयल गेष्टहरुलाई हामीले यसो छाम्ने गर्दैनौं ।

*समितिः-* त्यो त्रिभुवन सदन प्रवेश गर्ने द्वारमा के सेक्यूरेटी राखेको हुन्छ । त्यो दिन पनि थियो ?

*जवाफः* हुन्छ । सेक्युरिटी थियो । त यो प्राक्टीस त हामीले जहिले पनि फलो गरेको हुन्छौं । उही त्यो पब्लीक प्लेसेजको लागि वढी गरेको हुन्छ । यसमा चाही भिभिआइपीकै नाताबाट होइवक्सेको हुनाले कम युज गरेको हुन्छौं ।

*समितिः-* धेरै अनुभव भएको हुनाले के कारणले यस्तो घट्ना हुन्छ भन्ने अनुमानको आधारमा केही ?

*जवाफः* इट्स भेरी डिफिकल्ट प्रेडिक्ट त म कसरी गरौ र ? अनि फेरी त्यसपछि के हुन्छ भने युवराजधिराज सरकारको जो हुन्छ । म ९ बर्ष देखि सरकार ९ बर्ष होइसिदाखेरी मैले दर्शन पाएको हो । अव यो १२ बर्ष यताबाट उही हामी जुन महाराजाधिराज सरकारपट्टिको एडिसीलाई केही पनि थाहा हुन्न त्यो कुरा । हामी त्यहाँ जानको लागि पनि महाराजा सरकारलाई हामीले विन्ती चढाउनु पर्छ । सरकार युवराजासरकारबाट यसरी वोलाई वक्सेको छ जाउ के ? जाउ हुकुम भएपछि मात्रै हामी जाने चलन हुन्छ । त्रिभुवन सदनपट्टि जुन एडिसी त्यहाँबाट तोकिएर आयो करिव करिव १२ बर्ष जस्तो लाग्छ मलाई सवभन्दा पहिला आएको राजुकुमार कार्कि भन्ने मेजर छ । पहिला आएको उही हो । १२ बर्ष जस्तो लाग्छ मलाई त्यहाँ देखि चाहि हामी यताको एडिसी उता इन्भल्व हुँदैनौं र उताको कुरा पनि निड टु वेसीसमा मात्रै कति हामीले

थाहा पाउनु पर्ने महाराजासरकारबाट हामीलाई के हुकुम हुन्थ्यो । सरकारहरु ढोका वाहिर हुँदा भित्र भने मलाई भन्नु हुकुम हुथ्यो । अनि युवराजासरकार कहिले वाहिर सवारी हुँदा सरकार यतिबजे वाहिर सवारी भएको छ । यतिबजे ...... भनेर हामी विन्ती चढाउने ।

*समितिः-* काउण्टर पार्ट भनेको के हो त ?
*जवाफः* सुन्दर, दुई ग्रुप हुन्छ हामीहरुको जस्तो दुई ग्रुप हुन्छ । त्यो हप्ता शुत्रःवार चाही मेरो डे डिउटी थियो । सायद हामीले युजल्ली डिउटी एक प्राक्टीस चाही त्यो छ ११ बजे र ७ बजे चेन्ज हुन्छ । बेलुका सात बजे विहान ११ बजे । अनि बेलुका ७ बजे चाहि मैले डिउटी बुभ्राएर ....... अनि म घर गएको ।

*समितिः-* एउटा कुरा मेरो सानो जिज्ञासा । हामीले त्यो अस्ती त्यहाँ जादाखेरी जुन..................... ........... भोलीपल्ट पर्सिपल्ट ......
*जवाफः* त्यहाँ के भयो भने भित्र म गएको थिए । म विवेक जर्साव, भोलीपल्ट गयो । अनि हामीले महाराजा सरकारलाई विन्ती चढायौं । सरकार यस्तो छ ढोका खोलै छ, वन्द गरौं कि पछाडि पनि वन्द गरौं ................ इन्ट्क्ट् राखौं कि ? वत्तिहरु वलिराखेका छन् महाराजा सरकारबाट के हुकुम भयो भने वत्ति मारिदेउ । एसि अन छ भने त्यो पनि डाउन गर । अनि त्यहाँ ताल्चा लगाई साचो तिमिहरु राख्नु । त्यो साचो स्टील मेरो अफिसमा राखिछोडेको छु । पछाडिबाट हेर्दा इन केस रहेछ । त्यहाँ एउटा लक रहेनछ । अर्को नयाँ साचो किनेर ठोकेर वन्द गरेर महाराजासरकारबाट के हुकुम भयो भने त्यो इन्सेक त्यहाँ केही पनि नचलाउनु इनट्याक्ट राख्नु तिमिहरुले भनेके हुनाले केही पनि सिम्पल वत्ति मारेर हामीलाई त्यो स्वीचहरु थाहा हुँदैन । त्यस ............ ल आयो तिमिहरुलाई थाहा छ वत्ति मार्न लगाएर अनि मेन ढोका जुन फलामको ढोका हजुर सवारी हुन्थ्यो त्यसमा ताल्चा लगाएर अनि साचो राख्यौं त्यहाँअव विटआट परमिसन अरु कोहीपनि जान अलाउ छैन । त्यहाँ जानको लागि हामी महाराजासरकारलाई विन्ती चढाउछौं त्यो महाराजासरकारले ओके हुकुम भयो भने मात्रै भित्र जान कोही पाउँछ नत्र पाउँदैन । पछाडि स्टाफहरु जुन त्यो किचनमा सारा ओहोर दोहोर गर्ने व्याक डोर हुन्छ नि त्यसमा पनि त्यो साचो लग गर्ने ढोका त छ । त्यहाँ पनि महाराजा सरकारबाट के भने हाल महाराजासरकारबाट वन्द गर्ने हुकुम भएर वन्द गरेर साचो हामीले राखेका छौं । त्यहाँ भित्र हाम्रो पर्मिसन बाहेक अरुले कोही पनि जान पाउँदैन ।

*समितिः-* यहाको सरकारी भन्नु भयो, यहाँ २ जना भन्नु भयो नि ?
*जवाफः* हो सुन्दर प्रताप राणा, जुन बेला डिउटीमा दुई ग्रुप हुन्छ । ग्रुप भेट हुन्छ । म चाही एउटा ग्रुपको हेड अर्को ग्रुपको हेड चाहि सुन्दर प्रताप ।

**तीर्थमान शाक्य, मुख्य सचिव, मन्त्रिपरिषद् सचिवालयसंगः**

*समितिः-* यहाँ ............... सिनियर एड्मिनिट्रेसन तिर भएको चिफको हैसियतले यो १९ गतेको दरवारको घट्ना
*जवाफः* अन्दाजी १२:३० बजे गृह सचिवले फोन गरी घट्नाबारे केही जानकारी छ कि भनि सोध्नु भएको र प्रमुख सचिवज्यूको मोवाईल नम्बर माग्नु भएको त्यो भन्दा वढी त मलाई पनि थाहा भएन । त्यसपछि साढे चार ५ बजे तिर महिला तथा बाल बालीका समाज कल्याण मन्त्रालयका सचिव उर्मिला श्रेष्ठको फोन आयो । उहाँको घट्नाको क्वेरीज प्लस उहाँलाई पेरिस जानु थियो । जाउकि नजाउ भनेर भन्नु भयो मैले भने यस्तो स्थितिमा क्यान्सील गर भनेर भने । त्यसपछि फेरी एकछिन पछि सम होयर सात वज्नै लागेको बेलामा गृह सचिवको फोन आयो । प्रधानमन्त्रीले तपाईलाई छाउनीमै आउनु भनेको छ भन्नु भयो । मैले ठिकै छ भने, मोटर वोलाए, मोटर लिएर जाँदाखेरी आठ बजे छाउनीमा पुगेपछि डिपिएमले चाही मन्त्रीहरुलाई राष्ट्रिय पोशाकमा यही आउ भनिदिनुस् भन्यो । मैले त्यही मोवाइलबाट वालुवाटारमा भनेपछि त्यहाँ कन्ट्रोलबाट भन्दाहुने र वालूवाटारमा भन्दा हुने र मन्त्रीप्रायजसो वालुवाटारमै रहेछ । त्यहाँ भएकोलाई त्यही भनिदिनु होला नभएकोलाई फोन गरिदिनु होला भने । अनि वालुवाटारबाट मन्त्रीहरु आएको माथि जानु भयो, हामीचाही सम्माननीयज्यूहरु पहिल्यै वसेको कोठामा वसीराखेको थिए । अहिले सम्म कोही पनि आएन भने नारायणसिंह पुनः गृह सचिव र म ३ जना माथि गयो होला भनेर माथि आएपछि सवैमन्त्रीहरु भेटियो अव त्यसपछि को कुरा जो रेगुलर वाहिर छ । त्यही मात्रै हो त्यो वाहेक मलाई अरु केही थाहा भएन । खाली सुनेर मात्रै थाहा भयो । कहिबाट अफिसियल्ली केही इन्फरमेसन दिएको छैन ।

*समितिः-* यता तपाईहरुको जिम्मेवार दरवारतिर रहन्छ कि रहँदैन ?
*जवाफः* हामी खाली दरवारको मेसेज पास गर्ने मात्रै हुन्छ । दरवारले अहिलेसम्म म मुख्य सचिव भएर आएपछिको प्रचलन के भने दरवारले त्योपनि जम्मै निकायसंग लागू छैन । प्रमुख सचिव मार्फत् आउने कुरा चाही प्रमुख सचिवले श्री ५ को सरकारको मिनिष्ट्री संग डारेक्ट नगरीकन मुख्य सचिवमार्फत गर्ने गरेको छ । अव यो सम्वाद सचिव उहाँहरुले मुख्य सचिव मार्फत जाने गरेको छैन । परराष्ट्र या कुन मार्फत् जाला यो उहाँको कुरा हो तर प्रमुख सचिवले लाइन एजेन्सीसंग कुरा गर्दाखेरी चाहि जहिले पनि मुख्य सचिव मार्फत नै कुरा गर्दछ । वजेट इत्यादीको कुरा गर्दाखेरी पनि पहिले मुख्य सचिवलाई पठाउँछ अनि हाम्रो राजदरवार शाखा भन्ने छ त्यहाँबाट अर्थमा बढाइदिन्छौ त्यस्तै कुनै कुराको सोध्नु पर्‍यो भनेपनि त्यहाँ आउँछ र हामीले सम्बन्धित मन्त्रालयको सिच्यूयसन बुभेःर अनि त्यही मेसेजलाई यस्तो हो भनेर जस्तो

सरकारको कुनै बेला कही भ्रमण राख्ने त्यहाँ महाराजा सरकारको भिजीट उपयुक्तः छ छैन ? सेक्यूरीटी के छ भनेर सोध्यो भने हामी जुन विषयको हो त्यही विषयको मन्त्रालयलाई सरकारी स्तरबाट उद्घाटन वा यस्तो हुनु पर्ने राष्ट्रिय महत्वको त्यो घट्ना वा हो कि हैन भन्छौं । गृहलाई सेक्यूरीटीको दृष्टिकोणबाट त्यहाँ पोजेटिभ एन्सर आयो भने हामीले पोजेटिभ भनेर माथि पठाउँछौं त्यस्तै हुन्छ । दरवारको अरु निकायको चाही सचिव मार्पःत जाने ।

*समितिः*- सेक्यूरिटीको प्राक्टीस.........

*जवाफः* त्यससंग हामीलाई एटलिष्ट मन्त्रीपरिषद् सचिवालयलाई थाहा छैन त्यो सेक्युरिटी डाइरेक्ट कही गृहमै जाने हुन्छ कि के अर्को होला तर मुख्य सचिव र मन्त्रीपरिषद् सचिवालय मार्फत् सेक्युरिटी इभन .......... आउँदैन उही प्रमुख सचिवकै,प्रमुख सचिवालय मार्फत् जानुपर्ने जे हो त्यो चाहि हुन्छ ।

_

**प्रमुख सचिव पशुपतिभक्त महर्जन**

समितिः तपाईको जिम्मेवारी के के हो ?

जवाफः प्रधानमन्त्रीले श्री ५ मा पुऱ्याउनु पर्ने कुराहरु र श्री ५ बाट प्रधानमन्त्रीकहाँ पुऱ्याउनु पर्ने कुराहरु सम्माननीय प्रधानमन्त्रीको आज्ञानुसार गर्छु ।

समितिः १९ गते जेठको घटनाका सम्बन्धमा कुन बेला थाहा पाउनु भयो र के के गर्नुभयो ?

जवाफः करिव १० बजेतिर सैनिक सचिवबाट मोवाइलबाट तु. दरवार आउनू भनियो र मोटरसाइकलमा गएँ । जरसाहेवलाई सोध्दा हस्पिटल हुनुहुँदोरहेछ । मोवाइलमा कन्ट्याक्ट गर्दा सरकारलाई केही भएको छ, प्रधानमन्त्रीलाई खवर गर्नू भनियो र सम्माननीय प्रधानमन्त्रीकहाँ गएँ । दरवारमा केही भए जस्तो छ भनेर प्रधानमन्त्रीकै गाडीमा संगै दरवार आएँ । प्रधानमन्त्रीसंग सल्लाह गरेर दुवैजना अस्पताल गयौं । मुमा बडामहारानी सरकारलाई देखेर प्रधानमन्त्रीलाई मुमा बडामहारानी सरकारसमक्ष लगें र परै बसें । डा. रायमाभी पनि त्यहीं हुनुहुन्थ्या । १२:३० बजेतिर पोखरा हेलिकप्टर पठाउने कुरा भयो । करिव तीन, साढे तीन बजेतिर प्रधानमन्त्रीले निवास जाने कुरा गर्नुभयो र प्रधानन्यायाधीश, सभामुख, राष्ट्रिय सभाका अध्यक्ष आदिलाई फोन गरें । प्रतिपक्षी दलका नेतालाई भेट भएन । करिव ६:३० बजेतिर ज्ञानेन्द्र सरकार सवारी भयो ।

**सैनिक सचिव उपरथी श्री विवेक शाह**

*समिति:-* यो त्रिभुवन सदनमा युवराजाधिराज सरकार............... हतियारहरु आफ्नै खोपीमा राखेको ............ कुनै अनुमति लिनु पर्ने के प्रचलन छ दरवारमा ?

*जवाफ:* दरवारमा आर्मिको अथवा सेक्युरिटी एजेन्सीहरुको त्यहाँ हतियार कोतमा रहन्छ । सरकारहरुलाई पनि त्यो मध्येबाट कुनै पनि हतियार आवश्यक पऱ्यो भने लिइवक्सीन्छ । त्यो लिएको चाहि अव त्यहाँबाट बुभ:एको कोतबाट एडिसी अफिस सरकारलाई त्यो गर्ने चलन छैन । एडिसीलाई बुभ:एको चाही भरपाई राखीन्छ । त्यसै अनुरुपले त्यो हतियारहरु त्रिभुवन सदनमा यो लगेर युवराजाधिराज सरकारले आफै राखिवक्सन्थ्यो ।

*समिति:-* त्यो चलन पहिले पनि थियो कि तत्काल युवराजाधिराज सरकारको मात्रै ..

*जवाफ:* त्यो पहिले देखि नै यो परम्परा नै, जस्तो स्वर्गवासी महाराजाधिराजा सरकारको उसमा पनि त्यस्तो किसिमको हतियार

*समिति:-* त्यो पारिवारीक जमघटमा जहाँ जुन त्रिभुवन सदन प्रवेश गर्ने द्वारको मूलद्वार एउटै हो ? .......... राजपरिवारको सदस्यहरु र शाही नातेदारहरु प्रवेश गर्नेद्वार पनि एउटै हो । ...... सदस्यहरु, नातेदारहरु त्यहाँ प्रवेश गर्दाखेरी पनि के सेक्यूरीटी चेक हुने पनि व्यवस्था छ कि ? सामान्य अरुको हिसावमा चाहि सेक्यूरिटी फिजीकल्ली पनि गर्ने चलन हुन्छ । ढोकामा तर शाही परिवार र शाही नातेदारहरुलाई चाहि सामान्य निगरानी राख्ने केही ...... इत्यादीहरु नभएचाही उहाँहरुलाई गर्ने चलन छैन ।

*समिति:-* यो हटाउने र त्रिभुवन सदन प्रवेश गर्ने द्वारमा हरदम सेक्यूरिटी चाहि रहन्छ ?

*जवाफ:* त्यो एडिसी रहन्छ । त्यो सधै रहन्छ ।

*समिति:-* त्यस दिन भने त्यस किसिमको निगरानी चाहिने ...... त्यो दिनको घट्ना भन्नाले कतिखेर जानकारी भयो केही ..........

*जवाफ:* म ६ बजे अफिस सिद्धाएर सैनिक सचिवालयबाट निस्केको हो । साढे ६ बजे एकजना साथी उत्तर ढोकामा ................. को ढोकामा आउछु भन्नु भएको थियो भेट्न उहाँ वाहिर जाँदै हुनुहुन्थ्यो । मैले उहाँलाई कुरे उहाँ साढै सात तिर मात्रै आइपुग्नु भयो । त्यसपछि उहाँ र मेरो आफ्नो पनि अलिकता वाहिरै काम थियो ठमेल तिर एउटा ठमेल तिर एउटा साथीकहाँ गएर गफ गरिराखेका थियौं । ९:१५ मा मेरो मोवाइलमा घरबाट फोन आयो । तुरुन्त माइनरमा एडिसी अफीसमा फोन गर्नु भनेर । मैले तुरुन्तै फोन गर्ने बेलामा त्यहा एडिसीले यहाँबाट होइन, मलाई केही जानकारी भएन तर त्रिभुवन सदनमा फाइरिङ्ग भएको जस्तोलाग्यो भनेर भन्यो । त्यसपछि मैले अन्नपुर्ण एडिसी अफिसमा फोन गरें त्यहाँ एडिसीहरु एभेलेवल भएन । त्यत्तिकै थियो । अव म अफिस जानु पऱ्यो भनेर म निस्के, निस्केपछि फेरी मोवाइलमा फोन आयो । तुरुन्त हस्पीटल जानु अरे भनेर भन्यो । अनि म चाहि हस्पीटल पुग्ने बेलामा ९:४५ जतिमा म मेलिटरी हस्पीटल पुगेको थिए ।

*समिति:-* त्यो बेला कसले कहाँ कसले कहाँ कहाँ यसतो यो .......... भन्ने कुरा केही जानकारी भयो ?

*जवाफ:* केही पनि भएन ?

**श्री ५ युवराजाधिराजको निजी सचिव सौजन्यकुमार सुल्प्य जोशी**

*समिति:* यहाँको शुभ नाम ?

जवाफ: मेरो नाम सौजन्य कुमार सुल्प्य जोशी ।

*समिति:* यहाँ कहाँ काम गर्नु हुन्छ ?

*जवाफ:* म राजप्रासाद सेवामा श्री ५ युवराजधिराज सरकारका निजी सचिवालयमा काम गर्छु ।

*समिति:* यो घटनाको सूचना भनौंन घटना घट्यो भन्ने कुरा यहाँ त्यही इन्भल्ब हुनुहुन्थ्यो र थाहापाउनु भयो कि ? बाहिर हुनुहुन्थ्यो थाहापाउनु भएन कि ? कसैले खबर गऱ्या थियो कि ?

*जवाफ:* म घरमा थिएँ त्यो बेला । त्यो दिन राती पनि घरमा थिएँ ।

*समिति:* कति वेला ?

*जवाफ:* मलाई एडिसि मेजर राजु कार्कीजीले हस्पिटलबाट फोन गर्नु भएको थियो । ल सर तुरुन्त अफिस जानु पऱ्यो भनेर भन्नु भएको थियो । त्यो करिब झण्डै १२:०० बज्न लागेको थियो । पौने बाह्र जति थियो । त्यहाँ पछि अफिसको गाडि आउँछ कि रातीको समयमा भएको हुनाले अफिसको गाडि आउँछ कि भनेर बुझेको थिएँ । हैन तपाई आफ्नै गाडिमा जानुभए

हुन्छ भनेपछि म ग्यारीजबाट आफ्नो गाडि निकालेर म अफिस आएँ । पश्चिम ढोका खुले पछि त्यहाँ बसेको सेन्ट्रलको गार्डहरु छ । उहाँले किन आउनु भयो भनेर सोध्यो । मैले एडिसिले खबर गर्नु भएको थियो । अफिस जानु भनेर त्यो कारणले म आएको भनेपछि । गेटमा बस्ने सेन्ट्रीले भित्र अब कोसंग कुरा गऱ्यो । कुरा गरे पछि मलाई गेट खोलिदियो । गेट खोलेपछि अब गाडि भित्र ल्याएपछि गाडिमा केही छ कि भनेर चेक गऱ्यो । ल गर्नुहोस् तपाईहरुको ड्यूटी हो । चेक गरेर ग्यारेज आफ्नो गाडि राखेर म आफ्नो अफिसमा गएर बसें । त्यो बेलासम्म मलाई के घटना भएको हो केही पनि थाहा छैन । त्यो पछि थाहा भयो ।

*समिति:* अनि यहाँ राजु कार्की एडिसिसंग ....... र त्यस बेलाको अनुभव सरकारसंग ...... कुराकानी भयो । त्यस्तो घटनाको पछि जति विवरण सुन्नु देख्नुभयो । त्यस्तै केही तालमेल पाउँनु हुन्न ?

*जवाफ:* त्यस्तो किसिमको नेचर मैले अब त्यत्रो वर्ष ६ वर्ष त पुरा संगत गरें । त्यस्तो किसिमको नेचर, त्यस्तो किसिमको गरिबक्सने स्वभाव मैले पाएको थिइन ।

*समिति:* के कुरा हुन्थ्यो मुख्य कुराहरु यहाँहरुसित कहिलेकाँही ?

*जवाफ:* जनरल्ली के हुन्छ भने मेरो अफिसको उहाँको नाउँमा आएको विन्तीपत्रहरु आफ्नो अफिसमा परेपछि आफ्नो जाहेरीको दिनमा गएर सरकारमा यो यो पोग्राम यो यो हिसाबले आएर जोहर गर्ने हो । त्यो प्रोग्राम कोअर्डिनेसन गरेर समयमा निगहा भए पनि त्यही अनुसार अर्गनाइजहरु कोअर्डिनेसन गरेर त्यो काम त्यो सवारीको काम कुरो मिलाउने । त्यो सवारीको बेला र अब बिन्ती पत्रहरुको विषयमा पनि अब यही हिसाबले ।

*समिति:* यहाँहरुको त्यो निजी सचिवालय र सुरक्षाको सम्बन्ध कस्तो रह्यो ? केही सम्बन्धै हुन्छ कि ?

*जवाफ:* सुरक्षा भन्नाले कुन किसिमको सुरक्षा गर्ने ?

*समिति:* युवराजधिराजमा कस्तो सुरक्षा भैराखेको छन भन्ने कुराहरु पनि ध्यान दिनुपर्ने हुन्थ्यो कि खाली ...... ?

*जवाफ:* म सचिवालयको मात्रै गर्दथे । एडमिनिस्ट्रेसनको काम मात्रै हो । म सचिवालयको मात्रै भएको हुनाले सेकुरिटि सम्बन्धी मैले केही विषय पनि हेर्न पर्दैन थियो । .........

*समिति:* सवारी होइबक्सिदाखेरी कहिले युवराजाधिराज सरकारको सवारी हुँदाखेरी हेरेर राख्नु हुन्थ्यो ? .. .. .. अर्को किसिमको .. . .. .. . . . विवहाको कुराहरु अथवा .. .. . .. . . . .. .. . युवराजाधिराजको जनरल कुराहरु .. .. . .. के के हुन्थ्यो ? ..... ......... ।

*जवाफ:* उहाँको विवाहको अब त्यो विषयमा अफिसमा किनभन्दाखेरी मेरो अफिसमा म मात्रै होइन । मेरो नन्गेजेटेड स्टापहरु गएर सबै यसरी कोठमा भएको त्यही कोठामा भएको हुनाले त्यो विवाहको कुरा अब उहाँको इन्टरटेण्टमेण्टको कुराको विषयमा त्यो सचिवलयमा सवारी होइवक्सेको बेलामा कहिले काँही अफिसियल्ली मात्रै कुरा गर्दथ्यौं । अन्यत्र त्यस्तो यताउताको कुरामा पनि मसंग त्यो उहाँको एफियर सम्बन्धी कुनै केही पनि कुरा गरिबक्सेको छैन । किन म कम्प्लिटली एडमिनिस्ट्रेन पार्ट भएँ नी, उहाँको त्यो पर्सनल लाइफ हो । त्यो विषयमा उहाँसंग सरकारसंग उहाँ मतलब सरकारसंग त्यो फिल्डको केही कुरा भएको छैन ।

*समिति:* सरकारले सुनाउनु हुन्थेन । युवराज सरकारले विवाह गरेको ?

*जवाफ:* लागि बक्सन्छ । ..... ... त्यो बेलामा मात्रै कुरा हुन्थ्यो । म मात्रै हुँदिन । एडिसी पनि साथ हुन्थ्यो ।

*समिति:* उहाँको विशेष खानपिनमा चियाकफी पनि विशेष प्रति केही पनि जानकारी चिजहरुको .............. .............. अम्मलको रुपमा केही थियो कि ?

*जवाफ:* त्यस्तो अम्मलको विषयमा मलाई केही पनि थाहा छैन । अब भोजभतेरमा भनेको दिन त अब हि्वस्की खाइबक्सन्थ्यो । त्यो अर्कै कुरा हो । अब ह्वीस्की पनि अब राजसी हिसाबले एक पेग ह्वीस्की ज्यूनार भयो, गरिबक्स्यो भने पनि त्यो समय लाग्छ । त्यो हिसाबको मात्र आफूलाई अनुभव छ । मैले देखेको एक दुई तीन चार प्यागसम्म त्यो डुरेसन हेरेर हो । ...... .... त्यति नै हो । त्यस किसिमको केही चेन्ज मैले देखिन । तीन चार पेग त के १०-१२-१५ पेगसम्म जाँदाखेरी पनि केही त्यस्तो चेन्ज भएको चाहिने मैले अनुभव गरेको छैन क्या । उहाँको पर्सनल हिसाबमा गएर केही व्यवहार गरेको भए । तीन चार घण्टा पाँच घण्टा पनि संगै बस्ने गरेको हो । स्ट्याण्डमै त्यो भएको हुनाले दश पन्ध्र पेग जाँदाखेरी पनि त्यो किसिमको ढल्ने, त्यो नेचर चेन्ज हुने किसिमको आफूले पाएको भेटिन । ....हजुर, पाँच सात पेग दश पेग गए पनि त्यो किसिमको आफूले पाइएन ।

*समिति:* कहिले तिरको कुरा हो । यो सम्झना आउँछ ।

*जवाफ:* हजुर, मैले ? त्यो त अब डिफिरेन्ट अकेजनमा त्यो किसिमको प्राइभेट लाइफमै भइरहन्छ र ।

*समिति:* कहिले कहिले लडेको जस्तो अवस्था आदि इत्यादी कुनै अनुभव छैन । बढि भयो ? त्यस्तो अवस्थाले भनेको सुन्नु भयो ?

*जवाफ:* त्यो अक्सर त्यस्तो प्रोग्राममा के हुन्छ भन्दाखेरी त्यस्तै जाने जसरी ड्रिङ्ग साफ गेममै भनुन । संगै ल बस भनेर हूकुम हुन्थ्यो । अनि संगै बसे गइन्थ्यो । संगै फर्किन्थ्यौं भने त्यो बढि ड्रिंक्स भयो भन्नेमा अब उहाँले ड्राइभ गरिबक्सिन्थ्यो । मलाई त्यति त्यो भएको त्यस्तो किसिमको अनुभव छैन ।

*समिति:* तपाईलाई त्यो शुक्रवारको दिन स्पोर्टस् कम्प्लेक्समा इन्सपेक्सनको शिलशिलामा कुनै डाक्टरहरुलाई सोधेको थिएँ । त्यही १९ गतेको कुरा हो । जानु पर्ने काम थियो । त्यो विषयमा मैले अब जाहेर गरिएको थिए । म पहिले नै गइराखेको हो अथवा संगै लगिबक्सने हो भन्ने किसिमको मैले जाहेर गरेको थिएँ । मलाई संगै जाने भनिबक्सेको हुनाले साढे दुई बजे म त्रिभूवन सदनमा थिएँ त्यतिबेला । हूकुम भए अनुसार है सोधे अनि त्यस पछि एक छिन म एडिसी अफिसमा कुरें । सरकार आइबक्सियो । अब ल जाउँ भनेर भनिबक्सियो । अनि एडिसि त्यो दिनमा गजेन्द्र थियो । सरकार आफैं हाँकी बक्सियो । गजेन्द्र भएर । म ठ्याक्कै सरकार राज भएको पछाडि पट्टि बसेर हामी स्पोर्टस् कम्प्लेक्स सात दोबाटोमा गयौं । पहिला स्वीमिङ्गतिर गयौं । स्वीमिङ्गमा त्यहाँ सबै नजर भएपछि सुटिङ्गतिर नजर भयो । सुटिङ्गमा नजर भएको हुनाले कुराकानी पनि त्यहाँ भयो । स्वीमिङ्गमा पनि त्यहाँ पनि कुरा बक्सियो । त्यस पछि स्क्वायस भए पछि त्यहाँ शोफामा राज गरेर स्क्वास ल्याइदियो । खेल नजर भयो । त्यो बेला अमरसिंह भन्ने एकछिन त्यहाँको संग कुरा गरिबक्सियो । एक गेम स्क्वास लिन सकिए पछि त्यहाँ पनि कुरा गरिबक्सेको थियो । त्यस पछि टेनिसकोट नजर भयो । टेनिसकोट नजर गरिसके पछि करिब साँढे तीन बजे भएको थियो । हामी तीन बजे ठ्याक्क पुगेको थियौं उता स्पोर्टस् कम्प्लेक्समा । त्यसपछि अब दरवार फर्कने भनिबक्से पछि रिङ्गरोड भएर ठिक चार त्रिभूवन सदन मलाई छोडिबक्सियो । चार बजे ।

*समिति:* त्रिभूवन सदन चार बजे ?

*जवाफ:* चार बजे त्रिभूवन सदनमा सरकारसंगै थिएँ म । चार बजे त्रिभूवन सदनमा आर्लिइबक्सेपछि उहाँ भित्र वगैंचा तिर सिधा गइबक्सियो । म विन्ती दर्शन गरेर आफ्नो सचिवालयतिर फर्किएँ ।

*समिति:* त्यसपछि साँझमा कुनै टी पार्टीमा गएको जानकारी छ कि ?

*जवाफ:* पार्टी भनेर राजगुरु नैनराज पाण्डे ।

*समिति:* कति बजेको कुरा हो ?

*जवाफ:* त्यो साँढे पाँच बजेको कार्यक्रम हो ।

*समिति:* त्यसमा संगै जानु भयो कि ?

*जवाफ:* म गइन । उहाँहरुको लागि मात्रै निम्तो भएको हुनाले उहाँहरु मात्रै सवारी होइबक्सियो । आफ्नो अफिसपछि त त्यो बेलुकाको पार्टीमा मलाई केही पनि थाहा छैन ।

*समिति:* त्यो दिन १९ गतेको विहान अथवा भनौन ४ बजेभन्दा अगाडिको कुनै प्रोग्राम थियो कि थिएन ?

*जवाफ:* चार बजे भन्दा अगाडिको प्रोग्राम त्यो थाहा छैन मलाई ।

*समिति:* त्यो चिठी हो पुऱ्याउन ल्याउने ? ..... त्यो खेलकुदमा जानको लागि त्यहाँ कति बजे त्यहाँ पुग्नु भयो होला ? के सम्झना छ ?

*जवाफ:* साँढे दुई बजे पछि गएको हो । त्यति अब साँढे दुई बजे आउ भनिबक्सिएको हुनाले त्यो हिसाबले ठिक साँढे दुई बजे गएर म एडिसिसंग उसमा पुगें ।

*समिति:* त्रिभूवन सदनमा ?

*जवाफ:* त्रिभूवन सदनमा एडिसि समते पुगें । सरकारलाई खबर भएपछि सरकार आइबक्सियो । अनि त्यस पछि गएको हो । त्यो बेला मैले घढी पनि हेरिन ।

*समिति:* साँढे तीन बजे उहाँ पुग्नुभएको छ ? तीन बजे उहाँ पुग्नु भएको छ ?

*जवाफ:* तीन बजे त्यहाँ स्पोर्टस् कम्प्लेक्स भित्र सात दोबाटोमा ।

*समिति:* तीन साँढे तीन बजेपछि कहाँ हुनुहुन्थ्यो ?

*जवाफ:* साँढे तीन बजे पछि सरकारसंगै रिङ्गरोड भएर दरवार फर्किएँ ।

*समिति:* वीच बाटोमा के मोवाइलमा टेलिफोन आएको सम्झना छ तपाईलाई ?

*जवाफ:* छैन ।

*समितिः* दरवार कति बजे चार बजे भन्नुभयो ।
*जवाफः* चार बजे ।

*समितिः* ठिक्क चार बजे ?
*जवाफः* अँ ।

*समितिः* ३:४७ मा एउटा फोन रिसिभ भएको देखिन्छ । ३ बजेर ४७ मिनेट जाँदा ?
*जवाफः* तीन ? त्यो चाहीनी आफूँले याद गरिन । म पछाडि थिएँ । गाडि रिङ्ग रोड रिङ्ग रोड भएर ... ।

*समितिः* ३:४७ मा भएको फोन ५२ सेकेण्डको रहेछ ।
*जवाफः* म पछाडि थिएँ । झण्डा देखाएको गाडिमा के हुन्छ भन्दाखेरी त्यो वाकेटाके आइरहन्छ नी ।

*समितिः* आफ्नै अफिसबाट हुन्छ ?
*जवाफः* अँ

*समितिः* अँह, आफ्नै अफिसबाट हुन्छ ?
*जवाफः* त्यो भैरहने भएको हुनाले त्यो मलाई याद भएको थियो । पछाडि बस्ने थियो अर्को साथी

**गृह सचिव श्री श्रीकान्त रेग्मी**

*समितिः* गृह सचिवज्यू, १९ गतेको घटनाको बारेमा यहाँलाई के थाहा छ, यहाँले यसको सबभन्दा पहिलो सूचना कतिखेर र को बाट पाउनुभयो ?

जवाफः १९ गतेको घटनाको विषयमा मलाई सम्पूर्ण कुरा थाहा छ भनेर मैले कहीं कतै कसैसंग पनि दावी गरेको छैन । सर्वप्रथमत तपाईलाई थाहा छ भनेर जुन प्रश्न गरियो । यसैमा मेरो थोरै चित्त दुखाईछ । १९ गते शुक्रवारको दिन म मेरो घरमा थिइन । अझै काठमाडौं मै थिइन । हामी एउटा होटलमा थियौं । खाना खाँदै गरेको अवस्थामा श्री ५ महाराजाधिराज सरकार गंभिर रुपमा अस्वस्थ्य भैबक्सेको सूचना हामीलाई प्राप्त भयो । सूचना प्राप्त भैसके पछि होटलमा बसिरहन मलाई मन लागेन । त्यस पछि म तत्कालै होटल छोडेर आफ्नो घरमा आएँ । घरमा आइसके पछि अनेक तरहका हल्लाहरु आइपुगे । अनि त्यो हल्लाहरु यथार्थताको विषयमा बुझ्न मैले प्रयास गरे । त्यही क्रममा मैले प्रधानमन्त्रीज्यूसंग पनि यस्तो वाहिर हल्ला चलिराखेको छ । हजुर कहाँ सही सूचना प्राप्त भयो होला के हो ? भनेर राती सोधें । सोध्दा प्रधानमन्त्रीज्यूबाट पनि गंभिररुपमा अस्वस्थ्य भएको जानकारी मैले पाएको छु । त्यो भन्दा बढि जानकारी मलाई छैन र म वीरेन्द्र सैनिक अस्पतालमा महाराजाधिरज सरकारलाई लगिएको छ रे त्यहाँ जाँदैछु भनेर प्रधानमन्त्रीज्यूबाट आज्ञा भयो । त्यस पछि मैले अरुतिर पनि पत्तालगाउने प्रयास गरें ।

*समितिः* खाली सुनेको भरमा पत्ता लगाउने कोशिस गर्नुभयो ?
*जवाफः* सुनेको भरमा पत्तालगाउन प्रयास गरें र समय एकिन मलाई अहिले भएन । करिब ११:०० बजे तिर राष्ट्रिय अनुसन्धान विभागका प्रमुखबाट केही कुराहरु जानकारी भयो । जानकारी भैसकेपछि मैले श्री ५ महाराजाधिराज सरकारका प्रमुख सैनिक सचिव विवेक शाहसंग सम्पर्क गरें । मैले आफैंले सम्पर्क गरेको हो । विवेक शाहसंग सम्पर्क गरिसके पछि विवेक शाहबाट घटनाको विषयमा मैले केही जानकारी पाएको हुँ ।

*समितिः* तपाईको दरवारसंग त्यस्तो डाइरेक्ट लिंक हुँदैन ?
जवाफः कानूनी हिसाबले कामको शिलशिलामा कहिलेकाहीं दरवारका प्रमुख सचिवज्यूहरुसंग, सचिवज्यूहरुसंग, सैनिक सचिवज्यूहरुसंग मैले सम्पर्क गरिरहनु पर्छ र सामान्यतया त्यस्तो सम्पर्क हुँदैन ।

**प्रधान सेनापति श्री प्रज्वलशम्शेर ज.व.रा.**

*समितिः* घटनाको जानकारी चिफ सावले कहिले भयो ? कुन बेला पाउनु भयो । त्यस पछि चिफ साहेबले के के सेवा पुर्‍याउन सफल हुनुभयो यस बारेमा केही जानकारी दिन सक्नु हुन्थ्यो कि ?

*जवाफः* प्रश्न महत्वपूर्ण छ । राजदरवारको सिक्यूरिटी शाही नेपाली सेनाको जिम्मेवारी होइन । त्यहाँ भित्र दुईटा गण छ । शाही रक्षक सैनिक प्रहरी छ । एडिसि छ । त्यहाँ भित्र कम्प्लिट सिक्यूरिटि एडिसि अफिस, सैनिक सचिव या प्रमुख सैनिक सचिवले हेर्ने हो । शाही नेपाली सेना कुनै जिम्मेवारी नै छैन त्यसमा पहिला त्यो छ ।

दोश्रो कुरामा, म राती शुक्रवार १९ गते पौने दश बजेको थियो । म सुत्न तयार भैराखेको थिएँ । मलाई भित्रको एडिसिले क्याप्टेन प्रफुल्ल विक्रम शाहले फोन गरिकन महाराजाधिराज सरकारलाई गन Shot एक्ज्याक्ट भन्छु गन Shot लागेको छ । हस्पिटल सवारी चलाइयो भन्ने वित्तिकै त्यो भन्नुभए पछि म यो नर्मल लुगामा लगाएर नि हो हस्पिटल दौडिएँ । म हस्पिटल पुग्दाखेरी १०:१० जति भएको थियो । ट्वान्टी मिनेटमा म पुगिसकेको थिएँ । त्यहाँ पुग्दाखेरी के भएको थियो ? कसो भएको मलाई थाहा पनि थिएन । मेरो मनमा के लागेको थियो भने स्वर्गिय महाराजाधिराज सरकार किन वेलुकिताका हतियार खेलाई बक्स्यो होला , कसरी एक्सिडेन्ट केही भएर गोली लाग्यो हो कि भन्ने यो मनमा आशंका त्यहाँ पुग्यो । त्यहाँ पुगे पछि त्यहाँ जाँदाखेरी त्यो ट्रमा हलमा महाराजाधिराजको मुमा बडामहारानी सरकार बाहिर राज भैराखेको छ ट्रमा हलको बाहिर ।अरु त्यसपछि मुमा बडामहारानी सरकारले ल तिमी आइपुग्यौ । यो सबै कन्ट्रोल गर भनेर हूकुम भयो । सरकारबाट जो हूकुम भयो भनेपछि म गएँ । अब त्यो ट्रमा हल भित्र हेर्दाखेरी हजुरको ... ... । स्वर्गिय महाराजाधिराज सरकार ..... ..... गर्न खोजिराखेको थियो । त्यो स्वर्गिय भैसकेको थियो ।

कुमार खड्गलाई रिभाईभ गर्न खोजिराखेको थियो , प्रयास थियो , सकेन । अब दुई बजे चाँही त्यो ट्रमा हलमा इन्ट्री हाम्रो एक्सिडेन्टल्ली मान्छेको लागि प्रिपेयर क्यापेरेसन हुन्छ त्यहाँ । दुई वटा लासहरु स्ट्रेचरमा रातो मण्डिमा आर्मिको मान्छे स्वर्ग जाँदाखेरि र रवि शमशेरले मलाई आएर के मर्जि भयो भने वित्यास पर्‍यो भनेर मलाई मर्जी भयो । त्यो बेलासम्म मलाई केही पनि थाहा छैन । के भयो त भनेर भन्दाखेरी स्वर्गीय महाराजा दीपेन्द्रले गोली हानेर सबैलाई सिध्याए भनेर मर्जी भयो । ह्या भनेर मैले भने होइन त्यही हो । सत्य गैसक्यो भनेर मर्जी भए पछि म । अनि त्यस पछि मैले त्यहाँ मिल्ट्री हस्पिटलको डाक्टरलाई सोधें । के के भैरहेको छ भन्दाखेरी महाराजाधिराज सरकार परमधाम ........ ढिलो भैसकेछ । अरुलाई गरिराखेको छ । स्वर्गिय दीपेन्द्र महाराजाधिराज सरकार गिदि बाहिर निस्केको छ । त्यो विषयमा हामी गर्न खोजीराखेको छौं । कोमल सरकार उसमा, गोरख उसमा भने पछि त्यहाँ त त्यो वातावरण नै कस्तो रहेछ भने हजुरको एज अ चिफ हुने कुरा भैसक्यो । डाक्टरको त्यो हेरीरहेको छ । म त्यहाँ स्वयं गरिकन त्यहाँ यिनीहरुलाई डिस्टर्भ गर्न त राम्रो भएन । अनि मनमा के आयो भने अब यो त वित्यासै भैसक्यो भने पछि ज्ञानेन्द्र सरकार पोखरामा भनेर थाहा पाएँ । अनि त्यस पछि अब एडिसिहरु, मुमाबडामहारानी सरकारलाई जाहेर गरेर ज्ञानेन्द्र सरकारको सवारी सिक्यूरिटि नभैकन सवारी चलाउनु हुन्न । त्यही सवारी राख्ने । कसरी ल्याउने भन्दाखेरी हेलिकप्टर प्रयोग गर्ने हो कि भनिकन हामीहरुले महाराजाधिराज सरकार ज्ञानेन्द्रको सवारी पोखरा मै रोकिदियौं । रोकेपछि हजुरको हामीले यहाँबाट हेलिकप्टर पठाउने प्रयास गर्‍यौं । हेलिकप्टर जान सकेन । वेदरको कारणले गर्दाखेरी हाम्रा आर्मि पनि स्ट्याण्ड बाईमा थियो । त्यो हामीलाई प्रोब्लम परेन हजुरको । किन .... डिरेक्टली उसमा हस्पिटलमै ल्याउने हजुरको । यस्तो अन्योलको स्थितिमा एउटा वरिष्ठ शाही परिवारको व्यक्तित्व त्यहाँ होइबक्सन्थ्यो मौसूफ ।

अनि त्यसपछि हजुरको त्यो हेलिकप्टर जान नसकेको कारणले गर्दाखेरी हामीले टिम मायोनिटर सेक्यूरिटी पुलिस सहितको मुग्लीङ्गमा ६ बाहिनीबाट हाम्रो एक्सकर्ट, पुलिस लगाएर हामीले सवारी चलायौं हजुर । अनि विहान विहान यो करिब दुई बजेको कुरा हो । २ बजे पोखराबाट सवारी चलाएको छ । अनि करिब करिब साँढे चार बजेतिर अलिकत उज्यालो पनि भएको पानी पनि कम भएको थियो । हामीले कन्ट्याक्ट गर्‍यौं । यसरी हेलिकप्टर जान सक्छ कि भनेर भन्दाखेरी जान सक्छ भने पछि सवारी कहाँ भनेर पछि मुग्लीङ्ग भन्दा अलि उतै रहेछ हजुरको । हेलिकप्टर पनि जानु अनि सवारी गजुरीमा भित्र ....... आएको अनि त्यस पछि सवारी चलाएर ल्यायौं । त्यति भएपछि हजुर अब प्रधानसेनापतिको हैसियतले मैले राष्ट्रिय सुरक्षा हेर्ने हो । अनि गर्दाखेरी अब कोही नाई .. .. उहाँ सवारी भए पछि हजुरले नै भेटिहालिबक्स्यो । अनि त्यस पछि अब जे जे हो त्यही हो ।

*समितिः* एउटा उसको राजपरिवारको लागि आर्मिबाट पुलिसहरु भन्दा पनि एडिसि र भनौं आर्मि पुलिस ल्याएर ......... बीचको ...... कुनै एवनर्मल एउटाको भन्दा ... .... ..... ..... केही ... .. .. . . .. . भ्याउँछ कि भ्याउँदैन ?

*जवाफः* राजदरवारभित्र जो एडिसिहरु छ नी त्यो आर्मिबाट जान्छन् योङ्ग अफिसरहरु जस्तो अहिले वरिष्ठ अधिकृतहरु छन् । उनीहरु भित्र गएर त्यहीबाट प्रमोशन भएर भएको हो । हामीहरुको त्यसमा केही हातै छैन । भित्रैबाट प्रमोशन भयो भनेर आउँछ । जुन ठिटाहरु छन् । उनीहरुलाई हाम्रो दरवारको क्रयाइटेरिया अनुसार, मापदण्ड अनुसार हामीहरुले उनीहरुलाई सेल्याक्ट गरिकन नामहरु दरवार पठाउँछौं । अनि दरवारबाट उहाँहरुले सेल्याक्ट गर्नु भईकन । अब फलानो पठाउनु भनेपछि उनीहरु दरवार भित्रै एडिसिको रुपमा कुनै दुई वर्षको लागि जान्छ , कुनै एक वर्षको लागि जान्छ त्यसरी जान्छ । अब यसमा शाही नेपाली सेनाको अपार्ट फ्रम नाम पठाउने वाहेक अरु हामीलाई कामै छैन ।

*समितिः* पछि उनीहरुको सेवा सर्तको उतै कन्भर्ट हुन्छ कि यतै ?

*जवाफ:* अब भनौं न उनीहरु गरि गरि शाही नेपाली सेनाको दरवन्दी भित्र छन् । तर उनीहरु राजप्रासाद सेवा भनौं न त्यहाँ भित्र कामहरु गर्छन् । अब भनौं के रे यो ओम पुन भन्ने त्यो सैनिक प्रहरीको हाकिम थियो । उ मामुली पहिलेको चलनमा बाहिर निस्कने थिएनन् । तर उ योग्य भएको हुनाले बाहिर पनि सेवा गर्न सक्छ कि भनेर उसले त्यहाँबाट सहायक रथिमा बढुवा गरेर बाहिर लिएर आएको हो, एउटा त्यो । अर्को अहिले भरखर अशोजमा के विक्रम खड्का भन्ने छ । उहाँ सैनिक प्रहरीमा लेसनायक पोष्टमा । उहाँ पनि योग्य व्यक्ति भनिकन उहाँलाई ल्याएर एउटा गणपति पशुपतिप्रसाद गणको गणपति भएर उहाँले हुर्नु हुन्छ ।

अरु बरिष्ट अधिकृतहरु बाहिर आउनुहुन्न । त्यही भित्रबाट हुन्छ । जो शान्तकुमार मल्ल जरसाहेब, सेकेण्डल्याप्टेनमा स्वर्गिय महाराजाधिराज सरकारको एडिसि हुनुहुन्थ्यो । अहिले त्यहीबाट कप्तान, मेजर, लेप्टेन कर्नल, ब्रिगेडियर, मेजर, लेफ्टेन जनरल भएर उहाँको पदावधि सिद्धिएपछि अनि रिटायर भएर अहिले मानको खातिर शाही पाश्ववर्ती वहाँ हुनुभएको छ । भनेपछि त्यस्तो किसिमको व्यक्तिहरु बाहिर आउनुहुन्न । नआउने । साधारणतया बाहिर आउन नसक्नु । अब त्यो दुई वर्षे जो जान्छ आर्मिबाट त्यो उनीहरुलाई त्यहाँ भित्र पठाएर उनीहरु बाहिर आउन सक्छ । धेरै अधिकृतहरु जो कि भित्र गएर दुई वर्ष कार्यकाल पुरा गरेर बाहिर निस्केका छन् । शाही नेपाली सेनामा छन् । दरवारको सेक्यूरिटि शाही नेपाली सेनालाई होइन ।

*समिति:* खाली ...... ..... माग भयो भनेदेखि पठाइदिने मात्रै हो अफिसरको लिष्ट ? होइन प्रारम्भमै प्रारम्भमा माग भए अनुसारका एडिसि पठाइदिने ?

*जवाफ:* अब महाराजाधिराज सरकार, बडामहारानी सरकारहरुको सवारी, युवाराधिराज सरकारको सवारी बाहिर भएको खण्डमा दरवारबाट बाहिर गएको खण्डमा त्यसबाट शाही नेपाली सेनाको प्लस राजदरवारको दुई जनाको सेक्यूरिटिसंगै प्रहरीको पनि छ क्यार सामेल भैकन बाहिरको सेक्यूरिटि अब भनौं शाही नेपाली सैनिक मञ्चमै सवारी हुन्छ । त्यो आर्मिकै मान्छे हो । त्यो त्यहाँ त्यसमा आर्मिको मान्छे हुन्छ । दरवार भित्र हामीले त्यति छैनौं ।

*समिति:* त्यहाँ भित्र दुईवटा गण भन्नुभएको थियो ?

*जवाफ:* त्यो पनि उनीहरुको त्यहाँ पालो पहरा लिनु पऱ्यो नी त्यस पछि दरवारको सेक्यूरिटि लिनु पऱ्यो नी । त्यहाँ एउटा बाहिनी पति छ नि शाही रक्षक बाहिनी पति भन्ने छ नि त्यसलाई हामीले जस्तो १ बाहिनी, २ बाहिनी, ३ बाहिनी, ४ बाहिनीहरु हुन्छन् । दरवार भित्रको बाहिनीलाई हामीले शाही रक्षक बाहिनी भनेर भन्छौं । त्यहाँ दुई वटा च्यानल हुन्छ । सहायक रथि हुन्छ । उसको ... एउटा महासेनानी हुन्छ । अनि त्यहाँ ब्रिगेडियर हेडक्वाटरको स्टाफ हुन्छन् । अनि दुई वटा गण छ । त्यो दरवारको सेक्यूरिटिको लागि हुन्छ ।

*समिति:* आर्मि हेडक्वाटरको पनि एडिसिहरु छन् ?

*जवाफ:* कसको ?

*समिति:* तिनीहरुको कर्नलहरुको ?

*जवाफ:* त्यो दरवार भित्रको, त्यो एडिसि भन्दा पनि पियानस अफिस जुन छ नी सैनिक सचिव उसको अन्तर्गतको त्यो बाहिनीहरुले संचालन गर्छ ।

*समिति:* शुरुमा शाही नेपाली सैनिकमा भर्ना जवानहरु कति दरवार भित्रबाट कति संख्यामा माग भएको हुन्छ । त्यो अनुसारको लिष्ट पठाएर शाही सलामी त्यो अधिकृतिहरुको बाहेक अरु जिम्मेवारी त्यहाँभित्रको सुरक्षाको जिम्मेवारी शाही नेपाली सेनाको नहुने रहेछ होइन चिफ साहेब ?

*जवाफ* हो हाम्रो हुन्न ।

*समिति:* सवारीको क्रममा मात्रै ........ बाहिर आउन पायो ?

*जवाफ:* बाहिर सवारी भएको खण्डमा सम्म्फदाखेरी सिक्यूरिटि प्रदान गरिन्छ ।

**प्रहरी महानिरीक्षक प्रदीप शम्शेर ज.ब.रा.**

नारायणहिटी राजदरवारभित्रको शान्ति सुरक्षा, fourtier system छ । नेपाल प्रहरीले, राजदरवारभन्दा बाहिरपट्टिको सुरक्षासम्म हेर्ने काम गर्दछ । राजदरवारभित्रको सुरक्षा हेर्ने जिम्म नेपाल प्रहरीलाई भएको हुँदन ।

घटना भएको रात करिव ९:१५ तिर राजदरवार ए.डि.सी. अफिसबाट फोन आएपछि प्रहरीलाई इलर्ट गरियो । राजदरवारमा दुर्घटना भई अस्पतालमा लगिएको छ भन्ने थाहा पाएपछि म अस्पताल पुगें । अस्पतालमा पुगेपछि मात्र उक्त घटनाको कुरा थाहा पाएको हुँ ।

**सशस्त्र प्रहरीतर्फका प्रहरी महानिरीक्षक श्री कृष्णमोहन श्रेष्ठ**

*समिति:* प्रहरी महानिरीक्षकज्यू, राजदरवारमा जेष्ठ १९ गते राती भएको घटना सम्बन्धमा आफूले प्राप्त गरेका जानकारी समितिसमक्ष राखेर समितिलाई सहयोग गरिदिनोस् ।

*जवाफ:* एडिसि अफिसबाट फोन आयो । दरवारमा दुर्घटना भएको जस्तो भएको छ । एलर्ट सबैलाई स्ट्याण्ड बाई गरिदिने भन्ने खबर आयो । त्यस पछि मैले तत्कालै सबै एलर्ट गरें । त्यसपछि अब बुझ्ने प्रयासहरु गरियो । बुझ्ने प्रयास हुँदाखेरी दरवारमा ठूलो दुर्घटना भएको छ । सबै सरकारहरु हस्पिटलमा लगिएको छ भन्ने खबर पाए पछि म करिव पौने एघार बजेतिर उहाँको पनि चाहिने दरवार तिर केरे अस्पताल तिर लागें । त्यस पछि अनि त्यहाँको घटनाहरु विभिन्न त्यहींको मान्छेहरु अन्य शाही परिवारहरुबाट पनि कुराहरु विस्तारै विस्तारै बुझियो । घटनाबारे घटना भयो ठूलो घटना भन्ने त्यही नै मैले जानकारी पाएँ ।

*समिति:* यो १९ गतेको दरवारको जुन घटना भयो । त्यो घटना सम्बन्धमा कसरी थाहा पाउनु भयो ? यहाँको सेक्यूरिटिको जिम्मेवारी थियो थिएन ? यहाँको रोल कस्तो रह्यो ? त्यो हामीलाई बताइदिनुहोसन् ।

*जवाफ:* सम्माननीयज्यू अब १९ गतेको यो दुःखद घटनामा त्यो साँझ म यो एउटा अरु आफ्नो अफिसको काम केही नभएको हुनाले एउटा होटलमा कार्यक्रम थियो । त्यहाँबाट म नौं बजेतिर घर फर्केको मैले त एकिन त भन्न सक्दिन । अन्दाजी ९ बजेतिर घर फर्किएको थिएँ । र साढे दश जस्तो लाग्छ मलाई साढें दश बजेतिर राजदरवार एडिसि अफिसबाट म कहाँ फोन आयो । र मलाई अलिकति इमर्जेन्सी जस्तो छ । स्ट्याण्ड वाई बस्नु पर्ला भन्ने मैले पहिलो मेरो इन्फरमेशनमा आयो हजुर । र त्यसपछि करिब करिब त्यसको ५-१० मिनेट पछि हुन सक्छ । मलाई ....... जरसाहेब प्रिन्सिपल मेल्ट्री सेक्रेटरीले विवेक शाह जरसाहेबले फोनमा सरकारको एउटा पारिवारिक कुनै एउटा जमघटमा एक्सिडेन्टल डिस्चार्ज जस्तो लाग्छ । गोलीहरु डिस्चार्ज भएको छ । फायरिङ्ग भएको छ र घाइतेको संख्याको अलिकति बढी भएको जस्तो हुनाले अफिसमा गएर बस्नुहोला भन्ने मलाई भन्नु भएको थियो ।

त्यसपछि म लुगासुगा लगाएर आफ्नो यूनिफर्म लगाएर मेरो अफिस महाराजगंज यो राष्ट्रिय प्रहरी प्रशिक्षण प्रतिष्ठानमा सशस्त्र प्रहरी संगठनको कार्यलयले श्री ५ को सरकारले त्यो ठाउँ निर्धारण गरेको हुनाले म राती करिब करिब यति सबै कुरा गर्दा ११ भन्दा बढि भैसकेको थियो हजुर । ११ सवा एघार यस्तो बेलातिर कार्यालय गएँ । मेरो मातहतमा काम गर्ने अफिसरहरुलाई त्यही सूचनाको आधारमा उनलाई अफिसमा आउनलाई खबर गरेर मेरो सहित म अफिसमा बसें हजुर ।

त्यसपछि १२ बजे उपरान्त भनौं मैले सम्माननीय प्रधानमन्त्रीज्यूको लोकेशन छाउने हस्पिटलमा लोकेसन थाहा पाएको हुनाले म पनि अरुहरु सबैलाई कार्यालयमै स्ट्याण्डवाई राखेर म छाउनी हस्पिटलमा गएँ । छाउनी हस्पिटलमा पुगिसके पछि विस्तारसंग मैले त्यहाँको अवस्थाहरु बुझें । दोश्रो अब मेरो संगठन सशस्त्र प्रहरी संगठन अहिले संगठनात्मक चरणमै भएको हुनाले यसको रोल प्रत्यक्षतः यसमा अब जनरल शान्ति व्यवस्था कायम गर्ने कुरामा संलग्न हुने अवस्था नभएको कुरा हजुरहरुमा जाहेरै छ । यो दरवार भित्रको अवस्था हुने हुनाले अरु अधिकृतहरु जस्तै म पनि त्यो रात छाउनी हस्पिटलमै बसें र मेरा अफिसरहरु सबै स्ट्याण्डवाई मै रहिरहे ।

**पशुपति शम्शेर राणा र वहाँको श्रीमतीसंग संयुक्तः रुपमा समितिले २०५८ ।२ ।२८ मा गरेको सोधपुछ**

*समिति:* अनि माननीयज्यूलाई with मिसेस यहाँ उपस्थित हुनका लागि आग्रह गरेका हौं । पाल्नु भएकोमा धन्यवाद । अहिले यहाँ यो हाम्रो के भने पशुपति राणा । यहाँलाई थाहै छ १९ गते राजदरवारमा एउटा घट्ना घट्यो । त्यो घट्नाको सत्य तथ्य पत्ता लगाउन भनेर एउटा कमिशन बनेको छ । यहाँलाई त थाहा छँदैछ । त्यही कमिशनले सत्य तथ्य पत्ता लगाउने हामीहरुले अध्ययन गर्दै जाँदाखेरी दुईटा टेलिफोन नम्बरहरु- एउटा साधारण टेलिफोन र एउटा मोवाइल टेलिफोन यहाँहरुसंग सम्बन्धित देखियो । त्यसैले म पहिला त त्यही टेलिफोन नम्बर यहाँहरुको हो कि होइन, हामीले देखेको मात्रै । हामीले रेकर्ड हेर्दाखेरी यहाँहरुको नाममा देखिन्छ त्यो टेलिफोन नम्बर । टेलिफोन नम्बर मध्ये एउटा मोवाइल फोन नम्बर ९८१०२४३३९ यो उषा राणाको नाउँमा देखिन्छ । के रानी साव त्यो मोवाइल नम्बर यहाँको नाउँमा हो ?

*जवाफ:* त्यो मलाई पनि थाहा छैन । कम्पनीले दुईटा टेलिफोन इश्यु गरेका थियो । मेरो व्यागमा छ ।

*समिति:* ए चाहिने उसको भन्या ?

*उषा राणा:* छोरी ।

*समिति:* को छोरी भन्नुभएको ?

*उषा राणा:* देवयानी ।

*समिति:* अच्छा देवायानी राणाको । अच्छा यो टेलिफोन नम्बर यहाँको नाममा रहेपनि देवयानी राणाले ।

*उषा राणा:* कम्पनीले दुईटा फोन इश्यू गरेको थियो ।

*समिति:* इश्यू गरेको थियो ?
*उषाा राणा:* त्यो दुईटा फोन पछाडिको भयो । फ्यामीली भएपछि जुन नम्बर भएपनी हुन्छ भनेर उसको चाहि ९ छ मेरो ८ छ । ८ त मेरो व्यागमै छ ।

*समिति:* होइन ८ संग हाम्रो सम्बन्ध छैन ।
*उषा राणा:* नाई मैले भनेको दुईटा नम्बर थियो ९ चाहिने छोरीले लियो ।

*जवाफ:* भनेपछि ९ नम्बर चाहि छोरीसंग सम्बन्धित भयो । अनि त्यो अर्को एउटा फोन नम्बर छ ४२३०५१ त्यो पनि यहाँहरुको घरको नम्बर हो ?
*पशुपति:* उसको कोठाको नम्बर ।

*समिति:* उसको भनेको ?
*पशुपति:* देवयानीको कोठाको ।

*समिति:* ए ! देवयानीको कोठाको भनेपछि दुईटै नम्वर चाहि देवयानीको भयो । त्यसो भनेदेखिन यो टेलिफोन नम्बर यहाँहरुको हो भन्ने चाहिने भयो र हामीले के देख्यौं भने त्यो घट्ना घट्दाको दिन राती २०:१२ बजे अर्थात् ८ बजेर १२ मिनट जाँदा त्र:उन प्रिन्सले देवयानीलाई टेलिफोन गरेको देखिन्छ । र त्यो टेलिफोन गर्दा १ मिनट १४ सेकेण्ड कुरा गरेको पाइयो । त्यसपछि अनि त्यसको केही मिनेटपछि देवयानीले केही मिनेट भनेको ८ बजेर २५ मिनेट जाँदा पहिलो पटक यता Crown prince बाट ८ बजेर १२ मिनेट जाँदाखेरी देवयानीलाई टेलिफोन गरेको । अनि त्यस को केही मिनेट पछि ८ बजेर २५ मिनेट जाँदा देवयानीबाट युवराजधिराजलाई टेलिफोन गऱ्यो । त्यो ४ मिनेट १४ केसेण्ड कुरा भएको देखिन्छ । रेकर्डबाट । ठीक तेस्रो पटक ८ बजेर ३९ मिनेट जाँदा युवराजाधिराजले देवयानीलाई कुरा गरेर ३२ सेकेण्ड देवयानीलाई कन्ट्याक्ट गरेर ३२ सेकण्ड कुरा भएको देखिन्छ । यो मोवाइलमा । यो साधारण टेलिफोन गरेको रेकर्ड गर्दो रहेनछ हामीले त्यो अनुरोध गर्न सकेनौं । यो तीनवटा नम्बरमा देवयानी र युवराजधिराज बीच एक पछि अर्को गरेर त्यो रात जमघटकै समय भित्र परेर देखिन्छ । त्यसकारणले के यस विषयमा यहाँहरुलाई कुनै जानकारी छ ।

*पशुपतिशम्शेर राणा:* यसमा खास contact को probleM देखियो । यो अब छोरी यहाँ छैन । आज पनि contact को probleM पनि हुन सकेन ।

*समिति:* यो नितान्त छोरीको पर्सनल कुरा भयो हैन ? पर्सनल कुरा भयो यहाँहरुले सुन्नसक्ने कुरा भएन । यसकारणले सब के युवराजधिराजसँग देवयानीको कुनै सम्बन्धको लामो श्रृंखला थियो कि वा नयाँ सम्बन्ध विकसित भएको भन्ने कुनै सानो जानकारी छ यहाँहरुलाई ?

*पशुपतिशम्शेर राणा:* हामीहरुलाई विस्तृत जानकारी छैन सभामुखज्यू । एक अर्कालाई मन पराएको हुन सक्छ । सबैलाई थाहा भयो हामीलाई पनि थाहा भयो ।

*समिति:* भनेपछि वहाँहरुको सम्बन्धमा पनि भन्नसक्ने स्थिति भएन र यो टेलिफोन confirM भयो । देवयानी अहिले कहाँ, घरैमा हुनुहुन्छ ?

*पशुपतिशम्शेर राणा:* घर बाहिर छ । मुलुक बाहिर गएको छ ।

*समिति:* ए मुलुक बाहिर गएको छ । तर कुनै निश्चित ठाउँ मुलुक बाहिर कहीं छ भने कुनै यहाँहरुलाई ज्ञान छ ?
*पशुपतिशम्शेर राणा:* अब हामी पत्ता लगाउन सक्छौं ।

*समिति:* त्यसो भने यहाँहरुलाई सायद त्यो त हामीले आशा राख्नै पऱ्यो देवयानीलाई अब अरु माध्यमबाट सहयोग हामीले contact गर्न सक्ने त अवस्था हुँदैन । टेलिफोनबाट हामीले जानकारी लिन सक्दैनौं । अनि त्यतिखेर उः रहँदैन गोपनीयता नरहला कि भन्ने डर हुन्छ । त्यसैले देवयानीलाई आज त सम्भवै भएन भोली सम्ममा हामीले देवयानीलाई भेट्न आयौं भने ।
*पशुपतिशम्शेर राणा:* देवयानीको अवस्था अहिले अस्वस्थ्य अवास्था छ, सभामुखज्यू, कमजोर छ । अत्यन्त कमजोर छ, उसको अवस्था । उ विश्राममा छ । म प्रयासचाहिं गर्छु ।

*समितिः* अब उपलब्ध हुन सक्ने नसक्ने खवर हामीलाई समयमैं किनभने हामी त यहाँलाई थाहै छ ३ दिनको समय हो । ३ दिन त आज जाँदैछ । त्यसकारणले अब हामीले म्याद थपको लागि रिक्वेस्ट गर्‍यौं भने पनि, समय थपको लागि कन्भिन्स गर्‍यौं भने पनि धेरै समय उपलब्ध हुने जस्तो लाग्दैन । त्यो स्थितिलाई यहाँले अनुमान गरेर छिटो भन्दा छिटो जति सकिन्छ देवयानीलाई यहाँ उपस्थित गराइदिन सक्नु भयो भने ।

*पशुपतिशम्शेर राणाः* कोशिश चाहीं गर्छु सभामुखज्यू ।

**देवयानी राज्यलक्ष्मी राणा**

२०५८/२/३० अहिले भर्खरै २:०० बजेतिर शाही नेपाली राजदूतावास दिल्लीबाट शिलवन्द एउटा खाम प्राप्त भएको छ र यसमा के लेखिएको छ भने "मेरो जिम्मामा रहेको र शिलवन्दी गरेर पठाएको" सहिगर्ने भेषबहादुर थापा शाही नेपाली राजदूत छाप सहित र यो लाहाछापबाट सिलवन्दी गरिएको, यो खोलौं है । भारतको लागि शाही नेपाली राजदूत भेष बहादुर थापाले पठाउनु भएको यो पुलिन्दा खोलेर हेर्दा यसमा एउटा टेपरेकर्ड क्यासेट चक्का प्राप्त भयो । यो पुलिन्दा हामीले समितिका अध्यक्ष सम्माननीय प्रधानन्यायाधीशज्यू र हाम्रा अन्य कर्मचारीहरुको रोहवरमा खोल्यौं । र यसलाई हामीले अव अध्ययन गर्ने क्रम शुरु भयो ।

१९ गते राजदरवारमा घटेको घटनाका सम्बन्धमा हामीले बुझ्नु पर्ने देखिएकी देवयानी राणा हाल प्रवास भारतमा रहेको बुझिएको र देवयानीको माता पितालाई बुझ्दा उनले यस सम्बन्धमा आफूलाई थाहा भएको कुरा भन्न सक्ने स्थिति देखिएको तर तत्काल नेपाल आउन सक्ने परिस्थिति नभएको भन्ने वताए पछि हामीले बुझ्नका लागि शाही नेपाली राजदूत भेषबहादुर थापालाई फोनद्वारा अधिकृत गरे अनुसार राजदूत थापाले यो टेपरिकर्ड उपलब्ध गराउनु भएको हो । उतार यस प्रकार छः-

नयाँ दिल्ली २०५८ साल जेष्ठ २९ गते वेलुका ८:१५ बजे नयाँ दिल्लीमा म डा. भेषबहादुर थापा शाही नेपाली राजदूत, नयाँ दिल्ली, तपाई देवीयानी राणासंग आजको दिनमा अहिले तपाईले आफ्नो नाम र परिचय दिन हुन अनुरोध गर्दछु ।

*देवयानीः* देवयानी राज्य लक्ष्मी राणा ।

*डा. भेषबहादुर थापा (शाही नेपाली राजदूत)ः*- आज श्री मोहनबहादुर सिलवाल, काउन्सेलर, शाही नेपाली दूतावासको रोहवरमा र डाक्टर जैन I would like to indentifing yourself .

*डा. जैनः* I'M Doctor S.K. Jain.

*राजदूतः* जसको रेखदेखमा सुश्री देवयानी राणा औषधि उपचार गर्न यहाँ हुनुहुन्छ । तपाईसंग, यही जेठ १९ गते शुत्रःवार राती नेपालमा राजदरवारमा घटेको घटना सम्बन्धमा केही प्रश्न गर्छु । यसको लागि गठित आयोगको निर्देशनमा म केही प्रश्नहरु सोध्न गएको छु । आफूले जान्नुभएको सवैकुराहरु राम्रोसंग भनिदिन हुन अनुरोध छ । अहिले दिल्लीमा तपाई के कारणले आउनु भएको र के गर्दै हुनुहुन्छ ?

*देवयानीः* मलाई सन्चो भएको छैन । अनि डाक्टर सावले (रुँदै)...... ट्रिटमेन्ट ......

*राजदूतः* माथि अधि उल्लेखित गरेको घटना बारे तपाईलाई के जानकारी छ ?

*देवयानीः* मलाई अरु यसको जानकारी छैन । थाहा पनि छैन । हुन सक्छ भनेर सोचेको पनि थिएन ।

*राजदूतः* तपाई र तत्कालीन श्री ५ युवराजाधिराजाको वीच सम्बन्ध थियो भन्ने बारे तपाईको के भनाई छ ?

*देवयानीः* (रुदै रुदै) ... व्यक्तिःगत हो त्यस्को बारे म कुरा गर्न चाहदीन (रुदै) ।

*राजदूतः* काठमाडौंको त्यो दिनको बेलुकी ८ र ९ बजेको वीचमा तपाई र तत्कालीन राजदरवारको लङ्गबाट तपाईसंग लामो वार्ता भएको कुरो लगबाट देखियो । त्यसबारे तपाईले संझेःर भएका कुराहरु कोसंग वार्ता भएको हो के वार्ता भएको हो । त्यसमा प्रकाश पारिदिन हुन अनुरोध छ ।

*देवयानीः* मैले सम्झे अनुसार मलाई युवराजाधिराज सरकारले ८ बजेपछि फोन गरिवक्सेको थियो । त्यो बेला हुकुम भयो । मलाई आइतवार नेपालमा हुने राष्ट्रिय खेलकूद समारोहको इनागुरेसनको लागि म आउदै छु कि छैन भनेर हुकुम भयो । मोवाइलमा फोन गरिवक्सेको थियो । मेरो मोवाइलमा (रुँदै...) मोवाईल क्लियर आइराखेको थिएन । सरकार, मैले कुरा बुझिःन भनें । फेरि सोधिवक्स्यो । म जवाफ दिनुभन्दा अगाडि फोन राख्दिबक्स्यो । त्यसपछि मैले सरकारको मोवाइलमा फोन लगाएँ, घण्टी गयो । गयो, गयो, गयो, सरकारले फोन उठाई वक्सेन । अनि जव सरकारले फोन उठाई वक्सदैनथ्यो, अटोमेटिकल्ली त्यसको चाहि डिउटीको एडिसीलाई ट्रान्सफर हुन्थ्यो पहिला जस्तो । ट्रान्सफर भयो । ट्रान्सफर हुने बेलामा डिउटी एडिसीले फोन उठायो । अनि मैले उहाँलाई भने सरकारको स्वर अलिकति लरवराई वक्सीरहेको छ, गाथमा आराम छैन कि ? .... लाग्यो भने मैले उहाँलाई एकचोटि माथि खोपीमा गएर हेर्नु हुन्छ कि भनेर मैले रिक्वेस्ट गरें । पछि फोन राखें । फेरि एकछिन सरकारको फोन आयो । अनि हुकुम भयो मलाई भोलि विहान मात्र तिमीलाई फोन गर्छु । गुडनाईट भनेर हुकुमभो । अनि मैले पनि गुड नाईट भने । त्यसपछि फेरि हुकुम भयो । अव म सुत्न लागेको छु है । म भोलि विहान फोन गर्छु, गुडनाइट भनी फेरि राखिवक्सियो ।

*राजदूतः* तपाईको तत्कालीन श्री ५ युवराजाधिराजसंग कुरा भएको बेलामा तपाईले उहाँलाई संधै जस्तो पाउनु भयो या विशेष फरक केही देखियो, सुनियो ?

*देवयानीः* सरकारको स्वर लडवडाई बक्सी रहेको थियो । अघि जस्तो अघि मैले भने अनुसार मलाई लाग्यो सरकारको गाथमा आराम छैन कि के भयो भनेर । त्यसैले (रुँदै रुँदै..) एडिसीलाई कन्ट्याक्ट गर्दाखेरी माथि खोपीमा जानु हुन्छ कि भनेर मैले रिक्वेष्ट मात्रै गरेको हो । (रुदै...रुदै... खोक्दै..)

*राजदूतः* यो वाहेक उत्तः घट्ना बारे तपाईले अरु केही कुरा प्रकाश पार्न सक्ने छ वा छैन ?

*देवयानीः* मैले यो वाहेक अरु केही थाहा छैन । (रुदै रुदै सुक्क गर्दै)

*राजदूतः* धन्यवाद ।

*राजदूतः* डाक्टर जैन ............... देवयानी ........ ...........

*डाक्टरः* .........

*राजदूतः* यो टेप आज निर्देशानुसार माथि उल्लेख भएको प्रश्नहरु गरेर तयार गरिएको छ । यसलाई अब काठमाडौं पठाइने छ ।

**सुप्रिया शाह**

*समितिः* बैनी, अस्ती दरवारमा घटेको घटनाको बारेमा त यहाँलाई थाहा छँदैछ । त्यो घटनाको तथ्य सत्य बाहिर लिएर आउन भनेर हाम्रो समिति बनेको पनि थाहा छ । हामीले त्यही सत्य तथ्य पत्ता लगाउने सिलसिलामा हेर्दै जाँदाखेरी एउटा (कुनै अप्ठेरो नमान्होस् है ! गाह्रो मान्नुपर्ने, डराउनु पर्ने केही छैन; हामी तपाईजस्तै हौं) यो सिलसिलामा तपाईले प्रयोग गर्ने गरेको कति हो ? २७३९५ हो मोवाइलको ?

*जवाफः* हो ।

*समितिः* त्यो दिन ११ बजेर ९ मिनेट जाँदा तत्कालिन युवराजधिराजसंग कुरा भएको थियो यहाँको ?

*जवाफः* थियो ।

*समितिः* के कुरा भएको थियो सम्भःनुहुन्छ ?

*जवाफः* त्यस्तो विशेष केही कुरा भएको थिएन । उहाँको र मेरो टाइम टाइममा फोनमा कुरा भइरहन्थ्यो । अनि के छ ? कसो छ ? हवाजी भनेर त्यति मात्र ५/१० मिनेट जति कुरा भएको थियो होला । त्यही पनि म काममा थिएँ, त्यो बेला त ।

*समितिः* त्यस्तो कुनै विशेष ?

*जवाफः* अहँ ।

*समितिः* .... बारे कुरा, तपाईको पर्सनल कुरा भन्नु पर्दैन है ! पर्सनल कुराहरु हामी जान्न पनि खोज्दैनौं । तपाई फ्रेन्ड्ली रिलेसन हो ?

*जवाफः* हो ।

*समितिः* टेलिफोन आएपछि उठाउनै पर्‍यो ।

*जवाफः* त्यही त ।

*समितिः* त्यो दिन ११ बजे तपाईले उहाँसंग कुरा गर्दाखेरी कुनै नौलो अभिव्यक्तिःहरु त्यस्तो विशेष खालको मनस्थिति, मानसिकता अनुभव गर्नुभएको थियो तपाईले ?

*जवाफः* संधैजस्तो उस्तै हो ।

*समितिः* तपाईसित कुरा हुँदाखेरी बेला बेलामा frequently भइरहन्थ्यो कि कहिलेकाही हुन्थ्यो ?

*जवाफः* कस्तो के विषयमा भन्नु भएको हो ?

*समितिः* हैन केही होइन, मैले विषयमा सोध्न चाहेको होइन । तपाई जे भन्न सक्नु हुन्छ त्यो मात्रै भन्नुस, जे भन्न मिल्छ त्यो भन्नुहोस । सार ओपन गर्नु हुन्छ तपाईको । You have seen to say anything तर हामी बयान लिंदा वयानको विषय यो । के कुराकानीमा भेटघाट पनि हुन्थ्यो कि खाली टेलिफोनको वार्तालाप मात्र हुन्थ्यो ।

*जवाफः* पहिला पहिला भेटभाट हुन्थ्यो; अहिले आजकल थिएन भेटघाट ।

*समितिः* भेट नभएको कति भयो ?

*जवाफः* एक्ज्याक्ट्ली कति भयो त म भन्न सक्दिन । तर रिसेन्ट्ली चाहिं भएको छैन मेरो भेटघाट ।

*समितिः* भनेपछि युवराजाधिराजले यहाँसंग कुरा गर्दाखेरी त्यस्तो उहाँमा परिवर्तन भएको उहाँको पहिले पहिले तपाईसित जुनप्रकारले हुन्थ्यो त्यो कन्टिन्यू थियो कि थिएन ?

*जवाफः* कस्तो आधारमा भन्नु भएको ?

*समितिः* हैन आधार केही होइन । मैले त्यो दिनको कुनै अभिव्यक्तिः ?

*जवाफः* त्यो दिनको अभिव्यक्तिः केही पनि थिएन । नर्मल कुरा गरेर म बेलुकी आउँछु र फोन गर्छु सुद्ध पनि भनिवक्या थियो मलाई ।

*समितिः* अनि फोन आएन ?

*जवाफः* आएन । बेलुकी अब त्यो काण्ड भएछ ।

*समितिः* विशेष पहिले विवाद आदि इत्यादि विषयमा केही जानकारी थियो कि भन्ने हिसावले मात्रै यो ।

*जवाफः* नाई यो विषयमा त मलाई केही जानकारी छैन । नभएको कुरा हगि । जे होस तर प्रेन्डली रिलेसन चाहि हाम्रो थियो, TiMe to tiMe कुरा चाहि हुन्थ्यो । म डिनाई गर्दिन त्यो त ।

*समितिः* मतलब पारिवारिक सम्बन्ध स्थापित गर्ने हिसावले कसैको विषयमा केही कुरा गर्नुहुन्थ्यो कि भन्ने ?

*जवाफः* कस्तो पारिवारिक विषय ?

*समितिः* बैवाहिक जीवनमा कुनै मान्छेसंग कोहीसंग गर्ने कुरा आदि इत्यादि केही गर्नुहुन्थ्यो कि ?

*जवाफः* बैवाहिक जीवनको त्यस्तो त अब त्यही देवयानीसंगै गर्ने भन्ने वहाँको इच्छा थियो क्या रे । अब यो विषयमा तपाईले डिटेलमा सोध्ने हो भने त वहाँलाई सोधे राम्रो हुन्छ है मलाई होइन ।

*समितिः* तर तपाईसंग केही कुरा हुँदैन ? अथवा म कसैसंग गर्दैछु भन्ने बारेमा, हैन हैन देवायानीको बारेमा ?

*जवाफः* म संग त्यस्तो देवयानीको बारेमा म संग त्यस्तो अहँ । डिटेलमा कुराहरु त्यस्तो चाहि हुन्नथ्यो । देवायानीलाई नै सोधे राम्रो हुन्छ किनभने वहाँ त पास्ट १३ बर्ष त बहासंग गर्छु भनेर १/२ बर्षसम्म त वहाँसंगै राम्रो रिलेसन थियो क्यारे ।

*समितिः* यस विषयमा केही जानकारी ?

*जवाफः* (बुझिएन ..................) उहाँ संगै हो उहाँसंगै तपाईहरुले सोध्यो भनेदेखि केही थाहा हुन्छ कि वहाँलाई मसंग चाहिने कुरा हुन्थ्यो तर अब यो विषयमा यस्तो अचानकमा यस्तो काण्ड हुने यस्तो चाहिने मलाई अहँ ।

*समितिः* कुनै लक्षण थिएन त्यो दिनको कुराकानीमा ?

*जवाफः* थिएन । अहँ अहँ कुनै लक्षण थिएन ।

**सहसेनानी माधव भण्डारी (क्याप्टेन)**

*समितिः* के नाम यहाँको ?

*जवाफः* क्याप्टेन माधव भण्डारी सह सेनानी ।

*समितिः* राजदरवारमा काम गर्नु हुन्छ ?

*जवाफः* हजुर ।

*समितिः* एउटा निकासी फाराम रहेछ, त्यसमा कमाण्डो एम-१६, ए-२, ५.५६ ....... यो पाँच थान बन्दुक र अरु दश वटा आइटम सामानहरु ल्याएको रहेछ । यो कसले बुझेको हेरेर केही भन्न सक्नु हुन्छ कि ?

*जवाफः* यो हतियार यो एक चोटी ट्रेकिङ्ग हुन्छ नी युवराजाधिराज सरकारको समयमा मेरो यूनिट पतिले मलाई आदेश भए अनुसार तत्कालिन समयमा आदेश भए अनुसार पहिला निकासि फारम अघि यो सो सामान ल्याउनु भनेर मलाई तपसील बमोजिमको सामान ल्याउनु भनेर मलाई आदेश भयो । यो अनुसार मैले गएर यो सामानहरु बुझेर आएको ...........

*समितिः* त्यस पछि त्यो सामान के भयो ?

*जवाफः* मैले त्यो सामान कोतमा ल्याएर बुझाएँ आफ्नो यूनिट पतिलाई बुझाएँ ।

*समितिः* फेरी फिर्ता बुझाउनु भयो ?
*जवाफः* मैले .......... कोत खाना छ नी त्यहाँबाट बुझेर आफ्नो कोतमा बुझाएँ ।

*समितिः* आर्मि हेडक्वाटरबाट आफ्नो कोतमा बुझाउनु भयो ?
जवाफः यो आर्मि हेडक्वाटर ट्रकिङ्गको टाइममा हतियार माग भयो । माग भए अनुसार मलाई यूनिटले गएर बुझेर ल्याउनु भनेर खटायो, मैले त्यो सामानहरु त्यो हतियार ल्याउने कुरा त चिफ साहेबको सही भएको कागजपत्र लिएर गएर बुझेर ल्याएँ पछि यूनिटमा ल्याए पछि यूनिटमा हाम्रो कोत हुन्छ । त्यो कोतमा बुझाएँ ।

*समितिः* कोतमा बुझाउनु भयो ?
*जवाफः* हजुर, त्यो अब कामको शिलशिलामा प्रयोग भयो । खाली ल्याउने एउटा अथेनिटिक अफिसर हतियार ल्याउँदा अफिर खाली त्यो ल्याउने काममा मलाई प्रयोग गरिएको हो ।

*समितिः* अनि त्यो उतापट्टि एडिसि अफिसतिर गएको हतियार हो कि होइन ?
*जवाफः* यो त्यस पछि ट्रेकिङ्गको लागि प्रयोग भयो । त्यस पछि त्यो कहाँ गयो के भयो मलाई थाहा भएन ।

*समितिः* ट्रेकिङ्गमा को को गए ?
*जवाफः* यूवराज सरकार भयो, युवराज सरकार, त्यो टाइममा निराजन सरकार पनि सवारी भएको छ । पारस सरकार पनि सवारी भएको छ । हाम्रो यूनिटको दुई जना अफिसर साहेबहरु छ । एडिसि साहेबहरु र अरु केटाहरु पनि ।

*समितिः* टेकिङ्ग कता ?
*जवाफः* यो दुई वर्ष यतातिर नाम्चे, सगरमाथा वेसि क्याम्पतिर, शंखुवासभा पाँचथरबाट उता नाम्चे तिर भएको थियो ।

*समितिः* तपाईको त्यो भूमिका भनेको केवल त्यो हतियार बुझेर कोतमा बुझाउने मात्रै हो कि अरु पनि भूमिका हुन्छ ?
*जवाफः* मेरो भूमिका मलाई त्यो दिनको डूटि अफिसर जो छ हैन त्यो हतियार ल्याउन त चिफ साहेबको आदेश नभै हुँदैन । त्यो चिफ साहेब जुन लेटर हुन्छ नी त्यो लेटर बमोजिम गएर त्यो हतियार ल्याएर आफ्ना यूनिटमा बुझाएँ ।

*समितिः* चिफ साहेब भन्नाले को ?
*जवाफः* आर्मिको चिफ ।

*समितिः* आर्मिको चिफ को ?
*जवाफः* आर्मिको चिफ यो बेलामा २०५६ साल भनेपछि हालकै चिफ साहेब नाम ?

*समितिः* नाम ?
*जवाफः* प्रज्वल शमशेर ।

*समितिः* शाही नेपाली सेनाबाट बुझेर यतापट्टि कोतमा राख्नेसम्मको तपाईको भूमिका ?
*जवाफः* हजुर, हजुर ।

*समितिः* त्यसपछि त्यो हतियार कहाँ जान्छ ? के जान्छ ? तपाईलाई जानकारी हुन्छ कि हुँदैन ?
*जवाफः* यो हुँदैन । यो छुट्टै डिपार्टमेण्ट छ उसलाई मात्र जानकारी हुन्छ ।

*समितिः* यता यो कोतमा लिएर आइसके पछि कता लाने ? के लाने ? कसको आदेशमा हुन्छ ?
*जवाफः* यो त्यहाँको हतियारहरु हाम्रो यूनिट पति हुनुहुन्छ । अहिले अब केशर महत करसाहेब होइबक्सन्छ । यो भन्दा अघि खड्ग गुरुङ्ग करसाहेब हुनुहुन्छ । उहाँको आदेश अनुसार चल्छ । हाम्रो कोतमा के छ भने सरकारहरुका हतियार पनि हुन्छ । हाम्रो यूनिटको हतियार पनि हुन्छ । हाम्रो यूनिटको जून अथेनिटिक हतियार हुन्छ नि यति राख्न पाउने भन्ने हतियार र सरकारको हतियार पनि हुन्छ । त्यस अवस्थामा सरकारहरु कहिलेकाँही आएर फाइरिङ्ग गर्नको लागि यूनिटबाट अब विना यो लिखित मौखिक नै यो फलानो हतियार देउ भनेर लैजाने प्रचलन पनि छ ।

*समितिः* अनि त्यो लगिसके पछि सरकारले फेरी कोतमा राख्ने प्रचलन छ कि ? त्यो लगेको हतियार खोपीमै प्रयोग गर्ने राख्ने के छ ?
*जवाफः* हाम्रो यूनिटको हतियार चाहिं अब हामी दिंदैनौं । अब सरकारहरुको हतियार प्लस अब यो ट्रान्जिट पिरियडको लागि आएको हतियार हो । कुनै सर्टेन्ट पिरियडको लागि आएको हतियार हो नि अब यूनिटको आफ्नो हतियार होइन । त्यो

चाहिने सरकारको मर्जि अनुसार हुन्छ । त्यसमा यूनिटले यूनिटको हतियार हो भने त्यसमा हामीले लिखित रुपमा के छ ? .......

*समिति:* त्यस्तोमा देखियो भने श्रेष्तामा देखियो भने त्यो हतियार कहाँ लग्यो ? के भयो ? कतै त्यहाँ दर्ता गर्ने, देखाउने, कैफियत जनाउने यस्तो चलन हुन्छ कि हुँदैन ?

*जवाफ:* हुन्छ, त्यो त हुन्छ ।

*समिति:* फलाना कहाँ गएको ?

*जवाफ:* फलाना कहाँ गएको , फलानाको आदेश अनुसार गएको , फलानाले बुझि लगेको , फलाना मितिमा लगेको भन्ने हुन्छ ?

*समिति:* सरकारहरुको प्रयोगको निम्ति गएकोमा पनि उल्लेख गर्ने चलन छ ?

*जवाफ:* सरकारहरुको पनि छ । त्यो हामीले बुझ्दा पनि फलानाको आदेश अनुसार, फलानो मितिमा , फलानाले ल्याएको हो भने श्रेष्तामा बुझिन्छ । लग्दाखेरी पनि सरकार आफैं आएर लगिबक्स्यो भने पनि फलाना मितिमा यो लगेको भनेर हामीले एडिसिहरुलाई गराउने चलन छ ।

*समिति:* जनाएर पठाउनु हुन्छ ?

*जवाफ:* हजुर ।

*समिति:* त्यसरी कोतबाट हतियार लिंदाखेरी यति दिनलाई ? यति समयको लागि भन्ने किटानी हुँदैन समयको ?

*जवाफ:* त्यो चाहिं हुँदैन ।

## ३. घटनाबाट मृत्यु हुनेहरुको घाउ चोटको स्थिति र मृत्युको कारण

### (क) श्री ५ महाराजाधिराज वीरेन्द्र वीरविक्रम शाहदेव

स्वर्गारोहण समय र स्थान:
२०५८ जेठ १९ गते शुक्रबार बेलुकी ९:१५ बजे वीरेन्द्र सैनिक अस्पताल, छाउनी पुऱ्याउँदा मृत घोषित ।

घाउ चोटको स्थिति:

(१) बायाँ कानबाट रगत बगेको,

(२) दायाँ कान र दायाँ malar prominance मा entry wound,

(३) बायाँ कान अगाडिको भाग (pre-auricular region) मा ५ से.मि. x ३ से.मि. को प्वाल परेको घाउ चोट,

(४) बायाँ कन्चटका हड्डीहरु टुक्रा टुक्रा भई छाला समेत च्यातिएको तथा रगत र गिदी बाहिर निस्किरहेको (Fracture of the skull (Compound-comminuted fracture of left temporal region with extrusion of brain matter and bleeding),

(५) बायाँपट्टि घाँटी र छाती छुट्याउने लामो हड्डी भएको भाग (left clavicular region) मा २ से.मि. x २ से.मि.को entry wound,

(६) बायाँ काखीको पछाडिपट्टिको भाग (lateral border of axilla) मा entry wound,

(७) दायाँ कुहिनामा धेरैवटा च्यातिएका घाउ (lateral 10 cm x 2 cm, medial 8 cm x 3 cm)

(८) बाहिरपट्टिको दायाँ कुहिनामा entry wound,

(९) दायाँ कुहिना लगायत पाखुराको हड्डी टुक्रा टुक्रा भई टुटेको (Badly comminuted fracture humerus including right elbow (comminuted fracture of distal part of right humerus including elbow joint)),

(१०) पेटको दायाँपट्टिको तल्लो भागमा २ से.मि. x २ से.मि. को भलतचथ धयगलम,

(११) ढाडको तल्लो भाग (lumbo-sacral region) मा १ से.मि. x १ से.मि.को entry wound ।

मृत्युको कारण:
टाउको (गिदी) लगायत धेरै ठाउँमा प्वाल परेका घाउहरु (Multiple Penetrating injuries including Brain) ।

**(ख) श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मीदेवी शाह**

स्वर्गारोहण समय र स्थानः
२०५८ जेठ १९ गते शुक्रबार बेलुकी ९:१५ बजे वीरेन्द्र सैनिक अस्पताल, छाउनी पुऱ्याउँदा मृत घोषित

घाउ चोटको स्थितिः
(१) टाउकोको पछाडिपट्टि हड्डीका टुक्राहरु बाहिर झुण्डिएको (Comminuted fracture of skull, large butter fly piece of bone dangling out (posteriorly)),
(२) गिदी क्षत-विक्षत भएको र बाहिर निस्किरहेको, ८० प्रतिशत गिदी नभएको (Brain matter distorted (pulp) and coming out, 80% of brain mass lost),
(३) धेरैवटा घाउ चोट लागि अनुहार विकृत भएको,
(४) निधारमा प्वाल परेको घाउ,
(५) आँखा वरिपरिको हड्डी फुटेको (Fracture of left orbit),
(६) चिउडोको हड्डीको देब्रेपट्टि टुटेको र छाला तथा मासु क्षत-विक्षत भएको,
(७) तल्लो ओंठमा सानो काटिएको घाउ,
(८) बायाँ कुम र छातीको बायाँपट्टिको माथिल्लो भागमा चारवटा entry wounds,
(९) छातीको बायाँपट्टिको भागको पछाडिपट्टि (left infra-scapular region) २ से.मि. x २ से.मि. साइजका ३ (तीन) वटा exit wounds ।

मृत्युको कारणः
टाउको (गिदी) लगायत धेरै ठाउँमा प्वाल परेका घाउहरु (Multiple Penetrating injuries including Brain) ।

**(ग) श्री ५ अधिराजकुमार निराजन वीर विक्रम शाह**

स्वर्गारोहण समय र स्थानः
२०५८ जेठ १९ गते शुक्रबार बेलुकी ९:२४ बजे वीरेन्द्र सैनिक अस्पताल, छाउनी पुऱ्याउँदा मृत घोषित ।

घाउ चोटको स्थितिः
(१) निधार र टाउकाको पछाडि (right occiput) मा २ से.मि. x १.५ से.मि. को entry wounds दुईवटा,
(२) Right occiput मा २ से.मि. x १.५ से.मि. को exit wound,
(३) टाउकाको बीच भाग (mid occiput) मा १ से.मि. x १ से.मि. को exit wound,
(४) दायाँ कानबाट रगत बगेको,
(५) दायाँ पाखुरामा entry wound,
(६) २ से.मि. x २ से.मि. को exit wound भई पाखुराको हड्डीको माथिल्लो भाग (head of right humerous) मा हड्डी टुक्रा टुक्रा भएर फुटेको,
(७) पेटको दायाँपट्टिको हड्डीको उठेको भागको पछाडिको भाग (right lumbar region over right iliac crest) मा entry wound,
(८) पेटको बायाँपट्टिको हड्डीको उठेको भाग (left anterio–superior iliac spines) मा ६ वटा exit wounds,
(९) पेटमा प्वाल परेको घाउ,
(१०) बायाँ तिघ्राको भित्रपट्टि छाला खुइलिएको (abrasion) ।

मृत्युको कारणः
टाउको (गिदी) लगायत धेरै ठाउँमा प्वाल परेका घाउहरु (Multiple Penetrating injuries including Brain) ।

**(घ) श्री ५ अधिराजकुमारी श्रुती राज्यलक्ष्मी देवी राणा**

स्वर्गारोहण समय र स्थानः
२०५८ जेठ १९ गते शुक्रवार वेलुकी ९.५५ बजे वीरेन्द्र सैनिक अस्पताल छाउनीमा।

घाउ चोटको स्थितिः
(१) वायाँ कुहिनामा नील,
(२) देब्रे पट्टीको नितम्बमा प्वाल परेको घाउबाट रगत बगिरहेको (Penetrating wound 1 cm x 1 cm, left gluteal fold with oozing of blood),
(३) पेट फूलेको (Abdominal distension) र Shock.

मृत्युको कारणः
प्वाल परेको घाउबाट अत्यधिक आन्तरिक रक्तश्राव (Exsanguinating Intraabdominal haemorrhage due to penetrating injury in the perinium)।

**(ङ) श्री ५ अधिराजकुमारी शान्ति राज्यलक्ष्मीदेवी सिंह**

स्वर्गारोहण समय र स्थानः
२०५८ जेठ १९ गते शुक्रवार वेलुकी ९.३५ बजे वीरेन्द्र सैनिक अस्पताल छाउनी पुऱ्याउँदा मृत घोषित।

घाउ चोटको स्थितिः
टाउको क्षतविक्षत भई पछाडिबाट गिदी निस्किएको (Skull shattered into pieces, brain tissue comming out from occiput)।

मृत्युको कारणः
टाउको (गिदी) लगायत धेरै ठाउँमा प्वाल परेको घाउ (Multiple Penetrating injuries including Brain)।

**(च) श्री ५ अधिराजकुमारी शारदा राज्यलक्ष्मीदेवी शाह**

स्वर्गारोहण समय र स्थानः
२०५८ जेठ १९ गते शुक्रवार वेलुकी ९.३० बजे वीरेन्द्र सैनिक अस्पताल छाउनी पुऱ्याउँदा मृत घोषित।

घाउ चोटको स्थितिः
घाँटीको वाँयापट्टी प्वाल परेका घाउहरु, वायाँ गालामा प्वाल परेका घाउहरु र चिउडोको हड्डीको वायाँ पट्टीको भाग टुक्रा टुक्रा भएको (Multiple penetrating injury left side of neck, left cheek with comminuted fracture left manadible)।

मृत्युको कारणः
घाँटी र अनुहारमा प्वाल परेका घाउहरु (Multiple Penetrating injuries neck and face)।

**(छ) श्री ५ शाहज्यादी जयन्ती राज्यलक्ष्मीदेवी शाह**

स्वर्गारोहण समय र स्थानः
२०५८ जेठ १९ गते शुक्रवार वेलुकी ९.३० बजे वीरेन्द्र सैनिक अस्पताल, छाउनी पुऱ्याउँदा मृत घोषित।

घाउ चोटको स्थितिः
(१) वायाँ कन्चटका हड्डीहरु टुक्राटुक्रा भएको र गिदी लतपतिएको।
(२) टाउकोको दायाँ पट्टीको माथिल्लो भाग (Right Parietal area) मा Entry wound
(३) वायाँ पाखुराका हड्डीहरु टुक्रा टुक्रा भई छाला तथा मासु पनि क्षतविक्षत भएको (Crushed injury with comminuted fracture of left fore arm)।

मृत्युको कारणः
टाउको (गिदी) लगायत धेरै ठाउँमा प्वाल परेका घाउहरु (Multiple Penetrating injuries including Brain)।

**(ज) कुमार खड्गविक्रम शाह**

स्वर्गारोहण समय र स्थान:
२०५८ जेठ १९ गते शुक्रवार वेलुकी ९.३५ बजे वीरेन्द्र सैनिक अस्पताल छाउनीमा।

घाउ चोटको स्थिति:
(१) दायाँ काखी (Right axilla) मा २ से.मि.ह २ से.मी.को प्वाल परेको घाउ।
(२) घुँडाको पछाडि पट्टीको भागमा (left popliteal region) मा २ से.मि. x ३ से.मी.को प्वाल परेको घाउ exit wound

मृत्युको कारण:
दाहिने छातीमा प्वाल परेको घाउ (Penetrating injury right chest)।

**(झ) श्री ५ महाराजाधिराज दीपेन्द्र वीरविक्रम शाह**

स्वर्गारोहण समय र स्थान:
२०५८ जेठ २२ गते सोमवार विहान ३.४५ बजे वीरेन्द्र सैनिक अस्पताल, छाउनीले निम्न व्यहोराको medical statement उल्लेख गर्दै मृत घोषित गरेको।

"His Majesty King Dipendra Bir Bikram Shah Dev developed progressive slowing of the heart this morning at 2:30 A.M. resuscitative measures were instituted. Despite these measures, cardiac arrest occurred at 3:30 A.M. from which His Majesty could not be revived.

Therefore His Majesty was declared dead at 3:45 A.M.

Dr. Upendra Prasad Devkota
Dr. Mrigendra Raj Pandey
Dr. Anjani Kumar Sharma
Brig Gen Dr. Khagendra Bahadur Shrestha
Col Dr. Achyut Prasad Sharma
Dr. Sushil Krishna Shilpakar "

घाउ चोटको स्थिति:
(१) टाउकाको वायाँ पट्टीको तल्लो भागमा सानो घाउचोट (Small wound left posterior part of temporal region)
(२) टाउकाको दायाँ पट्टीको कान पछाडिको भागमा ठूलो घाउ (Large wound right temporal region, inferior aspect)
(३) दुवै घाउबाट रगत, गिदी बाहिर निस्केको।

मृत्युको कारण:
टाउको (गिदी) मा प्वाल परेको घाउ (Penetrating injury of the brain)।

**(ञ) श्री धीरेन्द्र शाह**

स्वर्गारोहण समय र स्थान:
२०५८ जेठ २२ गते सोमवार वेलुकी ५.५७ बजे वीरेन्द्र सैनिक अस्पताल छाउनीमा।

घाउ चोटको स्थिति:

(१) दाहिनेपट्टीको छाती र घाँटी छुट्याउने तेर्सो हड्डीको बीच भाग (right mid clavicular region) मा भलतचथ धयगलम रहेको र ँचबअतगचभ समेत भएको ।
(२) छातीको पछाडि पट्टीको चेप्टो हड्डी भएको भाग (right scapular region) df exit wound रहेको र रगत निस्किएको ।
(३) दाहिने छाती भित्र रक्तश्राव भएको (Right haemothorax) ।

<u>मृत्युको कारणः</u>
छातीमा तथा घाँटीको मेरुदण्डमा प्वाल परेका घाउहरु (Adult Respiratory Distress syndrome due to severe penetrating chest injuries and septic shock due to Cervical spinal injury) ।

_

४. **<u>घटनाबाट पिडित घाईतेहरुको उपचार गराउँदाको अवस्थामा घाउ चोटको स्थितिः</u>**

_

**(क) <u>श्री ५ बडामहारानी कोमल राज्यलक्ष्मीदेवी शाह</u>**

(१) बायाँ छातीको अगाडिको भागमा च्यातिएको घाउ र छातीको पछाडि वायाँपट्टी समेत च्यातिएको घाउ (Gaping wound in left anterior chest wall and left scapular region),
(२) बायाँ पट्टीका करङ्गहरु टुटेका (Multiple rib fractures on left side),
(३) छातीको भित्र वायाँपट्टी रक्तश्राव (Left haemothorax),
(४) देब्रे फोक्सोको दुवै भागमा घाउहरु (Multiple lacerations of both lobes of left lung) ।

**(ख) <u>श्री ५ अधिराजकुमारी शोभा राज्यलक्ष्मीदेवी शाही</u>**

(१) अनुहारको बायाँ भागमा नील (Bruise left side of face),
(२) दायाँ नाडीको नशाबाट रगत बगिरहेको (Bleeding from lacerated radial artery right side),
(३) बायाँ हातमा च्यातिएका घाउहरु तथा औंठी लगाउने औंला (Ring finger) नभएको र कान्छी औंलाको टुप्पाको भाग समेत नभएको (Lacerated injury left hand with loss of ring finger and terminal phalanx of little finger) ।

**(ग) <u>कुमार गोरखशम्शेर जंगबहादुर राणा</u>**

(१) अनुहारमा नील (दुवै ओंठहरु) (Bruising of the face (both lips),
(२) घाँटीमा च्यातीएको घाउ (Lacerated injury of the neck),
(३) देब्रेपट्टी घाँटीको धमनी फुटेको (Left jugular tear),
(४) मुटुको बाहिरी परतमा प्वालहरु (Multiple penetrating injury pericardium) ,
(५) छातीको बीच भागमा धेरै radio opaque भौतिक वस्तुका टुक्राहरु (Multiple small radio-opaque foreign bodies centrally) (chest X-ray),
(६) मुटुको बाहिरी परतमा रगत जम्मा भएको (Haemopericardium),
(७) मुटुको बाहिरी परत च्यातिएको (Pericardial tear),
(८) मुटुको तल्लो दायाँ भाग च्यातिएको (Right ventricular laceration),
(९) मुटुको माथिल्लो दायाँ भाग च्यातिएको (Right atrial tear),
(१०) दायाँ हातको बुढी औंला काटिएको (हटाइएको) (Traumatic amputation of right thumb),
(११) दायाँ तिघ्रामा च्यातिएको घाउ (Laceration of right thigh),
(१२) दायाँ खुट्टाको बुढी औंलामा चोट (Injury right big toe) ।

**(घ) <u>श्रीमती केतकी चेष्टर</u>**

(१) आकस्मिक शल्य क्रिया (Emergency operation) भएको,

(२) दायाँ कुम तथा दायाँ पाखुराको माथिल्लो भागमा च्यातिएको घाउ, १० से.मी. x ७ से.मी. का हड्डी देखिएको (Deep lacerated wound over the right shoulder and proximal upper arm, 10 cm x 7 cm exposing bone pieces),

(३) देब्रे पाखुराको भित्रपट्टी ४ से.मी. ह ४ से.मी. को गहिरो च्यातिएको घाउ (Deep laceration, 4 cm x 4 cm left fore arm, volar aspect)।

## ५. भौतिक वस्तुहरुको विधिविज्ञान परीक्षण र विशेषज्ञको राय

### (क) बन्दूक, खोका, गोलीको परीक्षण र विशेषज्ञको राय

१. घटनास्थलमा निम्न अनुसारका बन्दुक र पेस्तोल फेला परेका छन् :-

(a) Factory made (USA) 5.56 mm. Caliber Colt M-16 A2 (commando) automatic rifle. (पोखरीको दक्षिण lawn मा फेला परेको हतियार)

(b) Factory made (Heckler and Koch, Germany) 9 mm. Caliber MP-5K automatic Sub-machine Gun. (विलियर्ड टेबुल छेउमा फेला परेको)

(c) Factory made (Austria) 9 mm. Caliber Glock Ges. m.b. H. Pistol. (विलियर्ड रुपमा विलियर्ड टेबुलको छेउमा फेला परेको श्री ५ अधिराजकुमार निराजन वीर विक्रम शाहको भनिएको पेस्तोल)

(d) Factory made (Austria) 9 mm. Caliber Glock Ges. m.b. H. Pistol. (तत्कालिन श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाहलाई घाइते अवस्थामा उठाइएको भनिएको ठाउँ छेउको पानीबाट निकालिएको भनिएको पेस्तोल)

(e) Factory made (Italy) 12 Bore Single Barrel shot gun.
5.56 mm. Caliber Colt M-16 A2 Rifle फेला परेको Lawn भन्दा दक्षिण पश्चिम बाटो छेउ कुनामा फेला परेको हतियार ।

२. माथि उल्लेख भएको सबै राइफल, पेस्तोल, बन्दुक Perfect working condition मा रहेको देखिन्छ ।

३. फेला परेको ४७ वटा Cartridges Cases 5.56 mm. Caliber Colt M-16 A2 (Commando) Automatic Rifle बाट Fire भएको देखिन आउँछ ।

४. घटनास्थलमा फेला परेका अन्य ३१ वटा मध्ये २९ वटा Cartridge Cases 9 mm. Caliber MP-5 k automatic Sub-mechine Gun बाट प्रहार (fire) भएको देखिन्छ । बाँकी २ वटा 9 mm. Caliber Glock Ges . m.b.H. पिस्तोलबाट २ वटा गोली फायर भएको Cartridge Cases फेला परेको देखियो ।

५. घटनास्थलमा फेला परेको एउटा गोली 9 mm. Caliber को बन्दूकबाट प्रहार भएको देखिन्छ । गोलीको आकार प्रकार विग्रिएको कारणबाट यही हतियारबाटै प्रहार भएको भनी किटानी गर्न सकिने अवस्था नभएको ।

६. 9 mm. Caliber Pestol/SMG live cartridges (नपड्काइएको कार्तुस) १५८ थान रहेको पाइएको छ ।

७. 5.56 mm. Caliber Colt M-16 A2 Rifle बाट misfire भएको १ थान कार्तुस फेला परेको छ ।

८. 5.56 mm. Caliber live Cartridges संख्या ४९ वटा फेला परेको छ ।

९. 12 Bore Shot gun Catridges 9 थान live फेला परेको देखिन्छ ।

१०. घटनास्थलमा गोलीको टुक्राहरु पनि फेला परेका छन ।

११. 7.62 mm. Caliber MFS (Made in Nepal) Rifle Cartridges थान १ जिउँदो (live) फेला परेको देखिन्छ ।

मिति २०५८।२।१९ गते शुक्रवार राती घटेको घटनास्थलमा यस शाही रक्षक सैनिक प्रहरीको उद्धार कार्यमा संलग्न फाइटिङ टोलीलाई सामेल गरी निजहरुले बोकेको इक्वीप्मेण्ट, हात-हतियार तथा म्यागेजिन चेक गर्ने निर्देशन भए बेमाजिम सामेल गरी सबै ईक्युपमेण्ट र एस.एल.आर. को म्यागेजिन चेक गर्दा उक्त टोलीले खडा आदेश बमोजिम रुजु गुल्मको चपटेको लागि बोकि लैजाने ७.६२ एस.एल.आर. को म्यागेजिनहरु मध्ये एउटा म्यागेजिन भुईमा खसेको र उक्त म्यागेजिन टिपेर पौंचमा राखी फिर्ता लगिएको थियो । उक्त भुईमा खसेको म्यागेजिनमा चेक गर्दा १५ (पन्ध्र) राउण्ड गोली हुनु पर्नेमा १४ (चौध) राउण्ड गोली मात्र भएको पाइएकोले सो एक राउण्ड गोली शाही रक्षक सैनिक प्रहरीबाट संलग्न फाइटिङ्ग टोलीबाट खस्न गएको व्यहोरा जानकारीको लागि अनुरोध गरिएको छ भनी महासेनानी केशवराज महतले प्रमुख सैनिक सचिवालयमा

२०५८।२।२९ मा पठाएको पत्र समेत प्रमुख सैनिक सचिवालयको २०५८।२।३० को पत्र साथ उच्चस्तरीय समितिलाई प्राप्त हुन आएको छ।

१२. वीरेन्द्र सैनिक अस्पतालबाट प्राप्त कुमार गोरख शम्शेरको शरीरबाट निकालिएको भनिएको टुक्रा वस्तु गोलीको टुक्रा भन्ने देखिन आएको छ ।

१३. तत्कालिन श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाहका पार्श्ववर्ती सह-सेनानी गजेन्द्रं बोहराले २०५३।१।२७ मा शाही रक्षक सैनिक प्रहरी कोतबाट निम्न हातहतियार बुझि लिएको राजदरवारबाट प्राप्त निकाशी फारमबाट देखिन्छ :

(क) लिंक पिस्तोल नं. ५५३३० को नाल एक
(ख) उक्त पिस्तोलको १५ राउण्ड जाने मेग्जिन गोटा एक
(ग) सोही पिस्तोलको १७ राउण्ड जाने मेग्जिन गोटा एक
(घ) उक्त पेस्तोलको रड, ब्रुस, पेस्तोलको केश १।१
"सामान लिने आवश्यता" को महलमा "काममा प्रयोग गर्ने" भन्ने उल्लेख भएको ।

१४. मिति २०५६।७।२८ मा शाही रक्षक सैनिक प्रहरी कोतबाट शाही पार्श्ववर्ती त्रिभूवन सदन राजदरवारबाट निम्न हात हतियार माग भइ निकाशी भएको देखिन्छ :
(क) 9 mm. MP-5 KA3 जर्मन गन नाल एक ।
(ख) उक्त Gun को मेग्जिन ५, सिलिङ १, क्याटलग १, स्पेशल केश १, राउण्ड १५०, साँचो ३, प्यारोल क्याप ४ थान ।

१५. शाही रक्षक सैनिक प्रहरी राजदरवारको २०५६।५।३१ को माग बमोजिम कोतखानाबाट निकाशी भई सह-सेनानी माधव भण्डारीले परीक्षण फायरिङ्गको लागि भनि निम्न सामानहरु बुझेको देखिन्छ :
(क) आर ०७३३ Commando M-16 A2 5.56 mm. नाल पाँच थान हतियार नं. क्रमशः A0074534, A0073943, A0073962, A0074301, A0074537
(ख) मेग्जिन ३० राउण्ड जाने १५ गोटा
(ग) सिलिङ वेभ ५, आयल बोतल ५, क्लिनिङ रड ५, क्लीलिङ्ग किट ५, होल्डर थैली ५, ब्रुस किट (वोर व्रुस र चेम्वर व्रुस) ५, व्रुस क्लीनिङ्ग ५, अप्रेटर्स स्यानुएल ५, हिट आई ३००० डे लाइट स्नाइपर २, अप्रेटर म्यानुअल २,

१६. श्री ५ अधिराजकुमार निराजन वीर विक्रम शाहका लागि भनि प्रमुख सैनिक सचिवालय राजदरवारको माग बमोजिम निकाशा भएको भन्ने २०५५।१०।२२ को रथी शान्तकुमार मल्ल प्रमुख सैनिक सचिवले का.मु. मुख्य सुरक्षा अधिकृत शा.र.सै.प्र.राजदरवारलाई लेखेको पत्रबाट देखिन्छः
(क) ९ एम.एम. जि. १९ ग्लक नं. वाई वाई ३३४ को पिस्तोल थान एक
(ख) ९ एम.एम. जि. १९ को १५ राउण्ड जाने मेग्जिन गोटा दुई
(ग) ९ एम.एम. जि. १९ को सफा गर्ने रड ब्रुस गोटा एक
(घ) ९ एम.एम. जि. १९ को मेग्जिन लोडर गोटा एक
(ङ) प्लाष्टिक मेग्जिन गोटा एक
(च) प्लाष्टिकको कम्मरमा भिर्ने होल्स्टर गोटा एक
(छ) प्लाष्टिकको क्यान्भस पिस्तोल होल्स्टर गोटा एक
(ज) प्लाष्टिकको क्यान्भस मेग्जिन होल्स्टर गोटा एक
(झ) पिस्तोलको केस गोटा एक
(ञ) पिस्तोलको बाल राउण्ड गोटा एकसय

१७. हातहतियार सम्बन्धमा सम्बन्धित विशेषज्ञहरुले दिएको रायको प्रति अनुसूचीमा समावेश गरिएको छ।

(ख) **रगत, दाँत, सिग्रेट आदि चिजवस्तुको रसायनिक परीक्षण**

नमुनाको विवरण (Description of Samples)

१. Teeth along with muscle kept in an envelope, labelled as “स्व. श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवीशाहको भनिएको दाँत र बंगाराको टुक्राहरु स्थान त्रिभुवन सदनको मेन भऱ्याङ”,

२. (a) Stained blood kept in an envelope, labelled as “स्व. श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाहको भनिएको भऱ्याङमा रहेको रगत”

(b) Stained cotton thread kept in an envelope labelled as “स्व. श्री ५ महारानी एवेश्वर्य राज्यलक्ष्मी देवी शाहको भनिएको भऱ्याङमा रहेको रगत”

३. Stained cotton thread kept in an envolope, labelled as “स्व. श्री ५ महाराजाधिराज दीपेन्द्र सरकारको शरीर रहेको भनिएको पोखरीको बीच बाटोबाट उठाइएको रगतको दाग जस्तो देखिने टाटा”

४. A stained ash colored coat, kept in an enveloped, labelled as “बिलियर्ड बैठकमा बोर्डबाट उत्तर-पूर्व भूइमा रहेको डा० राजीव शाहीको भनिएको चेक कोट थान-१”

५. A stained nepali cap and spectacles kept in an envelope, labelled as “बिलियर्ड बैठकमा बिलियर्ड बोर्डको उत्तर-पूर्वपट्टी नजिक भूइमा रहेको डा० राजीव शाहीको भनिएको चेक कोट सँगै रहेको श्री ५ महाराजाधिराज वीरेन्द्र वीरविक्रम शाहदेवको भनिएको टोपी थान १ र चश्मा थान-१”

६. A stained nepali cap and spectacles kept in an envelope, labelled as “बिलियर्ड बैठकमा बिलियर्ड बोर्डको नजिक उत्तरपट्टी म्याटमाथि रहेको रगत लागेको धीरेन्द्र शाहको भनिएको टोपी थान १ र चश्मा थान-१”

७. A stained nepali cap and black coloured coat kept in an envelope, labelled as “बिलियर्ड बैठकमा विलियर्ड बोर्डको नजिक पूर्वपट्टी भूइमा म्याटमा रहेको कुमार गोरखशम्शेरको भनिएको कालो कोट थान एक र टोपी थान-१”

८. A stained spectacles, kept in an envelope, labelled as “हाल बडामहारानी श्री ५ कोमल राज्य लक्ष्मी सरकारको भनिएको ठूलो सोफासेट नजिक बैठक भूइमा रहेको चश्मा थान-१”

९. Dried blood like substance kept in an envelope, labelled as “कुमार खड्गविक्रम शाहको टोपी नजिक पाप्रा परेको रगत लागेको कार्पेटको टुक्रा”

१०. A stained nepali cap (भादगाउँले टोपी)and spectacles kept in an envelope, labelled as “बारको भुइ कार्पेटमा रगतको टाटा नजिक रहेको कुमार खड्गविक्रम शाहको भनिएको कालो टोपी थान १ र चश्मा थान-१”

११. a) A spectacles kept in an envelope, labelled as “विलियर्ड बैठक पूर्व भुईमा रगतको टाटा नजिक रहेको सनाखत नभएको चश्मा थान-१”

b) Stained blood kept in an envelope, labelled as “विलियर्ड बैठक पूर्व भूइमा टाटाबाट उठाइएको रगत जस्तो पदार्थ”

१२. A golden colored cigarette case envelope, labelled as “विलियर्ड बैठकको विलियर्ड बोर्ड नजिक उत्तरपूर्वपट्टी म्याटमा रहेको सुनौलो रंगको सिगरेट केश उक्त केशमा शिखर खिल्ली-१३”

१३. A cigarette butt "Marked 555" kept in an envelope, labelled as “बिलियर्ड बोर्ड मुनि रहेको ५५५ (ट्रिपल ५) सिगरेटको टुक्रा थान-१”

१४. A cigar pipe with cigarette butt marked Cartier kept in an envelope, labelled as “बिलियर्ड बैठकको सोफा नजिक राउण्ड टेबुलमा रहेको सिगार पाइप थान १ र सो पाइपमा रहेको सिगरेटको ठुटा थान-१”

१५. A hand fan kept in a cotton bag, labelled as “स्व. श्री ५ बडामहारानी सरकारको भनिएको हाते पंखा थान-१”

१६. A cigarette packet (Trade mark cartier vendome lights) and a golden colored lighter, labelled as: “बिलियर्ड बैठक सोफा नजिक राउण्ड टेबुलमा रहेको सिगरेट केश (cartier नामको Vendome) मार्क भएको सिगरेट वट्टा र गोल्डेन रंगको लाइटर थान-१”

१७. A pair of stained black boots size – 7, kept in a polythene bag, labelled as "His Majesty king Deependra Bir Bikram Shah Dev."

१८. (a) A stained army colour jacket length 86 cm.

(b) A stained army colour trouser length 100 cm.

(c) A stained like yellowish tissues taken from exhibit no. 18b
(d) A stained army colour vest length 70 cm.
(e) A pair of black clolur socks marked NIKE, length 39 cm.
(f) A pair of black clolur leather gloves, length 19 cm.

Exhibit nos. 18a, 18b, 18c, 18d, 18e & 18f were kept together in a polythene bag and labelled as "His Majesty king Deependra Bir Bikram Shah Dev".

तत्कालिन श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाहलाई २०५८।२।१९ को घटनामा परी उपचारका लागि अस्पताल ल्याउँदा पहिरी राखेको कपडा चिजवस्तु भनी कालो आर्मी बुट एक जोर, आर्मीको क्यामफलाइज (कम्ब्याट) ज्याकेट पाइन्ट, छालाको कालो पञ्जा एक जोर, कालो मोजा एक जोर र क्यामफलाइज भेस्ट एक वीरेन्द्र अस्पताल छाउनीको २०५८।२।२८ को पत्रसाथ प्राप्त हुन आएको सामानलाई उपरोक्त प्रकरण 17, 18a, 18b, 18c, 18d, 18e, 18f मा उल्लेख गरी परीक्षण गराइएको।

१९. (a) A stained reddish colour Sari, length 490 cm. (including torn piece).
(b) A stained red colour torn Blouse.
(c) A single stained pink colour sock.

Exhibit nos. 19a, 19b & 19c were kept together in a polythene bag and labelled as "Her Majesty Queen Aishorya Rajya Laxmi Devi Shah".

श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाहलाई २०५८।२।१९ को घटनामा परी उपचारका लागि अस्पताल ल्याउँदा पहिरी राखेको कपडा चिजबस्तु भनी रातो बुट्टे सारी, रातो ब्लाउज र छाला रङको मोजा वीरेन्द्र अस्पताल छाउनीको २०५८।२।२८ को पत्र साथ प्राप्त हुन आएको सामानलाई उपरोक्त प्रकरण 19a, 19b, 19c मा उल्लेख गरी परीक्षण गराइएको।

२०. Four Cigarette butts marked as (SHIKHAR) kept in a polythene packet labelled as "बारको उत्तरीभागबाट उठाइएको चुरोटका ठुटाहरु"

२१. Two Cigarette butts marked as "Marlboro" and "555" respectively kept in a polythene packet labelled as "चुरोटका ठुटाहरु बार अगाडीबाट"

**मृतक एवं घाइतेहरुको रगत समूह (Blood Group)**
**राजदरवारबाट प्राप्त जानकारी अनुसार**

| क्र.सं. | नम | उमेर | रक्त समूह |
|---|---|---|---|
| १. | श्री ५ महाराजाधिराज वीरन्द्र वीर विक्रम शाह | ५६ | AB+ |
| २. | श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाह | ५२ | B+ |
| ३. | श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाह | ३० | B+ |
| ४. | श्री ५ अधिराजकुमार निराजन वीर विक्रम शाह | २३ | A+ |
| ५. | श्री ५ अधिराजकुमारी कोमल राज्यलक्ष्मी देवी शाह | ५० | B- |
| ६. | श्री ५ अधिराजकुमारी श्रुती राज्यलक्ष्मीदेवी राणा | २५ | AB+ |
| ७. | कुमार श्री गोरखशम्शेर जबरा | ३२ | AB+ |
| ८. | श्री ५ अधिराजकुमारी शान्तिराज्य लक्ष्मी देवी सिंह | ६० | AB+ |
| ९. | श्री ५ अधिराजकुमारी शारदा राज्य लक्ष्मीदेवी शाह | ५८ | A+ |
| १०. | कुमार श्री खड्गविक्रम शाह | ५८ | O+ |
| ११. | श्री ५ अधिराजकुमारी शोभा राज्यलक्ष्मी देवी शाही | ५२ | A+ |
| १२. | श्री ५ शाहज्यादी जयन्ती राज्यलक्ष्मी देवी शाह | ५५ | B+ |
| १३. | श्री धीरेन्द्र शाह | ५१ | AB+ |
| १४. | श्री केतकी चेष्टर | ५३ | B+ |

**Details of examination:**

The samples were analyzed by Benzidine Test for screening of blood, Simple Gel Diffusion test for origin and Absorption-Elution technique for dry blood grouping. Starch-Iodine test for saliva identification and Absorption-Inhibition technique for saliva grouping.

| S.No. | Benzidine test | Saliva test | Origin | Grouping | Remarks |
|---|---|---|---|---|---|
| 1. | Positive | … | Human | "B" | |
| 2a. | Positive | … | Human | "B" | |
| 2b. | Positive | … | Human | "B" | |
| 3. | Positive | … | Human | "B" | |
| 4. | Positive | … | Human | "AB" | |
| 5. | Positive | … | Human | "AB" | |
| 6. | Positive | … | Human | "AB" | |
| 7. | Positive | … | Human | "AB" | |
| 8. | Positive | … | Human | … | Inconclusive result |
| 9. | Positive | … | Human | … | Inconclusive result |
| 10. | Positive | … | Human | "A" | |
| 11.a | Negative | … | … | … | |
| 11.b | Positive | … | Human | "A" | |
| 12. | Negative | … | … | … | |

| | | | | | |
|---|---|---|---|---|---|
| 13. | … | Present | … | "B" | Saliva Present |
| 14. | … | Present | … | "B" | Saliva Present |
| 15. | Negative | … | … | … | |
| 16. | Negative | … | … | … | |
| 17. | Positive | … | Human | … | Insufficient stain. |
| 18.a | Positive | … | Human | "B" | |
| 18.b | Positive | … | Human | "B" | |
| 18.c | Positive | … | Human | "B" | |
| 18.d | Positive | … | Human | "B" | |
| 18.e | Negative | … | … | … | |
| 18.f | Positive | … | Human | "B" | |
| 19.a | Positive | … | Human | "B" | |
| 19.b | Positive | … | Human | "B" | |
| 19.c | Positive | … | Human | "B" | |

Opinion:

1. Exhibit nos. 1, 2a, 2b, 3, 4, 5, 6, 7, 8, 9, 10, 11b, 17, 18a, 18b, 18c, 18d, 18f, 19a, 19b & 19c were stained by human blood.
2. Exhibit nos. 10 & 11b were of "A" Blood group.
3. Exhibit nos. 4, 5, 6&7 were of "AB" Blood group.
4. Exhibit nos. 1, 2a, 2b, 3, 18a, 18b, 18c, 18d, 18f, 19a, 19b & 19c were of "B" Blood group.
5. Blood grouping of exhibit nos. 8 & 9 could not be confirmed due to inconclusive result.
6. Exhibit no. 17 could not be confirmed due to insufficient stain.
7. Blood could not be detected on exhibit nos. 11a, 12, 15, 16 & 18e.
8. Saliva was detected on exhibit nos. 13 & 14 having "B" blood group.

घटनास्थलमा फेला परेका रगत लागेका चिज बस्तुको विधि विज्ञानको प्रविधि र तरिका बमोजिम संकलन गर्ने कार्यका लागि सम्बन्धित विशेषज्ञहरु स्वयंलाई घटनास्थलमा लगि नमुना संकलन गरिएको थियो। यसरी संकलित चिजबस्तुको वैज्ञानिक परीक्षण केन्द्रीय प्रहरी वैज्ञानिक शालाका सम्बन्धित विषयका विशेषज्ञ प्रहरी नायव उपरीक्षक राजेशकुमार लाल कर्ण र एल. वी. धामीले गर्नु भएको थियो । यसप्रकार गराइएको परीक्षणबाट देहाय बमोजिमको नतिजा देखा परेको छ ।

१. “नमुना विवरण शीर्षकको प्रकरण 1, 2a, 2b, 3, 4, 5, 6, 7, 8, 9, 10, 11b, 17, 18a, 18b, 18c, 18d, 18f, 19a, 19b, 19c मा उल्लेख भएका चिज बस्तुमा लागेका सबै मानव रगत हुन् ।”

२. घटनास्थलको बारको भुई कार्पेटमा रगतको टाटा नजिक रहेको कुमार खड्ग विक्रम शाहको भनिएको भादगाउँले कालो टोपीमा लागेको रगत र विलियार्ड बैठक पूर्व भूइमा टाटाबाट उठाइएको रगत जस्तो पदार्थ “A” समूहको रगत हो।

कुमार खड्ग विक्रम शाहको रगत समूह “O" समूहको देखिँदा “A” समूहको रगत भएका श्री ५ अधिराजकुमार निराजन वीर विक्रम शाह, श्री ५ अधिराजकुमारी शारदा राज्यलक्ष्मी देवी शाह, श्री ५ अधिराजकुमारी शोभा राज्यलक्ष्मी देवी शाह मध्ये कसैको रगतको छिटा पर्न गएको देखिन आउँछ ।

३. नमूना विवरण शीर्षकको प्रकरण ४, ५, ६, ७ मा उल्लेख भएको देहाय बमोजिमको चिजबस्तुमा लागेको रगत “AB” समूहको रगत देखिन्छः

(क) विलियर्ड बैठकमा बोर्डबाट उत्तरपूर्व भूइमा रहेको डा० राजीव शाहीको भनिएको चेक कोट
(ख) विलियर्ड बैठकमा बिलियर्ड बोर्डको उत्तरपूर्व पट्टी नजिक भूइमा रहेको डा० राजिव शाहीको भनिएको चेक कोट सँगै रहेको श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको भनिएको टोपी एक थान र चश्मा
(ग) विलियर्ड बैठकमा विलियर्ड बोर्डको नजिक उत्तरपट्टी म्याटमाथि रहेको रगत लागेको श्री धीरेन्द्र शाहको भनिएको टोपी एक थान र चश्मा
(घ) विलियर्ड बैठकमा विलियर्ड बोर्डको नजिक पूर्वपट्टी भुईमा म्याटमा रहेको कुमार गोरखशम्शेरको भनिएको कालो कोट एक थान र टोपी एक थान

मृतकहरुमध्ये श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव, श्री ५ अधिराजकुमारी श्रुती राज्यलक्ष्मी देवी राणा, कुमार गोरखशम्शेर ज.ब.रा., श्री ५ अधिराजकुमारी शान्ति राज्यलक्ष्मी देवी सिंह , श्री धीरेन्द्र शाह समेतको रगत समूह “AB” देखिएको छ।

४. नमूना विवरण शीर्षकको प्रकरण 1, 2a, 2b, 3, 18a, 18b, 18c, 18d, 18f, 19a, 19b, 19c मा उल्लेख भएको देहाय बमोजिमको चिजबस्तुमा लागेको रगत “B” समूहको रगत देखिएको छ ।

(क) श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाहको भनिएको दाँत र बंगाराको टुक्राहरु (त्रिभुवन सदनको मूल भऱ्याङबाट उठाइएको)
(ख) उल्लिखित भऱ्याङमा रहेको रगत
(ग) तत्कालिन श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाहको शरीर रहेको भनिएको पोखरीको बीच बाटोबाट उठाइएको रगतको दाग जस्तो देखिने टाटा
(घ) ८६ से.मी. लामो आर्मी रङ्गको ज्याकेटमा लागेको रगत
(ङ) १०० से.मी. लामो आर्मी रङ्गको पाइन्टमा लागेको रगत र सोही पाइन्टमा फेला परेको Yellowish tissues.
(च) ७० से.मी. लामो Army colour vest मा लागेको रगत
(छ) १९ से.मी. लामो एकजोडी कालो रङ्गको gloves (पञ्जा)
(ज) रगत लागेको ४९० से.मी. लामो रातो रातो रङ्गको साडी
(झ) रगत लागेको रातो रङ्गको चोलो
(ञ) एक ठाउँमा मात्र रगत लागेको गुलावी रङ्गको मोजा

मृतकहरुमध्ये श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाह, तत्कालिन श्री ५ युवराजधिराज दीपेन्द्र वीर विक्रम शाह, श्री ५ शाहज्यादी जयन्ती राज्यलक्ष्मी देवी शाहको रगत समूह पनि “B” नै देखिएको छ।

५. नमुना वीवरण शीर्षकको प्रकरण ८, ९, १७ मा उल्लेख भएको चश्मा, कार्पेटको टुक्रा र तत्कालिन श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाहको भनिएको बुटमा देखिएको रगतको दागको मात्रा परीक्षणको लागि अपर्याप्त भएको कारण जनाई सो रगत कसको हो भन्ने एकीन परीक्षण राय दिन नसकिने व्यहोरा उल्लेख भइ आएको पाइयो। विवरण नं. १७ मा उल्लेख भएको रगत “मानव रगत” भन्ने सम्म एकीन भएको भन्ने विशेषज्ञको रायबाट देखिन्छ ।

६. नमुना विवरणको प्रकरण 11a, 12, 15, 16 र 18e मा उल्लेख भएको चश्मा, शिखर चुरोट, हाते पंखा, Cartier नामको सिगरेट केश र लाइटर तथा ३९ से.मी. लामो NIKE मोजा एक जोर समेतमा रगत लागेको नपाइएको ।

७. नमुना विवरणको प्रकरण १३ र १४ मा उल्लेख भएको विलियर्ड बोर्ड मुनी रहेको ५५५ सिगरेटको टुक्रा (ठुटो) थान १ र विलियर्ड बैठकको सोफा नजिक राउण्ड टेबुलमा रहेको सिगार पाइप र सो पाइपमा रहेको सिगरेटको ठुटामा Saliva (न्याल) पाइएको र परीक्षण बाट “B” समूहको रगत देखिएको ।

८. नमूना विवरणको प्रकरण २० र २१ मा उल्लेख भएको बारको उत्तरी भाग र बारको अगाडीबाट उठाइएको चुरोटका ठुटाहरु परीक्षण गर्दा Saliva पाइएको र "B", "A" र "AB" समूहको रगत देखिएको, साथै सो मा गरिएको अर्को परीक्षणबाट निकोटिन (Natural Alkaloid) भेटिएको तर अन्य लागू औषध तथा मनोद्दिपक पदार्थ नभेटिएको भन्ने विशेषज्ञको राय रहेको पाइयो ।

(ग) <u>हस्तरेखा परीक्षण र विशेषज्ञको राय</u>

घटनास्थल नारायणहिटी राजदरवारमा रहेका वन्दूक समेतका हातहतियारमा कुनै औंठाको छाप, हस्तरेखा आदि फेला परे सो लाई विधि विज्ञानको प्रविधि र तरिका बमोजिम संकलन गर्न र वैज्ञानिक परीक्षण गराउनका लागि २०५८।२।२६ गते घटनास्थलको अवलोकन गर्न जाँदा केन्द्रिय प्रहरी वैज्ञानिक प्रयोगशाला, औंठाछाप महाशाखा, काठमाण्डौका प्रहरी उपरीक्षक डम्वरप्रसाद लिम्बु समेतको टोलीलाई घटनास्थलमा लगिएको थियो। घटनास्थलको सुक्ष्म अध्ययन, अवलोकन गरी सो स्थानमा पाइएका विभिन्न हातहतियार तथा वस्तुहरुमा Chance Print खोजी गर्ने कार्य समेत भयो। यसपछि पुनः २०५८।२।२८ मा समेत विशेषज्ञ सहितको टोली घटनास्थलमा गई घटनास्थलमा प्राप्त मेग्जीनहरुमा Chance Print खोजी गर्ने कार्य गरियो। यसरी संकलित समस्त Chance Print Investigation गराउँदा केन्द्रिय प्रहरी वैज्ञानिक प्रयोगशाला, औंठाछाप महाशाखाका रेखा विशेषज्ञ प्रहरी उपरीक्षक डम्वरप्रसाद लिम्बुबाट देहाय बमोजिमको राय प्राप्त हुन आएको छ।

<u>विशेषज्ञको राय:</u>

१. नारायणहिटी राजदरवारको ए.डि.सी. कार्यालयबाट भित्र प्रवेश गर्दा बायाँपट्टि रहेको त्रिभुवन सदनको दक्षिणतिरको ढोकाको बाहिरी दायाँ किनारामा भेटिएको ९ एम.एम १९x१९ उल्लेख भएको एच.के. ५ एस.एम.जि.- ९ एम.एम. को मेग्जीनमा चान्स प्रिन्ट डेवलप (Chance Print Develop) गर्न टोकियो जापानको एस.के. (S.K.) कम्पनीको सेतो (Latent Fingerprint Developing White Powder) पाउडर, केमलहियर ब्रुस (Camel hair brush) रेविट हियर ब्रुस (Rabbit hair brush) प्रयोग गरी डेवलपिङ्ग(Developing) गरेर चान्स प्रिन्ट (Chance Print) खोजी (Searching) गरी हेर्दा उल्लेखित मेग्जीनमा मधुरो औंठाछाप देखिए तापनि त्यहाँ भएको रेखाका गुण (Ridge Characteristics) हरू विशेषज्ञद्वारा राय दिनलाई चाहिने आवश्यक संख्यामा प्रष्ट रुपले नदेखिएको हुँदा एकिन राय दिन नमिल्ने,

२. त्रिभुवन सदन हलभित्र रहेको विलियर्ड वोर्डसंगै भुईमा रहेको एच.के. ५ एस.एम.जि. ९ एम.एम.को १९x१६ मेग्जीनमा समेत उक्त विधि अपनाएर चान्स प्रिन्ट (Chance Print) खोजी (Searching) गरी हेर्दा उल्लेखित मेग्जीनमा केही औंठाछापका रेखा (Ridges) हरू मात्र देखिएका र औंठाछापको जात (Fingerprint Pattern) सम्म पनि प्रष्ट रुपले छुट्याउन सकिने अवस्थामा नरहेको हुनाले यकिन राय दिन नमिल्ने,

३. उक्त ९ एम.एम. १९x१६ मेग्जीन संगै रहेको एच.के. ५ एस.एम.जि. ९ एम.एम. को मेग्जीनमा साविक विधि अपनाएर खोजी गर्दा कुनै चान्स प्रिन्ट नभेटिएको,

४. उक्त एच.के. ५ एस.एम.जि. ९ एम.एम. मेग्जीन संगै रहेको एस.एम.जि. सव मेशिन गनमा समेत साविक विधि अपनाएर खोजी गर्दा कुनै चान्स प्रिन्ट नभेटिएको,

५. सोही एस.एम.जि. मेशिन गन नजिकै रहेको Glock-9mm पिस्तोलमा साविक वमोजिम विधि अपनाएर खोजी गर्दा कुनै चान्स प्रिन्ट (Chance Print) नदेखिएको,

६. सोही वमोजिम त्रिभुवन सदनबाट पूर्वतिर मुख्य ढोका बाहिर वरण्डामा रहेको एम.१६ - ए. २ कमाण्डो राइफलको मेग्जीन,

७. त्रिभुवन सदनबाट पूर्वतिर मूल ढोकाबाट ८/१० कदम अगाडी बायाँपट्टि दुवोको चौरमा रहेको १२ वोर सट गन,

८. उक्त १२ वोर सट गनदेखि ४/५ कदम पूर्व उत्तरतिर सोही चौरभित्र रहेको एम. १६ ए. २ कमाण्डो राईफल,

९. उक्त एम. १६ ए. २ कमाण्डो राईफलदेखि पूर्व-उत्तर १०/१२ कदमको टाढा पुल पारीपट्टि दायाँतिर पानीभित्र किनारामा रहेको Glock पिस्तोल ९ एम.एम. समेत हतियार र उल्लेखित बुँदा ६ को मेग्जीन र बुँदा ७ को १२ वोर सट गन र

बुँदा ८ को एम. १६ ए. २ कमाण्डो राईफलमा समेत साविक वमोजिम विधि अपनाएर खोजी गर्दा कुनै चान्स प्रिन्ट (Chance Print) हरू नभेटिएको,

१०. स्व. श्री ५ महाराजाधिराज दीपेन्द्र सरकारको निवास भवन प्रवेशद्वारभित्र माथि कोठामा जाने भऱ्याङ्गको रेलिङ्ग समेतमा साविक वमोजिमको विधि अपनाएर खोजी गर्दा कुनै चान्स प्रिन्टहरू नदेखिएको,

११. त्रिभुवन सदनको पूर्वतिरको मूल ढोकाको बाहिरी नजिकै बायाँपट्टि दुवोको झारभित्र रहेको एच.के. ५ एस.एम.जि. ९ एम.एम. को मेग्जीनलाई, र

१२. त्रिभुवन सदनको पूर्वी मुख्य ढोकाबाट सोझै ८/१० कदम अगाडि दायाँतिर चौरको लामो लामो झारभित्र रहेको एम.१६ - ए.२ कमाण्डो राईफलको मेग्जीन समेतलाई साविक वमोजिमको विधि अपनाएर खोजी गर्दा कुनै चान्स प्रिन्ट नभेटिएको ।

उपरोक्त अनुसारको रायका साथै माथि प्रकरण १ र २ मा उल्लेखित घटनास्थलमा भेटिएका मेग्जीनहरुमा देखिएका Chance Print र Chance Print का रेखाहरुलाई सोझै फोटो (Direct Photograph) खिची Develop गरी ५ x ७ साईजमा ईन्लार्ज गरिएको फोटो थान- दुई समेत उच्चस्तरीय समितिमा प्राप्त हुन आएको देखियो ।

विशेषज्ञको रायबाट देखा परेको परिणाम:

घटनास्थलमा फेला परेका (प्रयोग भएका र प्रयोग नभएका समेतका) बन्दूक एवम् मेग्जीनहरुमा हस्तरेखा (Finger Print) का Chance Print हरु प्रष्ट रुपमा कुनै फेला पर्न नसक्नुबाट सो हातहतियारको प्रयोगकर्ताले हातमा पञ्जा जस्ता चिजवस्तु लगाएको तथ्य समर्थित हुन्छ।

**(घ) मनोविज्ञानवेत्ताको राय**

*समिति:* यो उच्चस्तरीय *समिति*ले यो घटना कसरी सम्भव हुन सक्छ, यसमा विशेषज्ञहरुको राय लिने पनि म्याण्डेट पाएको छ। त्यसैले हामीले यो साइको एनालाइसिस पनि गर्नुपर्ने स्थिति भएको हुनाले अहिले हामी आजको काम प्रारम्भ गर्छौं। (आज २८ गते होइन ?) २८ गते आइतबारका दिन। र यसमा हामीले आमन्त्रण गरेको विशेषज्ञ आफ्नो परिचय पनि दिनुहुन्छ र आफ्नो ज्ञानको बारेमा पनि र यो परिस्थितिसंग उसको के स्थिति रहन्छ भन्ने कुरा उहाँले टिपोट गराउँदै हुनुहुन्छ।

*डा. कृष्णचन्द्र राजभण्डारी:-* यस कार्यक्रममा मलाई यहाँ सहयोगको लागि निमन्त्रणा दिनु भएकोमा म हार्दिक धन्यवाद व्यक्त गर्न चाहन्छु। र मेरो परिचय- म डा. कृष्णचन्द्र राजभण्डारी हुँ। मेरो सेवा शाही सेनामा भयो। त्यसपछि म काठमाण्डौ मेडिकल कलेजमा न्यूरो साइक्याट्रिक विभागमा विशेषज्ञ र प्रमुख छु। म टि.यु.मा पनि पढाउँछु। र यहाँ यो घटना सम्बन्धी जुन घट्यो त्यो घटना के कति कारणबाट घट्न सक्छ ? यसको कारण के हुन सक्ला त ? यस्तो घटना भन्ने कुरामा यहाँहरुबाट सोधनी भएको हुनाले मैले अनुभव मेरो यहाँ व्यक्त गर्न चाहन्छु।

एक त कुनै पनि व्यक्तिलाई आफूमा मन परेको वा नपरेको अवस्था इच्छा व्यक्त गर्छ। त्यो इच्छा मूडबाट व्यक्त गर्दछ। अब कोही व्यक्तिहरु सम्बन्धमा राम्रो भएन; आफू-आफूमा मनमुटाव भयो अथवा सम्बन्धमा मनमुटाव भयो अथवा केटाकेटीको सम्बन्ध जुन हो, त्यो सम्बन्धमा मनमुटाव भयो अथवा उसले कुनै समस्या फेस गर्न सकेन; व्यक्तिगत समस्या, घरायसी समस्या, गाउँको समस्या, जिल्लाको समस्या, राष्ट्रको समस्या केही समस्या उसले फेस गर्न सकेन र कुनै अवस्थामा आफूले ड्रग्स खाइरहेको छ, अल्कोहल खाने अथवा आजकलको चलिआएको गाँजाहरु भयो, हिरोइन भयो, ब्राउन सुगरहरु भयो; यी औषधिहरु खाँदाखेरी आफूलाई जब यसले नियन्त्रण गर्न सक्दैन, उसलाई इरिटेशन (चिडचिडाहट) हुने, एकदम रीस उठ्ने, आफूले आफूलाई नियन्त्रण गर्न नसक्ने, त्यो रीस जुन आफूले गर्न नसकेको रीस हो- या त आफैपट्टि फर्काउँछ, रिंगाइदिन्छ या अरुपट्टि रिंगाइदिन्छ। दुईवटा काम गर्छ जुन रीसले त्यो रीसले आफूले आफैपट्टि लगायो भने आफूले आफूलाई मार्छ। त्यो रीस अरुपट्टि डाइरेक्सन गयो भने अरुलाई मार्छ। त्यसलाई मर्डर भन्छौं। ........( नबुझिएको) ........... भन्छौं। त्यसकारणले यो अवस्थामा जुन यो घटना घट्न गयो, एउटा मारेको हो वा अथवा यो जुन मर्डर हो वा सुसाइड हो भन्ने कुरामा यो अवस्था हेरेर हामीले भन्नुपर्ने अवस्था आउँछ। यो एक्ज्याक्टली जुन अरुलाई गोलीले हानिएको छ भनेदेखि यो रिभेन्सको कुरा आउँछ; र आफूलाई गोलीले हानेको छ भनेदेखि आफूले सुसाइड गरेको भन्ने कुरा हामी मान्छौं जसलाई हामी मर्डर सुसाइड भन्छौं। अडेरको हिसावले हामी त्यसो भन्छौं।

*समिति:* त्यो मनमुटाव भयो भनेर जुन कुरो भन्नुभयो नि, त्यसरी आक्रोशमा आइसकेपछि जसबाट मनमुटाव भयो, उहीसंग नै उसैलाई नै उसले लक्षित गर्छ कि अरु जो कोही अगाडि पर्छ, त्यो पनि उसले ......

*डा. कृष्णचन्द्र राजभण्डारी:-* जो संग मनमुटाव हुन्छ त्यही मान्छेमाथि मात्रै उसले आक्रोशित गर्छ र आक्रमण गर्छ; र आफ्नो इच्छा पूर्ति गर्छ उसले ............ (नबुझिएको) .......... र यसमा पनि व्यक्तित्वको ठूलो भर पर्छ। व्यक्तित्व जस्तो कि Past मा रिपिटेड्ली यस्तो घटना घटाएको छ, आफ्नो नियन्त्रणमा छैन, आफू विभिन्न अवस्थामा झैं-झगडा गर्ने र आफूलाई नियन्त्रण गर्न नसक्ने र यस्तो कुनै ड्रग्स सुक्स खाएको अवस्था छ र सामान्य कुराहरुमा पनि झैं-झगडा हुने व्यक्तित्व छ भनेदेखि त्यस्तो व्यक्तित्वहरुले पनि आफूलाई नियन्त्रण नगरिकन यस्तो आक्रोशित भएर अरुमाथि जाइलाग्ने अवस्था देखिन्छ र अक्सर जो माथि आफूलाई रीस उठेको छ त्यसमाथि नै यो आक्रोश व्यक्त गरिन्छ, मनमुटावमा।

*समिति:-* डा. साहेव, अब यो यसैमा, हामी चारजना छौं, यो कोठाभित्र। अनि मलाई डा. साहेवसंग आक्रोश भयो; मैले डा. साहेवसंगको आक्रोशको जो बदला लिएँ त्यसपछि म नर्मल कण्डिसनमा हुन्छु या त्यसले मलाई अरु आक्रोशित गरेर अरुसंग पनि त्यसरी.....

*डा. कृष्णचन्द्र राजभण्डारी:-* यदि त्यो आक्रोशित व्यक्तिलाई कसैले सुरक्षा दिन खोज्छ भनेदेखि उसमाथि पनि आफ्नो रीस पोख्नसक्छ। उसले आफ्नो रीस यो पनि उसको सही पक्ष नलागीकन, मेरो पक्ष नलागिकन त्यसपछि लाग्यो भने त्यो जो व्यक्ति आक्रोशित भइरहेको आक्रोशमा आउने व्यक्तिले आक्रोशित व्यक्तिलाई त्यो सुरक्षा दिनेहरुप्रति पनि उसको आक्रोश व्यक्त गर्नसक्छ।

*समिति:-* सुरक्षा दिन वा बीचमा रोकावट ......

*डा. कृष्णचन्द्र राजभण्डारी:-* रोकावट गर्ने अथवा इन्टरफियर गर्नेमा पनि।

*समिति:-* यसको मात्राको केही किसिमको कुरो छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* जहाँसम्म यो मैले विन्ति गरीसकें कि अब धेरैजसो व्यक्तिहरु अहिले विदेशमा गरेको अध्ययन अनुसार धेरैजसो व्यक्तिहरुले रक्सी, दोश्रो यो गाँजाहरु भयो, तेश्रो यो हिरोइनहरु भयो, ब्राउन सुगरहरु भयो र कसैले एउटै मात्रै र कसैले सबै एकमुष्ठ मादक औषधि खाएर उनीहरुले अरुमाथि आक्रोश व्यक्त गर्छन्। समाज अवस्थित जुन रुल नियम कानून हो,

त्यो कानूनलाई यिनीहरुले तोड्न खोज्छन् र त्यो कानून उनीहरुले त्यही रक्सीको सूरमा तोड्न खोज्छन् यिनीहरुले; र आफ्नो सूर आफ्नो कन्ससनेशमा यिनीहरु हुन्नन्।

*समिति:-* समाजको कानून भन्दाखेरी सोसल भ्यालु ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* सोसल भ्यालु भो, उसले चाहिने वास्तै गर्दैन। जस्तो, अब घरमा एउटा कानून हुन्छ, नियम हुन्छ; त्यस्तै समाजमा एउटा नियम हुन्छ र राष्ट्रमा एउटा नियम हुन्छ, त्यो नियमको उसले ख्यालै गर्न सक्दैन; नियम पालन नै गर्न सक्दैन। त्यसकारणले त्यसमाथि आक्रोश आउन सक्छ। तर रक्सी अक्सर तपाईले मलाई जुन जवाफ सोध्नुभयो, त्यो ज्यादै मार्मिक जवाफ, तपाईले सोध्नुभयो। हाम्रो नेट रक्सी ५ भन्दा पनि बढी रगत कुँदेको बढ्यो भनेदेखि आफ्नो नियन्त्रणभन्दा बाहिर जान्छ भनेर एउटा लेवल दिएको छ। वेष्टमा र हाम्रो नेपालमा। नेपालमा कति मात्र दिएको छ भनेर हामी....

*समिति-* पाँच भनेको पाँच .... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* मिलिग्राम पर एम.एल., के रे १०० एम.एल. मा रगतको पर्सेन्टेज।

*समिति-* रगतको १०० एम.एल. मा.... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* ५ मिलिग्राम ०.५ मिलिग्राम।

*समिति-* १०० एम.एल. ब्लडमा ०.५.... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* ५ मिलिग्राम भन्दा बढी यो चाहिं देश देशको नियम हुन्छ र हाम्रो देशमा के छ भन्ने कुरा मलाई थाहा छैन; र विदेशमा यो भन्दा बढी रगतको मात्रा भयो भनेदेखि यसलाई is not been allowed to trail.

*समिति-* यसले चाहिं के अब मान्छेलाई नियन्त्रणभन्दा बाहिर लैजाने... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* मान्छेलाई नियन्त्रणभन्दा बाहिर, आफ्नो नियन्त्रणमा नरहने।

*समिति-* त्यो नियन्त्रणबाट बाहिर मादक पदार्थ, एक मादक पदार्थ सेवन गऱ्यो भने पनि लाग्छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* लाग्छ। जस्तो अब यो रक्सी मात्र खाएको अवस्थामा र रक्सी र यो ब्राउन सुगरहरु, अन्य लागू पदार्थ औषधिसंग मिक्स भयो भने यसको असर झन् बढी मात्रामा हुन्छ। जुन यसले रक्सीले एक मात्रको असर पार्नेछ भनेदेखि यसको Combination लाई हामीले लियौं भने यो डबल ट्रिवल नै यसले असर पार्छ, जसलाई हामी साइनर्जिक इफेक्ट भन्छौं। यसरी खाएको अवस्थामा यदि त्यसले उल्टी गर्छ र शुरुमैं यदि त्यो खाएको औषधिहरु अथवा खाएको मादक पदार्थहरु उल्टी गरेर फ्याँकिन्छ भनेदेखि यसको असर कम मात्रामा हुन्छ। जति हुनुपर्ने त्यो मात्रामा हुन सक्दैन र अन्तर......

*समिति-* जस्तो, उल्टीको कुरा आयो। उल्टी गरेर तत्काल उल्टी गर्ने बित्तिकै असर इमिडियट्ली कम हुन्छ कि त्यसको पनि एउटा...... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* तत्कालै उल्टी गऱ्यो भनेदेखि असर कम हुन्छ; र रक्सी लागिसकेपछि अथवा औषधि खाइसकेपछि जुन मानसिक विकृति आउँछ त्यसबेला आएको जुन प्रतिकूल असर जुन छ, जस्तो टाउको दुख्ने, उल्टी हुने, हाई एशिनेशन हुने, दृश्यहरु आँखाले देखिने, कानले सुनिने अथवा अरुमाथि अरुले मलाई जाइलाग्न लागेको भन्ने कुरा देखिने, त्यो जाइलाग्न लागेको इर्ष्या अनुभव गरेर हामीले आक्रमण गर्ने त्यो किसिमको जुन भावना आउँछ त्यो पछि मात्र देखिन्छ, त्यो। त्यसबेला उल्टी भएर केही असर त्यति मात्रामा पर्दैन, जति ....

*समिति-* जुन किसिमको उसमा एउटा एब्नर्मल मानसिक उसको डेभलप भइसकेपछि उल्टी गरेको तत्काल त्यसको... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* त्यो त प्रतिकूलको असर मात्र हो उल्टीको। तर पहिलेको उल्टीमा चाहिने प्रतिकूल असर हामी...

*समिति-* त्यो ब्लडसर्कुलेशनमा आउनुभन्दा अगाडि उल्टी गऱ्यो भने असर डाउन हुन्छ। सर्कुलेट भइसकेपछिको अवस्था आयो भने...

*डा. कृष्णचन्द्र राजभण्डारी:-* हजूर। भइसकेपछि दिमागमा आएर उल्टी गऱ्यो भने त्यसको (उल्टीको) असर केही पर्दैन।

*समिति-* यसले यसको सर्कुलेट भइसकेपछि भमिटिङ्ग पनि मान्छेलाई अलिकति भमिटिङ्ग गर्ने जुन क्रिया हुन्छ, त्यसले पनि कहीं न कहीं अलिकति पेनिटी जस्तो हुन्छ शरीरमा। त्यसले भित्रको चीज गलाबाट निकाल्ने त्यसले थप इरिटेशन त बढाउँदैन ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* जीउ दुख्ने, टाउको दुख्ने, जीउ एकदम आलस्य हुने, मेन्टलमा जरुर थकावट महसूस हुने, आफ्नो शरीरमा छट्पटी हुने, राती नीद नलाग्ने, एक ठाउँमा बस्न उसले नसक्ने....

*समिति-* एउटा निश्चित Optimum Point मा पुगिसकेपछि उसलाई केही होश अथवा यो काम गर्दैछु भन्ने परिणाम थाहा हुने अवस्था हुन्छ कि हुँदैन ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* अब यस्तो फ्री अवस्थामा पुग्दाखेरी आफूले सोंचेका जति कुराहरु छ, यो सोंचेका कुराहरु उसले गर्नपट्टि नै एक्टिभ गर्न नै जान्छ। यदि यो नियन्त्रणभन्दा बाहिर हामीले Over Dose जुन भन्छौं, त्यसलाई हामी Optimum भन्दैनौं। Above the level, हजूर,Exclusive level; त्योबेला चाहिं आफूले सहने शक्तिभन्दा पनि बढी लेवलमा गयो भनेदेखि नियन्त्रणभन्दा हामी बाहिर गएको Abnormal behaviour देखाउँछ उसले। त्यसले जथाभावी बोल्ने, जे मन लाग्यो, त्यही गर्ने, सोंचेको काम गर्ने...

*समिति-* त्यसले नबोलिकन कुनै कार्य गर्छ त ? त्यस्तो देखिन्छ नि डा. साहेब ! केही यो जो ड्रंकर्डहरु हुन्छ, मान्छे कोही मान्छेको, कोही अलिकति खाएपछि मनपरी बोलेर हिड्ने हुन्छन्, कोही खाएपछि बिल्कुल नबोल्ने हुन्छन्, कोही खाएपछि चूप लागेर सुत्छन्। त्यस्तो किसिमको हुन्छ होइन फरक ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* फरक हुन्छ। अब, यो व्यक्तिहरुको व्यक्तित्वमा फरक पर्छ। कोही व्यक्तिहरु इन्टरभर्टेड हुन्छ हामी घुसघुसे भन्छौं नेपालीमा। त्यो घुसघुसे व्यक्तिहरुलाई हामी रक्सी खुवायौं भनेदेखि त्यसले मनमा भएका कुराहरु जम्मै व्यक्त गर्न चाहन्छ र सबै निकाल्न खोज्छ। आफूले जुन रोकिरहेका आफ्नो इच्छाहरु भयो, व्यवहारहरु भयो त्यो व्यवहारहरु जम्मै देखाउन खोज्छ। कसैलाई गाली गर्ने हो कि, कसमाथि आफू जाइलाग्ने हो कि, आक्रोश व्यक्त गर्ने हो कि, आफ्नो unhappyness जुन emotional feeling हो त्यो feeling express गर्छ। कोही व्यक्तिहरु बढी बोल्ने छ भनेदेखि रक्सी खाएर नबोलिकन बस्ने, चूप लागेर बस्ने, एकातिर गएर रहने, अरुसंग कुनै किसिमको सम्बन्ध नराख्ने इन्टऱ्याक्ट नहाल्ने, यो चाहिं withdraws भन्छौं हामीले, त्यो withdraw भएर बस्छन् तिनीहरु। यो चाहिं व्यक्तित्वमा भर पर्छ। इन्टरभर्टेड व्यक्ति छ भनेदेखि खुलेआम यसले disagreement गर्छ हजूर यो। disagreement भनेको दिमागलाई नियन्त्रण गरेर राखेको चीजलाई अनियन्त्रित हुन्छ। यदि extraverted हो भनेदेखि यसलाई नियन्त्रित गरेर जान्छ। रोकावट गरेर जान्छ र अनि व्यक्त गर्न चाहँदैन। यसले एक सूरमा बसेर यिनीहरु, व्यक्तित्वमा धेरै भर पर्छ यो।

*समितिः-* यो यसो पनि भनिन्छ, यो कतिसम्म अब यो मिथ्या हो, कतिसम्म सत्य हो होइन; त्यो शुरु शुरुको स्टेजमा जब मान्छेले मादक पदार्थ खान्छ रे, त्यो खाएको बेलामा शुरु शुरुमा जस्तो किसिमको circumstances मा बसेको छ शुरुमा त्यो consume गर्न थालेको बेलामा बढ्ता बोल्ने किसिमको एउटा वातावरण गरेको छ भने ....... सम्म त्यही टेण्डेन्सी डेभलप हुने, शुरुमा खाएर चूप लागेर बस्ने किसिमको वातावरण रहेछ भने पछिसम्म पनि त्यही किसिमको गरेर जाने यस्तो किसिमको।

*डा. कृष्णचन्द्र राजभण्डारीः-* अब यो जुन रक्सी खाँदाखेरी मान्छेहरु विचारमा व्यक्त गर्ने अभिव्यक्तिहरु जुन हो, त्यो अभिव्यक्ति सिचुएसनमा धेरै भर पर्दछ। मलाई जुन प्रश्न गर्नुभयो, अब त्यसलाई रीस उठाउने अथवा आवेगमा ल्याउने अवस्था ल्याएको छ अथवा त्यसलाई खुशी र इन्टरटेन्ट गर्ने अवस्थामा ल्याएको छ अथवा त्यसलाई इन्टरएक्ट गर्ने नगरिकन एक्लोपनमा राख्ने अवस्था छ; त्यो चाहिं सिचुएशनमा डेफिनेट्ली भर पर्छ। अब उसलाई कुन सिचुएशनमा ऊ खाइरहेकोछ, अब।

*समितिः-* खाँदाको परिस्थिति ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* खाँदाको परिस्थिति। जस्तो म एउटा example दिऊँ। यदि गाँजा खाएको बेलामा उसलाई गीत अथवा केही राखिदियो भनेदेखि ऊ गीतमा असाध्यै रमाउँछ। गीतको बढी appritiation गर्छ। गीत सुन्ने मात्र होइन, गीत गाएर रमाउन पनि रमाउँछ। यदि ऊ रीसाउने अवस्थामा पारिदियो भनेदेखि ऊ भैं-झगडा गर्न पनि पछि पर्दैन। हातपात गर्न ह्वा-हुर फिजिकल एक्सन गर्न ऊ पछि पर्दैन। यसैले त्यो अवस्थामा जुन बेलामा उसले मादक पदार्थ अथवा कुनै अन्य वस्तुहरु हामी ....... (नबुझिएको) .......... त्यो खाएको अवस्थामा त्यहाँको वातावरण कस्तो छ, वातावरणले धेरै असर पार्छ हजूरको।

*समितिः-* यस सम्बन्धमा अरु जस्तै मान्छेलाई सानैदेखि भनूँ न कुनै भ्वाइलेन्स किसिमको काम गऱ्यो, त्यो गर्नलाई कुन कुन कुराले कस्तो कस्तो अवस्था पऱ्यो भनेदेखि त्यो व्यक्ति हुन्छ जस्तो मादक पदार्थ खाने अथवा अरु कुनै घरायसी टेन्सन हुने कुरामा झगडा पर्ने यसको अलिअलि यो साइन्टिफिक हिसावबाट यो चीजको यस्तो किसिमको यो यो घटना भयो भने यस्तो केही छ कि ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* यो भ्वाइलेन्स भन्ने नै आफ्नो मनस्थिति नियन्त्रणमा नहुनु हो। यो मनस्थिति नियन्त्रण नहुनमा जसलाई हामी imposive behabiour भनिन्छ। त्यो कुनै unhappy situation बाट नै हुने हो। आफूले गर्न खोजेको अवस्था नहुँदाखेरी हुने हो। त्यो अवस्थाmaterials होस् जस्तो कि घरायसी अवस्था मिलेर जानु हो अथवा मैले अघि नै विन्ति गरीसकें- एउटा सेक्सुअल प्रोबलम भयो, अर्को फिजिकल प्रोबलम भयो। अब शरीरमा कुनै रोग छ, त्यो रोगलाई सहने अवस्था छैन, त्यो अवस्थामा भयो, अनि एउटा रिलेसन प्रोबलम। अब साथीहरुसंग सम्बन्ध छ या मेल होस् या

फिमेल होस्; त्यसमा एउटा mis-understanding develop भयो भनेदेखि हुन्छ। तर अहिलेसम्म कुनै एउटा रीसर्चले, एउटा विज्ञानले यत्तिकै हुनुपर्दछ भन्ने कुरा त देखाएको छैन। र हाम्रो एउटा प्रोटोकल हुन्छ, त्यो प्रोटोकल त्यो व्यक्तिलाई हामीले administar गऱ्यो भनेदेखि त्यो व्यक्तिले गर्छ कि गर्दैन भन्ने कुरा rating scale हुन्छ। त्यो rating scale ले हामीले भन्न सक्छौं कि यसको यस्तो व्यवहार गर्न सक्ने यसको व्यक्तित्व छ अथवा यसको बानी छ अथवा यसमा गुण छ भन्ने कुरा हामी भन्न सक्छौं।

*समिति:-* जस्तो यो अहिले डा. साहेवले ..... (नबुझिएको) .......... ल्याउनुभयो। यो जस्तो sexual relation या फिजिकल, आफू willness भएको अवस्थामा या अरु social relation का कुराहरुमा चाहिं यो समस्या आयो भने यो चीज हुन्छ भन्नुभयो। त्यो अवस्थामा कुनै लागू औषध, मादक पदार्थ केही सेवन नगर्दाखेरी पनि त्यो आउँछ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* त्यो आउँछ।

*समिति:-* त्यो सेवन गरिराख्नु पर्ने.... ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* गरिराख्नुपर्ने आवश्यकता छैन।

*समिति:-* यो के तत्काल यसको duration को पनि केही कुरा छन् कि ? यो जसरी आवेशमा मान्छे आयो, जस्तो sexual relation को लागि, त्यसबाट टेन्सन पुगेको भयो या family problem को कारणबाट केही र ऊ अलिकति beyond एउटा कमन प्रोडेम्स भन्छ त्यो अनुसारको मानिसहरुको व्यवहारभन्दा फरक व्यवहार गर्ने स्थितिमा पुग्यो, कोही मान्छे त्यो चीज फेरि कुनै बेला त cool down भएर normalize भएर आउँछ। त्यसको duration को के छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* त्यस्तै मान्छेहरुले अध्ययन गर्दाखेरी १/२ महिनादेखि नै मान्छेहरुमा त्यो व्यवहारमा केही फरक देखिन आउँदैन। जस्तो चाहेको भन्दा पनि अनावश्यक अवस्थामा पनि उसलाई रीस उक्साउने, अरुसंग रीस नदेखाउने व्यक्तिहरुलाई पनि उसले रीस देखाइराख्ने, साधारण कुरामा पनि उसलाई उत्तेजित हुने, इरिटेशन हुने, उत्तेजना हुने र अरुसंग राम्रोसंग व्यवहार गरेर बसिरहेछ भने ऊ व्यवहार गरेर बस्न नचाहने एक्लोपनमा रहन चाहने एक्लै सोचिराख्ने, आफ्नो व्यवहारमा फरक देखाउँछ। एक महिनादेखि नै व्यवहार फरक देखाउँछ त्यो व्यक्तिले। र परिवारहरुले अथवा उसको परिवारले धेरै विचार गर्नुपर्दछ कि यसमा यो किसिमको व्यवहारमा परिवर्तन छ भनेदेखिन् यसलाई के हुन लागेको छ भन्ने कुरा हामीलाई संकेत गर्दछ।

*समिति:-* यो यसलाई के develop हुन निकै लामो टाइम हो कि ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* लाग्दैन।

*समिति:-* अब, जस्तो भनूँ न, अहिले म यहाँ छु। यो everything family relation या सबै चीज suppose अहिलेसम्म कुनै problem छैन। अहिले म घरमा गएँ। For example, त्यहाँ केही किसिमको समस्या भयो। भनिसकेपछि त्यसले मलाई तुरुन्तै इरिटेशन बढाएर मलाईbeyond control स्थितिमा पऱ्याउन सक्ने पनि हुन्छ कि यो develop हुन टाइम लाग्छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* यो मान्छेमा भर पर्ने भयो। व्यक्तित्वमा, personality यदि साइकोप्याटिक personality छ भने साइकोप्याटिक personality हामी कस्तो भन्छौं भनेदेखि उसले आफ्नो मनलाई आफ्नो विवेकलाई उसले control नियन्त्रण नै गर्न सक्दैन। त्यसबेला त्यसको कन्सिक्वेन्सेस उसले के हुन्छ भन्ने कुरा नै उसले वास्ता गर्दैन। र त्यो कन्सिक्वेन्सेस त्यो भएतापनि उसले मतलव राख्दैन। साइकोप्याटिक व्यक्ति यस्तो हुन्छ कि त्यसलाई नियन्त्रण गरेर, यो मैले आवेशमा आउन हुन्न; यो पछि पनि त्यसलाई परिवर्तन गर्न सकिन्छ र यसमा हामी चूप लागेर बस्नुपर्छ भन्ने एक प्रकारको व्यक्तित्व छ भने र यो गऱ्यो भनेदेखि यसको नराम्रो परिस्थिति हुन्छ है समाजमा। समाजमा मात्रै होइन, म व्यक्तिको, म परिवारको लागि, म समाजमा, म राष्ट्रमा मलाई नराम्रो रिएक्सन हुन्छ है, यसको इमेज खराव हुन्छ भन्ने एक त एक गुणको व्यक्ति हुन्छ भनेदेखि एक व्यक्तित्व कस्तो हुन्छ भनेदेखि तुरुन्त आवेगमा आउने, नियन्त्रण गर्न नसक्ने, त्यसलाई तुरुन्त ऊ आफ्नै गर्न चाहेको हो त्यो आफूले नियन्त्रण नगरिकन आवेगमा आएर काम गरेर आफू सन्तोष गर्ने।

त्यो गरीसकेर आफूले गर्न नहुने कुराहरु गरीसकेर उसले मलाई के भयो भन्ने कुरा व्यक्तित्वमा के आघात पऱ्यो, इज्जतमा कति आघात पऱ्यो भन्ने कुरा उसले मतलव राख्दैन। परिवारलाई आघात पऱ्यो कि परेन भनेर उसले मतलव राख्दैन; समाजलाई आघात पऱ्यो कि परेन भनेर मतलव राख्दैन; राष्ट्रलाई आघात पऱ्यो कि परेन भनेर मतलव राख्दैन। त्यस्तो व्यक्तित्व छ भनेदेखि उसले नियन्त्रण गरेन। समय बढी लाग्दैन। त्यो personality नै २०/२१ वर्षको उमेरदेखि

नै उसको personality त्यस्तो हुन्छ र त्यस्तो अवस्था छ भनेदेखि समय लामो चाहिंदैन उसलाई। कुनै पनि घरको परिस्थिति अथवा समाजको परिस्थिति अथवा व्यक्तिको परिस्थितिमा ऊ उसको मनमुटाव भयो अथवा मनमा आफूले इच्छा गरेको चीजहरु मिलेन भनेदेखि यो काम उसले गर्न सक्छ।

*समिति:-* यो हाम्रो यो एउटा traditional concept छ त्यो अहिले पनि कतिपय कुरा सत्य नै होलान्। कि कुनै अपराधको पछाडि महिला (स्त्री भनौं न) पैसा अथवा पद यी तीनवटा चीज कहीं न कहिं जुडेको हुन्छ रे। या त त्यो सम्पत्तिको लागि गर्छ रे, त्यो त्यसको पछाडि कोही स्त्री मानिसको कारण केही चीज हुन्छ रे, sexual relation जसलाई जोडौं; या कुनै पद पावर इत्यादिको लागि यस्तो किसिमको कुरा हुन्छ भन्ने परम्परागत अहिले केही चीजहरु जोडिएको छ। यो यस्तो कुराको सन्दर्भमा यो अहिले जसरी मेन्टल उसबाट चाहिं ड्रग्सहरु खाने, अरु कुरा गर्ने त्यसलाई कहीं जोड्न सकिन्छ ? यसको कहीं सिक्वेन्स हुन्छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* जरुर। यो त यो ठूलो हामी फ्याक्ट मान्छौं। ड्रग्स खाने, ड्रग्स खानेमा एउटा सोसियल फ्याक्टर। यो सोधेको प्रश्नमा हामी सोसियल फ्याक्टरमा काउण्ट गर्छौं। सोसियल फ्याक्टरमा अब के चीज जुन रोजेको छ, त्यो आफूले इच्छाएको अनुसार दिएन अथवा केटाले केटी रोजेको छ भनेदेखिन् त्यो इच्छा अनुसार दिएन; पदीयताको पदोन्नति भएन अथवा उसलाई डिमोशन गराइदियो भनेदेखिन् आफ्नो सन्तोष जुटाउनलाई आफ्नो दुःख मेटाउनका लागि यो ड्रग्सको सहारा लिन्छ र बिर्साउन चाहन्छ। त्यो जो व्यक्तिले र यो एउटा पनि ठूलो फ्याक्टर हो लस, family disharmony, merital problem, sexual problem, occupation problem जुन सोध्नुभयो, occupation problem मा आउँछ र employment desire factor जहाँ कि मान्छेहरुले यो डिप्रेशनमा गएर यो जाँड रक्सी र दुर्व्यसनको एउटा आदत लिएर आफ्नो सन्तुष्टि मेटाउन खोज्छन् यिनीहरुले।

*समिति:-* डिप्रेशन भएपछि अनि त्यो अल्टरनेटको खोजी शुरु हुन्छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* अल्टरनेटको खोजी। इच्छापूर्ति, उसलाई दबाउनको लागि।

*समिति:-* यो जुन विकल्पको खोजी त्यसलाई ठिक्क हामी भन्दाखेरी अस्वभाविक रुपमा विकल्पको खोजी भन्ने कि त्यस्तो केही खास terminology कस्तो छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* डिप्रेशन भइसकेपछि विकल्पको खोजी भन्छौं।

*समिति:-* विकल्पको खोजी चाहिं स्वभाविक खोजी हुँदैन ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* स्वभाविकै खोजी हुन्छ त्यो।

*समिति:-* स्वभाविक ? नर्मल ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* नर्मल्ली नै आउँछ त्यो। कसैले चाहिने रक्सी खान खोज्ने हजूरको, कसैले आफ्नो आत्महत्या गर्न खोज्ने, र

*समिति:-* भन्नाले मैले यो के भने जुन विकल्प हो, त्यो चाहिं एउटा कमन प्रुडेन्सको मान्छेले यो त्यो किसिमको कमन उसको मान्छेले गर्ने भन्दा त्यो भन्दा बाहिरको चीज चाहिं खोजी गर्छ उसले ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* होइन, खोजी गर्छ।

*समिति:-* यो average standard को मान्छे हुन्छ नि !

*डा. कृष्णचन्द्र राजभण्डारी:-* त्यसले खोज्दैन।

*समिति:-* त्यसले नखोज्ने चीज उसले खोजी गर्छ ?

*डा. कृष्णचन्द्र राजभण्डारी:-* उसले खोजी गर्छ। नर्मल मान्छेले त त्यस्तो ...... (नबुझिएको) ....... गर्दैन हजुर त्यो The fact of stress.

*समिति:-* उसले यो चीजलाई समावेश गर्ने ...

*डा. कृष्णचन्द्र राजभण्डारी:-* यो चीजलाईं म लडेर यसलाई मैले ओभरटेक गर्नुपर्दछ । यो स्ट्रेसलाई भनेर उ जान्छ ( पोजेटिभ वे मा ?) पोजेटिभ वेले जान्छ । तर यो एब्नर्मल विहाभिएर भएको व्यक्तिहरुले के गर्छ भनेदेखि Alternative negative think गर्छ (नेगेटिभ हिसावबाट जोAverage मान्छेले सोच्दैन ?) सोच्दैन।

मानिसहरुको मानसिकतामा तीनवटा कम्पोनेन्ट आउँछ । एउटा आफ्नो जीवनको वारेमा, एउटा समाजको जीवनको बारेमा, एउटा Future को बारेमा । यसलाई उसले कसरी हेरिरहेको छ त्यसले ? आफ्नो व्यक्तित्व राम्रो छ भन्ने सोचाईलाई Positive Thinking भयो । आफ्नो व्यक्तित्व आफ्नो नराम्रो छ भनेर सोच्ने Negative

Thinking भयो । अर्को उसले वरिपरिको वातावरण उसले कसरी सोचेको छ ? त्यो वातावरण मेरो चाहिने Favourable छ राम्रो छ अथवा वातावरण मेरो Favourable छैन। सकेण्डमा यो Future को बारेमा मेरो Future राम्रो छ वा छैन । त्यसकारणले मान्छेको Thinking मा तीनवटा Component आउँछ । First of Self, Positive and Negative Thinking. Second, The thinking of the Sorrounding, thinking of the future. त्यही अनुरुप यसले काम गरीरहेको हो । Negative अथवा Positive Way मा ।

*समितिः-* शाही सेनामा २६ बर्ष जो सर्भिस भयो । यसमा यहाँको के शुरु देखिनै मनोविज्ञान सम्बन्धी विषयमा भनौ न यो न्यूरो साइकोलोजी ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* न्यूरो साइकियाट्रिक डिर्पाटमेन्ट, म विशेषज्ञ छु । त्यहाँ विभागीय प्रमुख पनि छु, मेडिकल डिभिजनको चिफ पनि, त्यहीं डेपुटी डाइरेक्टरसम्म पनि म भएँ । र मेरो लाष्ट पद म फूल कर्णेलमा म रिटार्यड भएँ । र अहिले ।

*समितिः-* फूल कर्णेल भन्नाले ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* महासेनानी र अहिले चाहिने मेरो परिचय दिंदा त्यो त भू.पू. नै भयो । म अहिले काठमाडौं कलेजमा न्यूरो साइकियाट्रिक विभागको विशेषज्ञ छु ।

*समितिः-* यसमा यहाँको जस्तो एकेडेमीक ट्रेनिङ्ग, यस विषयमा यो साइकियाट्रिक जुन सब्जेक्टमा गर्नु भयो Specialization त्यो कहाँबाट के डिभिजनमा ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* यो नेशनल इन्स्टीच्यूट अफ मेन्टल हेथ्ल न्यूरो साइन्स वेंगलोरबाट मैले डबल पोष्ट ग्रयाजुयट गरें । DPM (Diploma in साइकियाट्रिक) अनि मास्टर इन (MD) न्यूरो साइकियाट्रिक , डक्टर इन न्यूरो साइकियाट्रिक । MD न्यूरो साइकियाट्रिक दुइटा डवल पोष्ट ग्राजुयट गरे मैले त्यहाँबाट । त्यसपछि म न्यूरोलोजीमा साइकियाट्रिकमा युनिभरसिटी अफ ब्रुक आर्मी मेडिकल सेन्टर टेक्सासमा, USA हो । अनि त्यस्तै आइजनहावर (Eisenhouer) (August हस्पिटल अगस्टा त्यसमा गरें, Drug Abuse/Control को बारेमा गरें ।

*समितिः-* अगष्टाबाट त्यसको डिग्री के भन्छ ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* तिनीहरुको ट्रेनिङ Advance Training न्यूरो डिभिजनमा Advance Traning हो ।

*समितिः-* यो पाहुनाहरु पनि छ सम्माननीयज्यूहरु पनि छँदैछ । डा. सावलाई यो एउटा Request के गरौं भने अहिले हामीले जुन विषयहरुमा गऱ्यो कि कसरी मानिसले यस्तरी एउटा अस्वाभाविक किसिमको व्यवहार गर्न उद्दत हुन्छ ? बढी प्रेरित हुन्छ भन्ने विषयमा यसको जुन Authentic Writer हरुबाट लेखेको कुनै एउटा किताव अथवा लिटरेचर हुन्छ नि जसबाट यसको केही पाइयोस । हामी रिटर्न गर्ने गरी एउटा त्यस्तो केही जसबाट यो चीजको अध्ययन केही चीज हेर्न सकियोस् त्यो पाउन सक्छौं ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* यो कम्प्युटरमा मैले हेरिनै राखेको थिएँ । मर्डर एण्ड भाइलेन्स भन्ने । अव म्याटल्याण्डबाट हाम्रो धेरै नै स्टडी छ; ४००० कपीहरु ।

*समितिः-* भोलुमस् कुराहरुको त त्यसको फेरी सिनोप्सिस् निकाल्दा पनि हामीलाई गाह्रो हुन्छ। टक्क कही त्यस्तो किसिमको छ ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* हुन्छ। अब हजूरले टपिक्स दिइबक्सनु पऱ्यो। मर्डर एण्ड मर्डर टु फ्यामिली एण्ड सुसाइड भन्ने छ। अरुलाई मारेर आफू मर्ने एउटा छ।

*समितिः-* सेपरेट टपिकमा लिट्रेचर छ ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* लिट्रेचर छ।

*समितिः-* मोटो छ डा. साहेव ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* होइन, त्यो मेडलाइनबाट खररैं दिन्छ। इन्टरनेटमा अब कति कुन सालको हामीलाई चाहियो अब ? २००० सालको चाहियो कि ? १९९७ को चाहियो ? १९९७ देखिको हामीलाई आर्टिकल चाहियो भने उसले खररर दिन्छ। हामीले प्रिन्टमा हेर्नुपऱ्यो यो। हाम्रै कम्प्युटर हुन्छ। त्यसमा हामीले सर्च मा मर्डर टु फ्यामिली एण्ड सुसाइड सेल्फ।

*समितिः-* त्यो पनि हामीले खोज्नुभन्दा डा. साहेवलाई आइडिया छ। त्यसैले हामीलाई उपलब्ध गराइदिन सक्नुहुन्छ कि ?

*डा. कृष्णचन्द्र राजभण्डारीः-* हुन्छ। अब मलाई टपिक्स हजूरले कुन चाहिं ।

*समितिः-* त्यही अघिकै।

*डा. कृष्णचन्द्र राजभण्डारीः-* मैले यसो हेर्दा हेर्दै मेरो विचारमा त्यही लागेको हुनाले मैले पनि त्यही मेडलाइनमा कम्प्युटरमा त्यही हेरिरहेको थिएँ। मैले सरकारको मृत्युमा म ११/१२ बजेसम्म के रहेछ..

*समितिः-* होइन, यसो गरौं। डा. साहेवले हामीलाई सप्लाई गरिदिनुहोस्। जति मोटो भएपनि त्यसको खर्च आउँछ भने पनि बिल पनि पठाइदिनु होला।

**लागू औषध विशेषज्ञको रायः**

लागू औषधमा मूलतः कोकिन (Cocaine), एम्फेटामिन (Amphetamine), मेथाफेटामिन (Methaphetamine), मेथिफेनिडेट (Methiphenidate) जस्ता पदार्थको सेवनले उत्तेजित र आक्रामक बनाउने, रक्तचाप बढाउने, संयमता गुमाउने जस्ता असर पुऱ्याउँदछ भनेLSD (Mescaline and peyote, Aphetimine Variants, Phencyclidine and Analogs) जस्ताको सेवनले मानसिक असन्तुलन बनाउने, आत्महत्यातर्फ उन्मुख गराउने किसिमको असर पुऱ्याउँदछ। त्यसैगरी, गाँजा (Cannabis) र चरेसको सेवनले होस गुम हुने गर्छ। कोकिन (Cocaine) धुलो र चक्की दुवै रुपमा पाइन्छ। LSD समेत धुलो र चक्कीको स्वरुपमा पनि पाइन्छ।

*(श्रोतः Narcotic Identification Manual, US Custom Service, US Department of Justice, Drug Enforcement Administration. सौजन्य प्र.ना.उ. श्री हेमन्त मल्ल, लागू औषध नियन्त्रण इकाई)*

*भाग- ३*

## घटनाको यथार्थ विवरण

नारायणहिटी राजदरबारमा २०५८ जेठ १९ गते शुक्रवार राती घटेको घटनाको यथार्थ तथ्य संकलन गर्ने क्रममा यस उच्चस्तरीय समितिबाट घटनास्थलको अवलोकन, भौतिक चीज वस्तुको संकलन र वैज्ञानिक परीक्षण, घटना प्रत्यक्ष रूपमा देख्ने, घटनाबाट पीडित, एवं शाहीरक्षकहरू लगायतका उद्धारकार्यमा संलग्न व्यक्तिहरू, उपचारकार्यमा संलग्न चिकित्सकहरू लगायतका व्यक्तिहरूसंग सोधपुछ गर्ने कार्य गरियो । यसका अतिरिक्त छानविनका क्रममा बुझिएका मानिसहरूबाट खुल्न आएको तथ्यका सन्दर्भमा बुझ्न आवश्यक देखिएका मानिसहरूसंग बुझ्ने, सोधपुछ गर्ने एवं सम्बन्धित ठाउँहरूबाट आवश्यक रेकर्ड कागजात झिकाउने समेतका कार्यहरू गरी छानविनबाट निम्न बमोजिमको तथ्य खुल्न आएको छः-

१. नारायणहिटी राजदरबारमा हरेक महिनाको तेस्रो शुक्रवार राती नियमित रूपमा पारिवारिक जमघटको आयोजना गर्ने परम्परा रहे अनुसार २०५८ जेठ १९ गते शुक्रवार पनि जमघटको आयोजना भएको पाइयो । नारायणहिटी राजदरबारको त्रिभुवन सदनमा आयोजना गरिएको सो जमघटमा श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव (यस पछि श्री ५ महाराजाधिराज भनिएको), श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवीशाह (यस पछि श्री ५ बडामहारानी भनिएको), श्री ५ मुमाबडामहारानी रत्न राज्यलक्ष्मी देवी शाह (यस पछि श्री ५ मुमा बडामहारानी भनिएको), श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाह (यस पछि श्री ५ युवराजाधिराज भनिएको), श्री ५ अधिराजकुमार नीराजन वीर विक्रम शाहका अतिरिक्त राजपरिबारका अन्य सदस्यहरू एवं शाही-नातेदारहरू गरी २४ जनालाई राती ७:३० बजे आमन्त्रण गरिएकोमा आमन्त्रितमध्ये श्री ५ अधिराजकुमारी प्रेक्षा राज्यलक्ष्मी देवी शाह, कुमार श्री मोहनबहादुर शाही र राजकुमारी विमला सिंह गरी ३ जना वाहेक अन्य सबैको उपस्थिति रहेको तथ्य श्री ५ महाराजाधिराजका प्रमुख सचिवालयको २६ जेठ २०५८ को पत्रबाट खुल्न आएको छ । आमन्त्रित पाहुनाहरूको नामावली अनुसूचीमा समावेश गरिएको छ ।

२. उल्लिखित जमघट कार्यक्रम आयोजना गरिएको स्थान श्री ५ युवराजाधिराजको खोपी रहेको वंगला त्रिभुवन सदनमा राती ७:३० बजेभन्दा अगाडिनै सर्वप्रथम श्री ५ युवराजाधिराज उपस्थित भएको तथ्य शाही पार्श्ववर्ती गजेन्द्र वोहरा समेतको भनाइबाट पुष्टि भएको छ । त्यसपछि क्रमशः आमन्त्रितहरूको आगमन भएको देखिन्छ । राती ८ बजे श्री ५ युवराजाधिराजले आफ्नो मोटरबाट श्री ५ मुमाबडामहारानी राजहुने वंगला महेन्द्र-मन्जिल सवारी भई श्री ५ मुमा बडामहारानीलाई मौसूफको मोटर आफैले चलाई जमघटस्थान त्रिभुवन सदनमा सवारी चलाइबक्सेको देखिन आयो । श्री ५ मुमा बडामहारानी विलियार्ड कोठाको पूर्वतर्फ सानो बैठक भनिने कोठामा श्री ५ अधिराजकुमारी हेलेन शाहसंग राजभइवक्स्यो । राजपरिवारका सदस्य एवं शाही नातेदारहरूको उपस्थिति भैसकेपछि अन्तमा राती करिव ८:३० बजे श्री ५ महाराजाधिराज मौसूफको अफिसबाट सिधै त्रिभुवन सदनमा पैदल सवारी भई श्री ५ मुमा वडामहारानी सरकारको दर्शन गरिबक्सी केही समयको भलाकुसारी पछि विलियार्ड कोठातर्फ सवारी भएको तथ्य घटनाक्रमका प्रत्यक्षदर्शीहरूबाट खुल्न आयो ।

३. श्री ५ युवराजाधिराजले ७:३० बजे त्रिभुवन सदनको विलियार्ड कोठामा केही समय एकलै विलियार्ड खेलिवक्सेको र त्यस क्रममा १/२ पेग निट (पानी नराखी) Famous Grouse ह्विस्की समेत पिइवक्सेको तथ्य मौसूफका एडिसी गजेन्द्र वोहरा, र शाही नातेदार महेश्वर सिंह तथा रवि शम्शेर ज.ब.रा. समेतको भनाइबाट देखियो । श्री ५ महाराजाधिराजको त्रिभुवन सदनमा सवारी हुनुभन्दा केही समय अगाडि (करिव १०-१२ मिनेटजति अगाडि) श्री ५ युवराजाधिराज शरीर थाम्न नसकी ढलपल ढलपल गरेको देखी ह्विस्कीको असरले हो कि ? भन्ने संझी श्री ५ अधिराजकुमार नीराजन, श्री ५ शाहज्यादा पारस, कुमार गोरख र डा.राजीव समेत ४ जना भई श्री ५ युवराजाधिराजलाई त्रिभुवन सदनभित्र रहेको मौसूफको खोपीमा सवारी चलाएको कुरा बुझिएका प्रत्यक्षदर्शीहरूबाट खुल्न आएको छ ।

४ श्री ५ युवराजाधिराज विलियार्ड कोठामा रहँदाकै अवस्थामा राती ८ बजेर १९ मिनेटको समयमा आफ्ना पार्श्ववर्ती गजेन्द्र वोहरालाई चुरोट ल्याउन मोवाइल फोनबाट हुकुम भएको र हुकुम भएवमोजिम गजेन्द्र वोहराले श्री ५ युवराजाधिराजका शाही अर्दली रामकृष्ण केसीलाई आदेश गरे अनुसार निजले विशेष प्रकारको (शिखर चुरोटमा गाजाँ र अर्को नाम नखुलेको कालो पदार्थ मिसाई तयार गरिएको) चुरोट विलियार्ड कोठाको पूर्व ढोकामा गई श्री ५ शाहज्यादा पारस मार्फत् जिम्मा दिइआएको भन्ने निज रामकृष्णबाट जानकारी पाइयो । गाँजा लगायतका कालो पदार्थको व्यवस्था श्री ५ युवराजाधिराजले स्वयं गर्ने गरेको, कहाँबाट ल्याएको हुन्छ भन्ने थाहा नभएको र करिव १ बर्ष देखि आफूले त्यस्तो चुरोट बनाई दिने गरेको कुरा श्री ५ युवराजाधिराजका अर्दली रामकृष्ण केसीले समितिलाई जानकारी दिए । श्री ५ युवराजाधिराजका शाही पार्श्ववर्ती गजेन्द्र वोहरा र राजु कार्की समेतबाट श्री ५ युवराजाधिराजले त्यस प्रकारको चुरोट पिउने गरिबक्सेको कुरा समिति समक्ष वताएकोले अर्दली रामकृष्ण केसीको भनाइ पुष्टि हुन आउँछ ।

५. छानविनको क्रममा केही टेलिफोनको विवरण आवश्यक भएकोले नेपाल दूरसंचार संस्थानबाट प्राप्त मोवाइल फोनको विवरण अनुसार २०५८ जेठ १९ गते राती ८:१२ बजेको समयमा श्री ५ युवराजाधिराजको मोवाइल नम्वर ९८१०२१५१३ बाट नेपाल ग्याँस उद्योगको नाममा दर्ता रही उषा राणालाई दिइएको मोवाइल नम्वर ९८१०२४३३९ मा एक मिनेट चौध सेकेण्ड (१:१४) देवयानी राणासंग कुरा भएको र दोश्रो पटक देवयानी राणाले राती ८:१९ बजे फोन नं. ०१४२३०५१ बाट श्री ५ युवराजाधिराजसंग मौसूफको मोवाइल नं. ९८१०२१५१३ मा ४ मिनेट १४ सेकेण्ड (४:१४) कुरा भएको अभिलेखबाट देखियो । पुनः राती ८:३९ बजे श्री ५ युवराजाधिराजले आफ्नो मोवाइल नं. ९८१०२१५१३ बाट देवयानी राणालाई मोवाइल नं. ९८१०२४३३९ मा :३२ सेकेण्ड कुरा गरेको तथ्य सोही विवरणबाट खुल्न आएको छ । काडमाडौं, महाराजगंज वस्ने निज देवयानी राणासंग श्री ५ युवराजाधिराजको घनिष्ट सम्बन्ध रहेको तथ्य शाही पार्श्ववर्तीहरु गजेन्द्र वोहरा र राजु कार्की तथा श्री ५ युवराजधिराजको मित्र सुप्रिया शाहको भनाइबाट खुल्न आएको छ । श्री ५ युवराजाधिराज र देवयानी राणाका बीच सम्पर्क रहेको तथ्य देवयानीका मातापिता स्वयंले समिति समक्ष सोधपुछका क्रममा उल्लेख गर्नुभयो । देवयानी राणालाई समितिले बुझ्न खोज्दा उपचारको क्रममा निज भारतमा रहेको बुझिएकाले भारतस्थित शाही नेपाली राजदूत डा. भेषबहादुर थापालाई समितिको तर्फबाट अख्तियार गरिए वमोजिम  देवयानी राणालाई बुझ्दा (निजको आवाज अंकित टेप रिकर्ड अनुसार) पनि श्री ५ युवराजाधिराज र देवयानी राणाका बीच घनिष्टता रहेको तथ्य पुष्टि भएको छ ।

६. देवयानी राणाले श्री ५ युवराजाधिराजसंगको कुरा आफ्नो व्यक्तिगत विषय भएकोले त्यसबारे वताउन  नचाहको र राती ८:२५ बजे कुरा भइरहेको समयमा श्री ५ युवराजाधिराजको स्वर लड्वराई रहेको जस्तो लागेकोले सरकारसंग अरु कुरा हुन नसकेको कारणले "श्री ५ युवराजाधिराजको स्वर अलि लड्वराइ राखेको छ अलि सञ्चो छैन कि ? भनी श्री ५ युवराजाधिराजको पार्श्ववर्ती गजेन्द्र वोहरालाई अफिसमा र राजु कार्कीलाई निजको घरमा फोन गरेर खोपीमा गई हेर्न आग्रह गरेकी हुँ" भनी उल्लेख गरेको पाइयो ।

७. देवयानी राणाले श्री ५ युवराजाधिराजको पार्श्ववर्ती गजेन्द्र वोहरालाई फोन गरेपछि र राजु कार्कीले गजेन्द्र वोहरालाई फोनबाट सो सम्बन्धी समाचार दिएपछि गजेन्द्र वोहराको आदेशानुसार श्री ५ युवराजाधिराजको अर्दली रामकृष्ण केसी र द्वारे आमा जमुना अधिकारी श्री ५ युवराजाधिराजको खोपीमा पुग्दा श्री ५ युवराजाधिराज भुइँमा पल्टिराखिवक्सेको र शरीरको माथिल्लो कपडा फुकाल्न खोजी वक्सेको देखि सो कपडा फुकाल्न निजहरूले सहयोग गरेको र कपडा फुकालीसकेपछि श्री ५ युवराजाधिराज वाथरूम सवारी होइबक्सेको, वाथरुमभित्र वाक वाक गरिवक्सेको आवाज जमुना अधिकारी समेतले सुनेको र वाथरुमबाट निस्किवक्सेपछि श्री ५ युवराजाधिराजले ती दुवैजनालाई सुत्न आ-आफ्नो कोठातिर जानूभनी  हुकुम भएको भन्ने द्वारे आमा र अर्दली रामकृष्ण केसीको कथन रहेको छ ।

८. राती ८:३९ बजे श्री ५ युवराजाधिराजले आफ्नो मोवाइल फोन नं. ९८१०२१५१३ बाट देवयानी राणालाई ९८१०२४३३९ नं. को मोवाइलमा ३२ सेकेण्ड कुरा गरिवक्सेको दूरसंचारको अभिलेखबाट देखिएकोमा सो कुरालाई देवयानी राणाले स्वीकार गरी श्री ५ युवराजाधिराज सरकारबाट "अब म सुत्न लागें",  "गुड नाईट, भोलि कुरा गरौला" भनीबक्सेको भन्ने निजको कथन रहेको छ ।

९. देवयानी राणासंग फोन सम्पर्क गरिवक्से पश्चात् श्री ५ युवराजाधिराजबाट सैनिक कम्व्याट पोशाक पहिरी हात हतियार समेत लिई खोपी वाहिर निस्किबक्सिदा श्री ५ युवराजाधिराजको अर्दली रामकृष्णले देखी श्री ५ युवराजाधिराजको वाहिर सवारी हुने रहेछ क्यार भन्ने ठानी "इमर्जेन्सी व्याग टक्रयाउँ सरकार ?" भनी जाहेर गर्दा श्री ५ युवराजाधिराजबाट "पर्दैन अहिले" भन्ने हुकुम भएको भन्ने अर्दली रामकृष्णको कथन रहेको छ ।

१०. श्री ५ युवराजाधिराज कम्व्याट सैनिक पोशाकमा दुईतर्फ राइफल र १२ वोर भिरिबक्सी विलियार्ड कोठातर्फ प्रवेश गरिवक्सेको विलियार्ड कोठासंगै जोडिएको डाइनिङ्ग कोठाको पूर्वपट्टिको बैठकबाट व्वाइज वच्चुराम केसीले देखेको भन्ने निजको कथन रहेको छ ।

११. श्री ५ युवराजाधिराज सैनिक कम्व्याट पोशाकमा विलियार्ड कोठामा प्रवेश गरिबक्सी कालो रङ्गको बन्दुक (9 mm. Caliber MP-5K Automatic Sub-machine Gun) द्वारा कोठाको सिलिङ र पश्चिम भित्तातर्फ फाएरिङ्ग गरेपछि तत्काल विलियार्ड टेवुलको पूर्व छेउमा उभिएर अरुहरूसंग कुरा गरिवक्सेको अवस्थामा श्री ५ महाराजाधिराजलाई भटटट फायर गरी पछाडि सर्दै विलियार्ड कोठा वाहिर निस्की सो कोठाको पूर्वतर्फ भित्री बगैंचाको छेउकै उत्तर तर्फ झ्याङ्ग नजिक १२ वोरको वन्दुक (SPAS 12- L FRENCH SPA)फ्याँकी पुनः भित्र विलियार्ड कोठामा प्रवेश गरी वत्ती र टेलिस्कोप सहितको राईफल (5.56mm Caliber Colt M-16 A2) सोझ्याउदै आएर भटटट पार्दै पुनः श्री ५ महाराजाधिराज एवं कुमार गोरख शम्शेर राणा, श्री धीरेन्द्र शाह र कुमार खड्गविक्रम शाह समेतलाई फाएरिङ्ग गरी पछाडि सर्दै ढोकामा पुगी पुनः अगाडि बढेर तेस्रो पटक श्री ५ अधिराजकुमारी श्रुति राज्यलक्ष्मी देवी राणा, श्री ५ अधिराजकुमारी शारदा राज्यलक्ष्मी शाह, श्री ५ अधिराजकुमारी शान्ति राज्यलक्ष्मी सिंह र श्री ५ शाहज्यादी जयन्ती शाह लगायत अन्यलाई लाग्ने गरी जथाभावी पररररर फाएरीङ्ग गरी श्री ५ युवराजाधिराज विलियार्ड कोठाबाट वाहिर पूर्वतिरको भित्री वगैंचातर्फ पछाडि सर्दै गइबक्सेको भन्ने व्यहोरा घटनास्थलमा उपस्थित श्री ५ अधिराजकुमारी शोभा, श्री ५

शाहज्यादा पारस, कुमार गोरख, केतकी चेष्टर, रवि शम्शेर , डा. राजीव शाही, महेश्वर कुमार सिंह समेतको भनाइ रहेको छ ।

१२. विलियार्ड कोठामा तेस्रो पटक अन्धाधुन्द फाएरिङ्ग गरे पश्चात् पछाडि सर्दै सर्दै पूर्व तर्फको भित्री वगैंचातिर जाँदा रातो सारी पहिरिएको महिलाको आकृतिले पनि त्यसतर्फ खेद्दै गरेको दृश्य विलियार्ड कोठासंग जोडिएको उत्तरतर्फको डाईनिङ्ग रुमबाट व्याइज शान्तबहादुर खड्का समेतले देखेको भनी निजले वताएको पाइयो । विलियार्ड कोठाबाट पूर्व भित्री बगैंचामा जाने वाटो हुँदै सो बगैंचाको उत्तर त्रिभुवन सदन खोपीतर्फ जाने बाटो र पूर्वतर्फ रहेको प्रतीक्षास्थल (सेड)मा जाने सानो वाटोको संगम जस्तो ठाउँमा श्री ५ वडामहारानीको पछाडि पछाडि श्री ५ अधिराजकुमार नीराजन सवारी भएको भन्ने श्रीमती केतकी चेष्टर समेतको भनाइ रहेको र सोही ठाउँमा रहेको नीलकाँडाको झयाङ्ग नाघी सानो चौरमा उभिएर दक्षिण मोहडा गरी उत्तरबाट दक्षिणतर्फ गोली चलेको त्यहाँ प्राप्त भएको गोलीको खोकाको स्थिति र दक्षिणतर्फको भित्तामा रहेको गोली लागेको प्वालहरू समेत घटनास्थलको अवलोकनबाट देखिएको र सो ठाउँमा नै श्री ५ अधिराजकुमार नीराजन पूर्वतर्फ टाउको परेर ढलिबक्सेको अचेत अवस्थामा देखिएको भन्ने उद्धार गर्न आएका सेनानी बिष्णु खड्का समेतले त्यहाँबाट बोकी वाहिर ल्याई मोटरमा राखी अस्पताल पुऱ्याएको भन्ने पाइयो ।

१३. विलियार्ड कोठामा भएको फाएरिङ्ग पश्चात् त्रिभुवन सदनको मूल ढोकाको दाहिने पट्टिको एडिसी अफिसको भित्री कोठामा रहेका शाही पार्श्ववर्तीहरू फाएरिङ्गको आवाज र "डाक्टर चाँडो बोलाऊँ..." भन्ने आवाज सुनी भित्र गई विलियार्ड कोठाबाट चाँडो उद्धार गर्न सो कोठाको दक्षिणतर्फको सँधै बन्द रहने गरेको ढोकाको सिसा फुटाएर शाही पार्श्ववर्ती महासेनानी सुन्दरप्रताप राना समेत भित्र प्रवेश गरी श्री ५ महाराजाधिराज सरकारलाई अचेत अवस्थामा वाहिर बोकेर ल्याई मोटरमा राखी सैनिक अस्पताल छाउनी लगेको भन्ने शाही पार्श्ववर्तीहरूको कथन रहेको देखिन्छ ।

१४. श्री ५ युवराजाधिराजको खोपीतर्फ जाने सानो पोखरीको पुलबाट उत्तर लागी माथि तलाको खोपीतर्फ जाने मुख्यद्वार हुँदै भित्री भऱ्याङ्गको सातौं खुड्किलोमा श्री ५ वडामहारानीलाई खोपीमा पुग्ने ठाउँको भऱ्याङ्गको माथिल्लो भागमा रहेको ल्याण्डिङ्ग एरियाबाट फाएरिङ्ग भई श्री ५ वडामहारानी ढलिबक्सेको भनिएको सो ठाउँमा गिदी वाहिर निस्की छरपष्ट भएको, केही दाँत र वंगाराहरू समेत झरी छरिएर यत्रतत्र रहेको, रातो टीका, दुईवटा कानको रातो टप, रातो चुराको टुक्राहरू रहेको, रगतको छिर्काहरू ठाउँ ठाउँमा लागेको एक किसिमको रगतको खोलै वगेको स्थिति घटनास्थलको अवलोकनबाट देखिएको छ ।

१५. श्री ५ युवराजाधिराज राज हुने त्रिभुवन सदन (जँहा श्री ५ युवराजाधिराजको खोपी छ) अगाडिको बगैंचाको स-साना पोखरीको सानो पुलको दक्षिण भागमा उत्तानो पल्टी घ्वार घ्वार आवाज निकाली रहेको अवस्थामा श्री ५ युवराजाधिराजलाई भेटिएको भनी उद्धारकर्मी सेनानी विष्णु खड्का एवं शाही पार्श्ववर्ती समेतले समिति समक्ष जानकारी गराएको देखिन्छ । श्री ५ युवराजाधिराजको साथमा रहने गरेको भनिएको 9mm. Caliber Glock Ges. पिस्तोल र खोका समेत पूर्वपट्टिको पोखरीको पानीमा रहेको घटनास्थलको अवलोकन गर्दा पाइएको छ । 5.56 Caliber M-16 A2 राइफल पनि सोही स्थानको पश्चिमपट्टि रहेको सानो चौरमा रहेको घटनास्थल अवलोकनको क्रममा पाइएको छ ।

१६. उपर्युक्त बमोजिमको विलियार्ड कोठा र सो कोठाको पूर्वी वगैंचा एवं खोपीमा जाने भऱ्याङ्गमा भएको घटना पश्चात् शाही पार्श्ववर्तीहरू एवं अन्य सुरक्षाकर्मीहरूले उद्धार गरी श्री वीरेन्द्र सैनिक अस्पताल छाउनीमा पुऱ्याएकोमा अस्पताल पुऱ्याउँदाको समय र अवस्थाको सम्बन्धमा यस समितिमा देहाय बमोजिमको जानकारी प्राप्त भएको देखिन्छ:-

(क) श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव राती ९:१५ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(ख) श्री ५ बडामहारानी ऐश्वर्य राज्यलक्ष्मी देवी शाह राती ९:१५ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(ग) श्री ५ अधिराजकुमार नीराजन वीर विक्रम शाह राती ९:१५ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(घ) श्री ५ अधिराजकुमारी श्रुति राज्यलक्ष्मीदेवी राणा राती ९:२० बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याएको र ९:५५ बजे अस्पतालमा मृत घोषित ।
(ङ) श्री ५ अधिराजकुमारी शान्ति राज्यलक्ष्मी देवी सिंह राती ९:३५ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(च) श्री ५ अधिराजकुमारी शारदा राज्यलक्ष्मी देवी शाह राती ९:३० बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(छ) श्री ५ शाहज्यादी जयन्ती राज्यलक्ष्मी शाह राती ९:३० बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(ज) श्री कुमार खड्गविक्रम शाह राती ९:३५ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याउँदा मृत घोषित ।
(झ) श्री ५ युवराजाधिराज दीपेन्द्र वीर विक्रम शाह २०५८/२/१९ राती ९:२४ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याएको र २०५८/२/२२ गते सोही अस्पतालमा विहान ३:४५ बजे मृत घोषित ।
(ञ) श्री धीरेन्द्र शाह २०५८/२/१९ राती ९:२४ बजे वीरेन्द्र सैनिक अस्पताल पुऱ्याएको र २०५८/२/२२ गते वेलुकी ५:५७ बजे सोही अस्पतालमा मृत घोषित ।

१७. माथि उल्लेख गरिएका १० (दश) जना वाहेक सो घटनामा परी अन्य कोही कसैको मृत्यु भएको भन्ने कहीं कतैबाट खुल्न आएको देखिएन ।

१८. घटनाबाट पीडित घाइतेहरू वर्तमान श्री ५ बडामहारानी कोमल राज्यलक्ष्मी देवी शाह, श्री ५ अधिराजकुमारी शोभा राज्यलक्ष्मी शाही, कुमार गोरख शम्शेर ज.ब.रा. र श्रीमती केतकी चेष्टरलाई गम्भीर घा चोट लागेको तथ्य अस्पतालबाट प्राप्त घा चोट विवरणबाट देखिन्छ ।

१९. श्री ५ युवराजाधिराजलाई घटनाको तत्काल पछि उपचारका लागि वीरेन्द्र सैनिक अस्पताल छाउनी लगिएकोमा सो अस्पतालबाट प्राप्त २०५८/२/२८ को पत्र अनुसार कालो आर्मी बुट, आर्मीको क्याम्पफलाईज (कम्व्याट) ज्याकेट, पाईण्ट, छालाको कालो पञ्जा, कालो मोजा र क्याम्पफलाईज भेष्ट लगाएको अवस्थामा रहिबक्सेको उल्लेख भएको छ । सो कपडा, पञ्जा, जुत्ता आदि र वेब बेल्ट समेत समितिले झिकाई अवलोकन गरेको र सोमा लागेको रगत र पहेंलो पहेँलो पदार्थको प्रयोगशालामा परीक्षण गराउँदा "B" समूहको रगत भन्ने विशेषज्ञको राय प्राप्त भएको छ। मृतकहरू मध्ये श्री ५ बडामहारानी तथा श्री ५ युवराजाधिराजको रगत समूह पनि "B" रहेको पाइन्छ ।

२०. श्री ५ युवराजाधिराजलाई उपचारका लागि अस्पताल पुऱ्याउदा पञ्जा लगाएको अवस्थामा पुऱ्याईएको अस्पतालको पत्र प्राप्त हुन आएको छ। सो पञ्जा पनि समितिलाई उपलब्ध गराइएको छ । सो एकजोर पञ्जा वाहेक घटनास्थल एवं अस्पताल समेतबाट अन्य कुनै पञ्जा प्राप्त हुन सकेको देखिदैन ।

२१.

(क) 5.56 Caliber Colt M-16 A2 हतियार नं. A0073943 (Commando) Automatic Rifle बाट प्रहार भएका ४७ वटा Cartridge Cases फेला परेको पाइयो । उक्त राईफलको क्षमता प्रति मिनेट ७०० देखि १००० गोली फायर हुन सक्ने भन्ने विशेषज्ञको रायबाट देखिन्छ ।

(ख) घटनास्थलमा रहेका २९ वटा Cartridge Cases 9mm. Caliber MP-5 K Automatic Sub-machine Gunबाट प्रहार भएको र उक्त वन्दुकको क्षमता प्रति मिनेट ९०० सम्म गोली फायर हुन सक्ने भन्ने विशेषज्ञको रायबाट देखिन्छ ।

(ग) घटनास्थलमा फेला परेको २ वटा Cartridge Cases 9mm. Caliber MP-5 K Automatic Ges.m.b.H Pistol बाट प्रहार भएको भन्ने विशेषज्ञको रायबाट देखिएको छ । उक्त Cartridge श्री ५ युवराजाधिराजलाई उद्धारकर्मीहरूले घाइते अवस्थामा फेला पारेको भनिएको सानो पुल छेउमा रहेको पोखरीमा फेला परेको थियो ।

(घ) उपरोक्त प्रकरण (क) मा उल्लेख भएको A0073943 नं.को M-16 वन्दुक शाही रक्षक सैनिक प्रहरी राजदरबारको ०५६/५/३१ को माग बमोजिम निकाशी भई शाही नेपाली सेनाको हतियार भण्डारबाट बुझिलिई राजदरबार कोतखानामा बुझाएको भनी समितिको कार्यालयमा सह-सेनानी माधव भण्डारीले बताएको। सो हतियार श्री ५ युवराजधिराज समेत ट्रेकिङ्गमा सवारी भैबक्सेको बेला साथमा लिइ सवारी भएको। श्री ५ युवराजाधिराज सरकारले चाहिबक्सेको बेलामा राजदरबार कोतबाट सिधै पनि हतियार लिने प्रचलन रहेको व्यहोरा श्री ५ युवराजाधिराजका पार्श्ववर्ती गजेन्द्र बोहराले सोधपुछको क्रममा उल्लेख गरेको समेत पाइयो ।

(ङ) एउटा पेस्तोल र 9mm. Caliber को वन्दुक १ समेत शाही पार्श्ववर्ती राजदरबारबाट माग भए बमोजिम २०५३/१/२७ र २०५६/७/२८ मा निकाशा भएको देखिन्छ । श्री ५ युवराजाधिराजका अंगरक्षक गजेन्द्र वोहराको अनुसार उक्त हतियारहरू श्री ५ युवराजाधिराज कै साथमा (जिम्मामा) रहेको थियो ।

(च) 9mm. G19 Glock नं. YY 334 नं. को पेस्तोल समेत २०५५/१०/२२ मा श्री ५ अधिराजकुमार नीराजनका वाहुलीमा दाखिला हुने गरी कोतबाट निकाशा भएको राजदरबारबाट प्राप्त विवरणबाट देखिन्छ ।

(छ) विलियार्ड कोठामा फेला परेको 9mm. Caliber Glock पेस्तोल र Lawn को दक्षिण पश्चिम बाटो छेउ कुनामा फेला परेको १२ Bore Single Barrel Shot Gunबाट सो घटनामा Fire भएको भन्ने विशेषज्ञको राय एवं फेला परेका कारतुस समेतबाट देखिन आएन ।

२२. नारायणहिटी राजदरबार त्रिभुवन सदनभित्र एडिसीको कार्यालय रहेको मूल प्रवेशद्वार र पूर्वतर्फको सानो वन्द रहेको सानो गेट वाहेक सो घटनाभएको स्थानमा प्रवेश गर्ने अन्य मार्ग घटनास्थलको अवलोकनबाट प्रत्यक्षतः देखिन आएन । घटनास्थलको नक्सा स्केच यसै प्रतिवेदनको अनुसूचीमा दिइएको छ ।

२३. २०५८ जेठ १९ गते शुक्रवार नारायणहिटी राजदरबारमा घटेको घटनामा परी मृतक हुने सबैको मृत्युको कारण वन्दुकको गोली लागेको कारणबाट भएको कुरा वीरेन्द्र सैनिक अस्पताल छाउनीका सम्बन्धित चिकित्सकहरूको राय समेतबाट देखिएको छ । घटनाबाट पीडित घाइतेहरूको घा चोट समेत गोली लागेको कारणबाट भएको कुरा स्वयम् घाइतेहरूले सोधपुछका क्रममा

उल्लेख गरेको पाइयो । वीरेन्द्र सैनिक अस्पतालबाट प्राप्त जानकारी अनुसार पनि घाइतेहरूको घा चोटको कारण बन्दुकको गोली लागी परेको भन्ने देखियो ।

***